जुन व्यक्तिको कर्कराशिको बुध लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यको शक्ति र परिश्रमद्वारा व्यापारमा निकै उन्नति पाउने भएको र व्यापारको दैनिक कार्य व्यवस्थामा भाग्य स्थिति उत्तम पाउनेवाला तथा भाग्यमानीमा गनिने खालको र गृहस्थी भित्र केही सामान्य विघ्नबाधाको साथसाथै खूब आनन्द र सफलता प्राप्त गर्ने भएको, स्त्रीको पक्षमा भाग्यमानी तथा केही सामान्य झ्याउलो पाउने खालको, स्त्रीद्वारा केही धार्मिक व्यवस्था पाउने भएको, व्यापारको श्रेणीमा केही बांगा लौकिक र अलौकिक विवेक शक्तिद्वारा काम गर्ने, सामान्य धर्मको पालन गर्ने खालको व्यक्ति होला।

कु० नं० ११५७

११ ९
१२ १० ८
१ ७
२ ४बु. ६
३ ५

जुन व्यक्तिको सिंहराशिको बुध लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस भाग्यमा दुर्बलता पाउने भएको अनि भाग्योन्नतिका लागि ठूला-ठूला कष्ट-बाधाहरू सहन गर्ने भएको, धर्मको पक्षमा निकै ठूलो दुर्बलता सहने खालको, सुयश र प्रभावमा पनि दुर्बलता पाउनेवाला, पुरासंचित अर्थात् पूर्व संचित नासोबाट वा पैतृक सम्पत्तिबाट लाभ पाउनेवाला, अनुचित मार्गबाट भाग्यवृद्धिको साधन उत्पन्न गर्ने तथा मावली पक्षबाट दुर्बलता पाउने र धनको वृद्धि गर्नका लागि अनेक युक्तिहरू साधन विवेक शक्ति र परिश्रमबाट पाउनेवाला, राम्रो आयु हुने स्वार्थी व्यक्ति होला।

कु० नं० ११५८

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५बु.

जुन व्यक्तिको कन्याराशिको बुध लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यशाली र विवेकका बांगा युक्तिहरूद्वारा महान् लाभ प्राप्त गर्नेवाला, धर्मको बाहिरी अङ्गको उत्तम पालन गर्नेवाला, सत्वगुणी कर्मको आडमा रजोगुणी कर्मद्वारा भाग्यको वृद्धि पाउने भएको अर्थात् गुप्तशक्ति द्वारा निकै सज्जनताको ढङ्गले अनुचित लाभ प्राप्त गर्ने भएको निकै मान र सत्कार पाउनेवाला, ठूलो प्रभाव पाउने र पुरुषार्थमा न्यूनता पाउने भएको, दाजु-भाइसित विरोध पाउने खालको, विवेकको उच्चतम ज्ञान र परिश्रमले भाग्यशक्तिद्वारा उन्नतिमा पुग्ने भएको महान् बाठो व्यक्ति होला।

कु० नं० ११५९

११ ९
१२ १० ८
१ ७
२ ४ ६बु.
३ ५

जुन व्यक्तिको तुलाराशिको बुध लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो प्रभाव पाउने खालको, धर्मको स्वार्थयुक्त पालन गर्नेवाला, विवेक र परिश्रमबाट उत्तम कर्मद्वारा व्यापार आदिमा उन्नति गर्ने भएको, महान् चातुर्यको योगबाट मान-सम्मान वृद्धि पाउने भएको, भाग्य शक्तिद्वारा उन्नतिको साधन मार्ग-स्वतः प्राप्त गर्नेवाला, मातृपक्षबाट र मावली पक्षबाट पनि शक्तिका साधनहरू पाउने भएको, पिताको शक्तिबाट लाभ पाउने भएको तर पिताको स्थानमा केही न्यूनताको योग पाउनेवाला, उन्नतिका लागि केही गुप्त युक्तिहरूबाट पनि काम सिद्ध पार्नेवाला, राज सम्बन्धबाट विशेष लाभ पाउनेवाला, माननीय र भाग्यशाली होला।

कु० नं० ११६०

११ ९
१२ १० ८
१ ७बु.
२ ४ ६
३ ५

जुन व्यक्तिको वृश्चिक राशिको बुध लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस भाग्यको शक्तिले र विवेक युक्त परिश्रमबाट खूब लाभ कमाउने भएको र धार्मिक लाभको योग पनि प्राप्त गर्नेवाला र चातुर्य तथा परिश्रमका लाभ प्राप्तिका कारणहरूबाट भाग्यमानी प्राप्त गर्ने खालको र आमदानीको स्थानमा अधिकांश निस्फिक्री पाउनेवाला, विद्या र बुद्धिको उत्तम योग पाउने भएको र धर्मको स्थानमा स्वार्थको बर्ता ध्यान-विचार राख्ने भएको अनि मावली पक्षबाट केही फाइदा प्राप्त गर्ने भएको, उत्तम विवेकको अन्तर्गत केही बांगा चालहरूबाट पनि आंशिक लाभ कमाउने खालको, शत्रुपक्षबाट लाभयुक्त रहने भएको र निकै प्रभावशाली व्यक्ति होला।

कु० नं० ११६१

११ ९ १२ १० ८बु. १ ७ २ ४ ६ ३ ५

जुन व्यक्तिको धनुराशिको बुध लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस धर्मस्थानमा हानि पाउने भएको तथा भाग्यस्थानमा पनि हानि पाउने खालको, बढी धन व्यय गर्नेवाला, सुयशमा न्यूनता पाउने भएको तथा मावलीबाट न्यूनता पाउनेवाला, तथा भाग्योन्नतिको निम्ति निकै कष्ट-बाधा र विलम्ब आदिको साधन भेट्टाउनेवाला, भाग्यको दुर्बलताले गर्दा विवाद र झंझटहरूको योग पाउने भएको, चातुर्यहरूको योगले प्रभाव कायम राख्न निकै बलियो प्रयत्न गर्ने खालको व्यक्ति होला।

कु० नं० ११६२

११ ९बु. १२ १० ८ १ ७ २ ४ ६ ३ ५

# मकर लग्नान्तर-गुरुफलम्

जुन व्यक्तिको मकरराशिको गुरु लग्नको प्रथम स्थानमा छ भने त्यो मानिस शरीर दुर्बलता र कष्ट सहने भएको, खर्चको कमी र कष्ट सहन गर्ने, दाजु-भाइ दिदी-बहिनीको पक्षमा दुर्बलता पाउनेवाला, शरीरको सौन्दर्यमा कमी पाउने भएको तथा शरीरको पुड्को कदले चिन्तित रहनेवाला, अन्य स्थानको अनुचित र नाजायज थिचाई पाउने भएको, कुनै प्रकारले परतन्त्रताको झैं योग पाउने भएको, स्त्री स्थानमा केही प्रसन्नता पाउने खालको, व्यापारमा उन्नति गर्नेवाला, बुद्धिमा केही शक्ति पाउने किसिमको अनि भाग्यमा केही वृद्धि पाउनेवाला र सन्तान पक्षमा केही शक्ति र आंशिक कमी अनुभव गर्ने खालको होला।

कु० नं० ११६३

११　९
१२　१०गु.　८
१　७
२　४　६
३　५

जुन व्यक्तिको कुम्भराशिको गुरु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनस्थानमा केही हानि र कमी पाउने भएको तथा बाहिरी अन्य स्थानबाट केही धन प्राप्त गर्ने भएको, दाजु-भाइको पक्षमा केही बन्धन र कमी पाउने भएको तथा बल पुरुषार्थमा केही कमी र केही परतन्त्रता पाउने भएको र प्रभाव पाउनेवाला अनि मान उन्नतिको लागि धेरै-धेरै कर्म गर्ने खालको तथा पिता स्थानमा केही हानि-लाभको योग भेट्टाउने भएको, धन वृद्धिका लागि अनेकानेक प्रयत्न र यता-उता दगुरा-दगुर गर्दै रहेर पनि इच्छित सफलता पाउन नसक्ने तथा जीवनमा केही इज्जत पाउने अनि कुटुम्ब स्थानमा केही कमी पाउने खालको होला।

कु० नं० ११६४

११गु.　९
१२　१०　८
१　७
२　४　६
३　५

जुन व्यक्तिको मीन राशिको गुरू लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस अन्य स्थानको भरथेग पाएर निकै काम गर्नेवाला र धेरै धन व्यय गर्ने, खर्च बलले नै शक्ति पाउने भएको, बल पुरुषार्थमा बढी बल र दुर्बलता दुवैको सम्मिश्रण योग पाउने र अन्य स्थानको सम्पर्कमा शक्ति पाएपछि पनि केही स्वतन्त्रतामा कमी अनुभव गर्ने भएको, पुरुषार्थ परिश्रमबाट धेरै लाभ पाउने खालको, गृहस्थी र व्यापारको सम्बन्धमा उत्साह र उन्नति पाउने भएको, भोग प्राप्त गर्ने विशेष इच्छा राख्ने भएको, दाजु-भाइको सम्बन्धमा कमी पाउने खालको होला।

कु० नं० ११६५

जुन व्यक्तिको मेष राशिको गुरु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस शानदार खर्च गर्नेवाला र सुखपूर्वक खर्च संचालन शक्ति पाउनेवाला र भवन-भूमि आदिको शक्ति पाएर पनि भवन-भूमिबाट केही हानि वा दुर्बलता पाउने भएको तथा आमाको हानि पाउनेवाला, केही दाजु-भाईको हानि पाउनेवाला, अर्काको सहयोगबाट घर बसी-बसी लाभ पाउने भएको र पुरातत्त्वको, केही विरोध वैमनस्यता र दुर्बलताहरूका साथै शक्ति पाउनेवाला, सुख शान्तिमा आंशिक बाधा पाउने खालको र खर्चको वृद्धिलाई रोक्नमा असमर्थ रहने खालको र त्यसै कारणले गर्दा केही अशान्ति अनुभव गर्ने खालको होला।

कु० नं० ११६६

जुन व्यक्तिको वृषराशिको गुरु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धि र विवेकद्वारा परिश्रम गरेर खर्च चलाउने खालको र विद्यामा कमी पाउने भएको, सन्तान पक्षमा हानि पाउनेवाला तथा केही शक्ति पनि पाउने भएको, दाजु-भाइको पक्षमा केही अपूर्ण शक्ति पाउने भएको र अन्य स्थानहरूको सम्पर्क र बुद्धि द्वारा परिश्रम गरेर भाग्यको वृद्धिका लागि बराबर प्रयत्न गरिरहने खालको र शरीरमा दुर्बलता तथा सुन्दरताको न्यूनता पाउनेवाला अनि खर्च शक्तिका कारणहरूले गर्दा हृदयमा अशान्ति अनुभव गर्ने भएको र बढी कुरा गर्ने बाठो व्यक्ति होला।

कु० नं० ११६७

११ ९
१२ १० ८
१ ७
२गु. ४ ६
३ ५

जुन व्यक्तिको मिथुनराशिको गुरू लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस खर्चको सम्बन्धमा विघ्नबाधा र परतन्त्रताको योग पाउने भएको र दाजु-भाइको सम्बन्धमा केही कमी र विरोध पाउनेवाला, प्रभावमा न्यूनता पाउने भएको, पिता स्थानमा केही विरोध भावनाहरू द्वारा हानि-लाभको सम्मिश्रण योग पाउने भएको र विशेष उन्नतिका लागि तथा मान-सम्मान प्राप्त गर्नका लागि बढी प्रयत्न गर्दै रहनेवाला, धन-संग्रहको पक्षमा कमी अनुभव गर्ने खालको र स्वतन्त्रतामा बाधा पाउने भएको र प्रभावमा केही कमी अनुभव गर्ने खालको र आफ्नासित शत्रुता गर्नेवाला र गुप्त युक्तिहरूद्वारा आफ्नू काम सिद्ध पार्न जान्ने भएको, केही अल्छी स्वभावको व्यक्ति होला।

कु० नं० ११६८

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३गु. ५

जुन व्यक्तिको कर्कराशिको गुरु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस व्यापारको पंक्तिमा महान् पुरुषार्थद्वारा काम गर्ने भएको र व्यापारबाट महान् शक्ति पाउने खालको तथा अन्य स्थानको सम्पर्कबाट खूब व्यापार गर्ने भएको र बढी धन खर्च गर्ने खालको, स्त्री-सम्बन्धित विशेष भोगादि सुख प्राप्त गर्ने भएको, लौकिक कार्यहरूमा विशेष शक्ति राख्ने खालको, शरीरमा दुर्बलता र अशान्ति पाउनेवाला, खूब लाभ कमाउने खालको अनि बर्ता परिश्रमले गर्दा शरीरमा थकाई बढी पाउनेवाला र नित्य प्रगतिको व्यापारमा, महान् उत्तेजना र स्फूर्तिले आफ्नू कार्य संचालन गर्न जान्ने भएको, दाजु-भाइ दिदी-बहिनीको सम्पर्क पाउने खालको बाठो व्यक्ति होला।

कु० नं० ११६९

११ ९
१२ १० ८
१ ७
२ ४गु. ६
३ ५

जुन व्यक्तिको सिंह राशिको गुरु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू बल-पुरुषार्थ दुर्बलता पाउने भएको र खर्चको सम्बन्धमा विघ्न-बाधा सहनै परे पनि बढी खर्च गर्ने भएको तथा खर्च-शक्तिलाई केही विदेश आदिको योगले, परिश्रम र युक्तिहरूद्वारा प्राप्त गर्ने खालको अनि दाजु-भाइको सम्बन्धमा न्यूनता पाउने भएको, सुखको वृद्धि गर्नका लागि विशेष प्रयत्न गर्दै रहनेवाला,धन संग्रको स्थानमा केही कमी अनुभव गर्ने भएको तथा पुरातत्त्वको सम्बन्धमा स्थान-स्थानबाट शक्ति प्राप्त गर्ने खालको र जीवनको दैनिक दिनचर्यालाई केही प्रभाव 'म ठूलो' भन्ने ढङ्गले व्यतीत गर्ने खालको होला।

कु० नं० ११७०

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५गु.

जुन व्यक्तिको कन्या राशिको गुरु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यमा केही दुर्बलता पाउने भएको, दाजु-भाइको सहयोग अलि न्यूनताले पाउनेवाला, पुरुषार्थद्वारा धर्म र भाग्यका केही वृद्धि गर्ने खालको, आफ्नू हृदयमा कमजोरी भएर पनि हिम्मत र साहसले उदासीनताद्वारा काम सिद्ध पार्ने भएको र शरीरमा सौन्दर्य र स्वास्थ्यको केही कमी पाउने खालको, लौकिक बुद्धिले केही हानि पाउनेवाला, पारलौकिक कार्यहरूमा केही दुर्बलता पाउने भएको र हृदयको बलद्वारा केही धार्मिक ज्ञान प्राप्त गर्ने खालको र पुरुषार्थ बलको वृद्धि हुने साधनमा विशेष ध्यान राख्ने खालको होला।

कु० नं० ११७१

११ ९ १२ १० ८ १ ७ २ ४ ६गु. ३ ५

जुन व्यक्तिको तुला राशिको गुरु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिताको स्थानमा केही हानि पाउने भएको, व्यापार र मान-प्रतिष्ठाको सम्बन्धमा आंशिक न्यूनता वा हानि पाउने भएको, उन्नतिका लागि विशेष प्रयत्न गर्दै रहे पनि सफलतामा कमी पाउने खालको, दाजु-भाइको सम्बन्धमा केही नीरसता पाउने भएको, बढी खर्च गर्ने र प्रभाव वृद्धिका लागि भित्री हृदयबाट कोशिश गर्ने खालको, अन्य स्थानको सम्पर्क शक्तिको साधारण तथा उत्तम लाभ पाउने भएको र सुख प्राप्तिका लागि खर्च र मिहिनेतको तागतले आफ्नू काम सिद्ध पार्न जान्ने भएको, धनको केही कमी र केही हानि पाउने खालको

कु० नं० ११७२

११ ९ १२ १० ८ १ ७गु. २ ४ ६ ३ ५

जुन व्यक्तिको वृश्चिक राशिको गुरु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नू पुरुषार्थबाट र खर्चको योगले परिश्रम गरेर केही विशेष लाभ पाउने भएको र आफ्नू आमदानीको माध्यमबाट पुरुषार्थ शक्तिको वृद्धि गर्ने भएको किन्तु बल वृद्धि र लाभको सम्बन्धमा केही दुर्बलताको पनि योग अनुभव गर्नेवाला र अन्यान्य स्थानको सम्बन्धमा 'बडप्पन' को साथै फाइदा पाउनेवाला, केही न्यूनताको साथै दाजु-भाइ दिदी-बहिनीको लाभ पाउनेवाला अनि राम्री स्त्री पाउने भएको तथा स्त्री जातको सुन्दरतामा हृदयको भित्र बढी ध्यान राख्ने भएको, व्यापारमा बढी उन्नति र दगुरा-दगुर गरेर चमत्कार उत्पन्न गर्ने खालको, विद्या तथा सन्तान पक्षको कुनै पनि भागमा नीरसता पाउने भएको, बाहिरी सम्बन्धबाट स्फूर्ति पाउनेवाला होगा।

कु० नं० ११७३

११ ९ १२ १० ८गु. १ ७ २ ४ ६ ३ ५

जुन व्यक्तिको धनुराशिको गुरु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी खर्च गर्ने भएको र केही परतन्त्रता पाउनेवाला, मातृपक्षमा र पुरुषार्थमा दुर्बलता पाउने खालको, दाजु-भाईको स्थानमा न्यूनता पाउने भएको र सुख प्राप्त गर्नका लागि प्रभाव वृद्धिको पनि ध्यान राख्ने र सदैव अर्काको सहाराले शक्ति पाउने भएको, आफ्नू दैनिक दिनचर्यालाई प्रभावी तुल्याउनको निम्ति बढी खर्च र उपाय गर्ने खालको र गूढ युक्तिहरूलाई व्यवहारमा ल्याउने भएको र खर्चको शक्तिलाई अनेक उपाय गर्दा पनि घटाउन नसक्ने खालको र खूब डुल-फिर गर्ने अर्थात् भ्रमणशील अनि केही अशान्त हृदयको होला।

कु० नं० ११७४

११ ९गु. १२ १० ८ १ ७ २ ४ ६ ३ ५

## मकर लग्नान्तर-शुक्रफलम्

जुन व्यक्तिको मकरराशिको शुक्र लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस निकै प्रतिष्ठित, धेरै बाठो, बुद्धिमान तथा उच्च र उत्तम कार्य गर्ने भएको र ठूलो व्यापार गर्ने खालको तथा विद्या बुद्धिको धेरै ठूलो काम गर्ने खालको र धेरै मान-सम्मान पाउनेवाला, पिताको शक्तिबाट लाभ पाउने तथा राजकाजबाट फाइदा पाउने भएको, जन-समाजमा इज्जत र महानता पाउनेवाला, अनेक व्यापार अनेकौं प्रकारले निकै ठूलो चातुर्यका साथै चलाउन जान्ने खालको र स्त्री सुख भोग्ने भएको अनि सन्तान-सुख प्राप्त गर्ने भएको, सौन्दर्य र कलालाई बढी मनपराउने भएको, ज्योतिषसित प्रेम सम्पर्क राख्ने खालको होला।

कु० नं० ११७५

११ ९ १२ १०शु. ८ १ ७ २ ४ ६ ३ ५

जुन व्यक्तिको कुम्भ राशिको शुक्र लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धेरै धन जम्मा गर्ने भएको, पिता स्थानबाट धन शक्तिको भर-थेग पाउने खालको र बुद्धि विद्याद्वारा निकै चातुर्यले प्रसस्त धन-धान्य कमाउने भएको तथा ठूलो कारबार चलाउनेवाला र सन्तान पक्षमा केही बन्धन वा केही भाग्यवान अनुभव गर्ने खालको तथा कुटुम्बको वैभव पाउने भएको र राज-समाजबाट फाइदा प्राप्त गर्ने खालको र धन वृद्धि गर्नका लागि विशेष युक्तिहरूबाट महान् कार्य गर्ने खालको, पुरातत्त्वको लाभ पाउने भएको, जीवनको दिनचर्यामा केही उन्नति र मान-प्रतिष्ठा पाएर पनि केही कमी अनुभव गर्ने खालको व्यक्ति होला।

कु० नं० ११७६

११श. ९ १२ १० ८ १ ७ २ ४ ६ ३ ५

जुन व्यक्तिको मीन राशिको शुक्र लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस प्रभावशाली तथा राम्रो गठन परेको देह भएको, धेरै दाजु-भाइ दिदी-बहिनी भएको, सन्तान शक्ति पाउनेवाला, बर्ता विद्या र बुद्धि भएको, धाक लगाएर कुराकानी गर्ने भएको र निकै प्रभावशाली काम गर्ने खालको र पिताको स्थानमा केही अधिकता र केही न्यूनताको योग भएको, राज-काजबाट फाइदा र मान-सम्मान पाउनेवाला र धर्ममा हानि पाउने खालको तथा भाग्यको वृद्धिमा कमी पाउने भएको र यशमा पनि न्यूनता पाउनेवाला आफ्नू मस्ती वा अभिमानमा चूर रहनेवाला, अन्यान्यमा आफ्नू प्रभाव जमाउन जान्ने, ठूलो पुरुषार्थी, बढी बाठो कलाकार होला।

कु० नं० ११७७

११ ९
१२ शु. १० ८
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको मेष राशिको शुक्र लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस धेरै सुख पाउने भएको अनि ठूलो व्यापार गर्ने भएको तथा माता-पिताको सुख ऐश्वर्य प्राप्त गर्ने भएको अनि सन्तान सुख निकै पाउने खालको तथा विद्या प्राप्त गर्ने भएको, भवन-भूमिको स्वामी, राज-समाजबाट सुख पाउनेवाला, मान-सम्मानमा वृद्धि पाउने भएको, राजसी विद्याको ज्ञानबाट उन्नति पाउने खालको र महान् चातुर्यद्वारा सरलतापूर्वक फाइदा पाउने भएको, सौन्दर्य तथा कलालाई मनपराउनेवाला, आफ्नू प्रभावले काम गर्नेवाला, शान्ति र गौरव प्राप्त गर्ने भएको, शोभायुक्त र प्रतिष्ठित व्यक्ति होला।

कु० नं० ११७८

११ ९
१२ १० ८
१शु. ७
२ ४ ६
३ ५

जुन व्यक्तिको वृषराशिको शुक्र लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस अनेक विद्याहरूको ज्ञान प्राप्त गर्ने भएको, राजनीतिक ज्ञानको बर्ता

कु० नं० ११७९

११ ९
१२ १० ८
१ ७
२शु. ४ ६
३ ५

शक्ति पाउने खालको र सन्तान शक्तिको बर्ता सहारा पाउनेवाला, बुद्धिबाट धेरै मान-इज्जत तथा उन्नति पाउने भएको, पिताको शक्ति पाउनेवाला, बर्ता धन कमाउने र निकै शान अभिमानले कुराकानी गर्नेवाला, ठूलो इज्जत र मान-सम्मान पाउनेवाला, राज-समाजबाट फाइदा पाउने भएको, बुद्धिको शक्तिद्वारा निकै ठूलो प्रभाव पाउनेवाला र शृङ्गार सौन्दर्य तथा मादकता मनपराउने भएको र तत्काल उत्तर दिन सक्ने 'हाजिर जवाब' हुन्छ।

जुन व्यक्तिको मिथुनराशिको शुक्र लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा अलि वैमनस्यता पाउने भएको, सन्तान पक्षमा केही

कु० नं० ११८०

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३शु. ५

कष्ट अनुभव गर्ने भएको, विद्याको प्रभाव पाउनेवाला, बढी धन खर्च गर्नेवाला र केही परतन्त्रता पाउने भएको अनि अनेक बांगा प्रकारले कुराकानी गर्ने भएको, निकै ठूलो र बांगा चालहरू चल्ने गहीरो ज्ञान भएको र बुद्धिको गुप्त युक्तिहरूद्वारा शत्रुलाई न्यूराउन सक्ने खालको र रोग एवं कष्ट-बाधामा नआत्तिने भएको र झ्याउलाहरूबाट नै राम्रो प्रभाव पाउने भएको, मावली पक्षबाट केही शक्ति पाउनेवाला, तन्त्र-विद्याको युक्ति र शक्ति भएको निकै बाठो होला।

जुन व्यक्तिको कर्कराशिको शुक्र लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस ठूलो शक्तिको व्यापार गर्ने भएको, व्यापारमा अभिमान राख्ने खालको र राजनैतिक व्यापारमा सफलता पाउनेवाला, व्यवसाय वृद्धिको योग्यताको कार्य निकै ठूलो चातुर्यबाट विद्याद्वारा पूर्ण गर्न सक्ने र सन्तान-शक्ति पाउने खालको तथा पिताको शक्ति पाउनेवाला गृहस्थीको शानको आनन्द अनुभव गर्ने खालको र ठूलो मान-सम्मान पाउने भएको, लौकिक कार्यहरूमा बढी दक्षता राख्नेवाला, राज समाजको कार्य निकै बुद्धिमानी र दैहिक परिश्रमद्वारा गर्ने खालको र स्त्री तथा भोगादि सुखहरू प्राप्त गर्ने भएको, निकै कार्य प्रवीण व्यक्ति होला।

कु० नं० ११८१

११ ९
१२ १० ८
१ ७
२ ४शु. ६
३ ५

जुन व्यक्तिको सिंह राशिको शुक्र लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस पिताको हानि पाउनेवाला र पुत्रको कष्ट पाउने भएको अनि विद्यामा न्यूनता पाउने खालको र गूढ ज्ञानको पालन गर्ने खालको तथा भेद बुद्धिद्वारा काम गर्न जान्नेवाला, गुप्त कुरा बर्ता गर्नेवाला, राजसमाजमा मान-प्रतिष्ठा पाउने भएको, बुद्धि र चातुर्यले थकित हुने कर्मलाई गर्दै रहने भएको तथा व्यापारादि उन्नतिको मार्गमा केही न्यूनताहरूको कारण अनुभव गर्नेवाला तर धनको वृद्धितिर बढी ध्यान राख्ने भएको, पुरातत्त्वको केही शक्ति पाउने खालको, अत्यन्त कूटनीतिको पालन गर्नेवाला, बुद्धिमा परेशान रहने खालको होला।

कु० नं० ११८२

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५शु.

जुन व्यक्तिको कन्याराशिको शुक्र लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यस्थानमा केही न्यूनता पाउनेवाला, पिता पुत्रको तर्फबाट केही कमजोरी पाउनेवाला भए पनि पिता पुत्रको तर्फबाट केही शक्ति पाउने भएको तथा केही भाग्यमानी मानिने ख्यालको, केही अपूर्ण विद्याको शक्ति पाउने भएको, राज समाजमा केही मान-सम्मान पाउने खालको, दाजु-भाई-दिदी-बहिनी धेरै भएको, धर्मको कामहरूमा केही दुर्बल श्रद्धा दर्शाएर काम सिद्ध पार्ने, बल पुरुषार्थको वृद्धि गर्ने किसिमको, व्यापारिदिमा केही दुर्बलताको साथै सफलता पाउनेवाला, केही अकर्मण्यता पाउने भएको, केही धर्म सम्बन्धी युक्तिहरूद्वारा कुराकानी गरेर उन्नतिको बाटो बनाउने खालको व्यक्ति होला।

कु० नं० ११८३

११ ९ १२ १० ८ १ ७ २ ४ ६शु. ३ ५

जुन व्यक्तिको तुलाराशिको शुक्र लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस राजशक्ति र शासन शक्ति प्राप्त गर्नेवाला तथा न्यायाधीश कहिने र उच्च श्रेणीको विद्या प्राप्त गर्ने र पिता पुत्रको महान शक्तिबाट पाउनेवाला, निकै ठूलो सुख भोग्ने खालको, मातृ स्थानको शक्ति पाउनेवाला तथा भूमि-भवनको स्वामी र ठूलो ऐश्वर्य तथा प्रभुत्व पाउने भएको अनि ठूलो व्यापार गर्नेवाला र सौन्दर्य तथा कलालाई मनपराउने भएको, गौरव र प्रभावले कुराकानी गर्न जान्नेवाला, बडप्पन र योग्यता एवं चातुर्यको दावी गर्ने खालको होला। निकै स्वाभिमानी, प्रतिष्ठित तथा ठूलो विद्वान कर्मिष्ठ खालको व्यक्ति होला।

कु० नं० ११८४

११ ९ १२ १० ८ १ ७शु. २ ४ ६ ३ ५

जुन व्यक्तिको वृश्चिक राशिको शुक्र लग्नबाट एघारौं स्थानमा छ भने त्य मानिस व्यापारादिबाट धेरै लाभ पाउने भएको, राजनीतिको उत्तम विद्या प्राप्त गर्ने खालको र पिताको लाभ पाउनेवाला, पुत्रको पनि लाभ पाउने भएको र विद्याबाट लाभ कमाउने, राज-काजको निकै लाभ पाउनेवाला तथा कुराकानीबाट पनि धन कमाउन जान्ने भएको तथा बुद्धि र कर्मको उत्तमताबाट इच्छित लाभ पाउने खालको र शृङ्गार तथा कलालाई बढी मनपराउने भएको र उन्नतिको लागि तथा लाभ वृद्धिको निम्ति बुद्धिमा बढी बल दिने भएको र भोगविलास एवं ऐश्वर्यका सुगम साधनहरू पाउनेवाला र प्रभाव तथा गौरवयुक्त कुराकानी गर्ने खालको, इज्जतदार, माननीय बढी बाठो र कर्मेष्ठी व्यक्ति होला।

कु० नं० ११८५

११ ९
१२ १० ८शु.
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको धनुराशिको शुक्र लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन खर्च गर्नेवाला, पिताको हानिपाउनेवाला तथा पुत्रको पनि हानि पाउनेवाला र परतन्त्रताको काम गर्ने भएको, मान प्रतिष्ठामा केही न्यूनता पाउनेवाला, विद्याको कमी पाउने खालको, अन्यान्य स्थानको शक्तिको सम्बन्ध पाउने भएको, केही वर्काइ-फर्काइसित कुरा गर्ने र अनेक घुमाउरा किसिमका काम गर्ने तथा व्यापारादिमा हानि पाउने अनि राज-समाजमा पनि हानि वा कष्ट-बाधा पाउने भएको, बुद्धिमा न्यूनता वा दुर्बलता अनुभव गर्ने तथा खर्च शक्तिलाई बढी चातुर्यले संचालित गर्न जान्ने खालको, केही अकर्मण्य झैं र अल्छी किसिमको होला।

कु० नं० ११८६

११ ९शु.
१२ १० ८
१ ७
२ ४ ६
३ ५

# मकर लग्नान्तर - शनिफलम्

जुन व्यक्तिको मकर राशिको शनि लग्नको प्रथम स्थानमा छ भने त्यो मानिस निकै धनाढ्य तथा धनीहरूमा गनिने खालको र विशेष धनीको

कु० नं० ११८७

११ ९
१२ १०श. ८
१ ७
२ ४ ६
३ ५

झैं रहन-सहन भएको, र धेरै धन पर्ने पोशाक लगाउने भएको र पिता स्थानबाट उन्नति पाउनेवाला र पिता स्थानलाई उन्नति दिनेवाला र निकै प्रभावशाली पिता पाउने भएको, ठूलो व्यापार गर्नेवाला, दाजुभाईको स्थानमा कमी र रूखो भाव पाउने भएको, समाजमा नाम र सम्मान पाउनेवाला, बढी आत्मबल भएको, बढी धन र उन्नतिका लागि अनेकानेक उपाय गर्ने भएको, दैनिक व्यापारमा केही अपठेरो अनुभव गर्नेवाला र गृहस्थीमा वैमनस्यता पाउने खालको भए पनि माननीय होला।

जुन व्यक्तिको कुम्भ राशिको शनि लग्नबाट द्वितीय स्थानमा छ भने

कु० नं० ११८८

११श. ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५

त्यो मानिस निकै धनवान् र धन संग्रह गर्ने भएको अनि धनको लागि प्राणपणले चेष्टा गर्ने, कुटुम्बको वृद्धि गर्ने, माताको पक्षमा न्यूनता वा दुर्बलता पाउने र भूमि-भवनको कमी पाउने, सुखस्थानमा हानि पाउने, बढी लाभ पाउनका लागि बढी प्रयत्न गर्ने भएको, जीवनको दिनचर्यामा केही अशान्ति अनुभव गर्ने भएको, पुरातत्त्वको स्थानमा वैमनस्यता पाउने खालको, आवश्यक पदार्थहरूलाई अरुचिकर पाउने भएको, शरीरमा केही बन्धन र घेराउ झैं अनुभव गर्ने र धनलाई नै परमतत्व मात्रै खालको होला।

जुन व्यक्तिको मीनराशिको शनि लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै प्रभावशाली तथा ठूलो पुरुषार्थी र धेरै कठिन परिश्रम गर्ने भएको र दाजु-भाइ दिदी-बहिनी धेरै भएको र तिनीहरूबाट नै सुखमा न्यूनता पाउने तथा बुद्धिमा बढी बल दिनेवाला तथा सन्तानको लागि उन्नतिको सम्बन्धमा बढी शक्तिको प्रयोग गर्ने भएको र बुद्धि एवं वाणीद्वारा आत्मचिन्तन गर्ने खालको र बढी धन व्यय गर्नेवाला तथा खर्चमा कमी र क्लेश पाउनेवाला अनि पुरुषार्थ द्वारा धन कमाउनेवाला एवं धनको शक्ति पाउनका लागि बढी परिश्रम गर्नेवाला र धर्मको ध्यान राख्ने भएको र भाग्यको वृद्धि गर्ने र पाउनेवाला ईश्वरवादी होला।

कु० नं० ११८९

११ ९ १२ श. १० ८ १ ७ २ ४ ६ ३ ५

जुन व्यक्तिको मेषराशिको शनि लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस सुख स्थानमा कमी र अशान्ति पाउने भएको र माताको सम्बन्धमा पनि केही क्लेश र कमीको योग पाउने भएको र शरीरमा साधारण सौन्दर्य पाउने भएको र आत्माभित्र केही दुर्बलताको साथै आत्मबल पाउने भएको र शत्रु स्थानमा प्रभाव जमाउनेवाला र ठूलो व्यापार गर्ने भएको अनि पिता स्थानमा बड़प्पन पाउनेवाला र जन्म कालदेखि नै पितालाई वृद्धि पुर्‍याउने भएको र उन्नतिको लागि धेरै थरिका कर्म गर्नेवाला र भवन-भूमि र मातृभूमि स्थानमा केही कमी पाउनेवाला तथा उत्तम धारणावाला व्यक्ति होला।

कु० नं० ११९०

११ ९ १२ १० ८ १श. ७ २ ४ ६ ३ ५

जुन व्यक्तिको वृषराशिको शनि लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस सौन्दर्य पाउनेवाला, बडो बुद्धिमान निकै बाठो र विद्यालाई प्राप्त गर्नेवाला तथा बुद्धिद्वारा धेरै धन कमाउने भएको र आफ्नू शरीर र बुद्धिको प्रभावले ठूला-ठूला बहुमूल्य लाभ पाउनेवाला तर व्यापार र आमदानीको स्थानमा केही आत्मशक्ति वा धनशक्ति द्वारा काम लिन जान्ने र बढी महत्त्वपूर्ण र अमूल्य कुराकानी गर्ने, स्त्री स्थानमा केही वैमनस्यताको साथसाथै विशेष सम्पर्क राख्ने भएको र बढी भोग खोज्नेवाला, व्यापारको उन्नतिमा निकै बर्ता ध्यान दिने भएको र सन्तान शक्तिको बहुमूल्य लाभ पाउने भएको अनि निकै चनाखो दिमागी शक्ति भएको व्यक्ति होला।

कु० नं० ११९१

११ ९
१२ १० ८
१ ७
२श. ४ ६
३ ५

जुन व्यक्तिको मिथुनराशिको शनि लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस निकै प्रभावशाली तथा शत्रुहरूमा विजय पाउने भएको अनि कुनै प्रकारले केही प्रभावयुक्त परतन्त्रता पाउनेवाला तथा मावली पक्षमा पनि केही प्रभाव जमाउने र जीवनको दिनचर्यामा केही स्वतन्त्रता र कष्ट-बाधा अनुभव गर्ने खालको तथा खर्चमा केही अपठेरो अनुभव गर्ने भएको र दाजु-भाइ दिदी-बहिनीको स्थानमा वैमनस्यता पाउनेवाला तथा बढी परिश्रम गर्ने भएको, प्रभावको उन्नतिका लागि निकै बलियो प्रयत्न गर्नेवाला तथा धन संग्रहको स्थानमा केही कमी पाउने खालको र शरीरको सौन्दर्यमा केही न्यूनता (कमी) पाउनेवाला, बडो सर्तक र होशियार खालको होला।

कु० नं० ११९२

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३श. ५

जुन व्यक्तिको कर्कराशिको शनि लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस व्यापारको पंक्तिमा बढी परिश्रम गर्ने भएको, स्त्री स्थानमा बर्ता आसक्ति राख्ने खालको तर गृहस्थीमा केही वैमनस्यता पाउने भएको र व्यापारमा केही कष्ट-बाधा पाउने भएको र लौकिक कार्यहरूमा निकै तत्परताले काम गर्ने भएको, तथा भाग्यवृद्धिको लागि निकै प्रयत्न गर्ने भएको, धर्म-कर्ममा बढी श्रद्धा राख्ने खालको र मातृपक्षमा बढी न्यूनता (कमी) को योग पाउने भएको तथा सुख-शान्तिमा बाधा पाउने भएको, भूमि-भवन आदिको न्यूनता पाउने खालको र शरीरमा सुन्दरता र कोमलता पाउने खालको अनि बढी धन कमाउने खालको व्यक्ति होला।

कु० नं० ११९३

११ ९
१२ १० ८
१ ७
२ ४श. ६
३ ५

जुन व्यक्तिको सिंहराशिको शनि लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस विदेश आदिमा बस्ने भएको तथा शरीरमा कष्ट सहने खालको र पिताको वृद्धि गर्ने भएको, धनको हानि गर्ने खालको र अनेक गूढ युक्तिहरूद्वारा ठूला काम गर्नेवाला, उन्नतिका लागि ठूला-ठूला प्रयत्न र परिश्रम गर्ने भएको अनि बुद्धिमा बर्ता बल दिने खालको, सन्तान शक्ति पाउनेवाला, विद्या ग्रहण गर्ने भएको र निकै पेचीदा (बाङ्गा-घुमाउरा) काट-छाँटका कुराहरू गर्ने खालको र केही परतन्त्रता पाउने भएको, सदैव कर्मयुक्त उन्नतिको विशेष ध्यान राख्ने अनि लामू आयु पाउने भएको, धन संग्रहमा कष्ट-बाधा पाउने खालको, बढी परिश्रमी, मान-सम्मान प्राप्त गर्नेवाला र मुख पछाडि राम्रा-नराम्रा गरेका सबै थाहा पाउनेवाला, गूढ चाल-चल्न जान्ने होला।

कु० नं० ११९४

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५श.

जुन व्यक्तिको कन्याराशिको शनि लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस निकै भाग्यमानी तथा धर्मवान् पुण्यात्मा र राम्रो शरीर पाउने भएको

कु० नं० ११९५

११ ९
१२ १० ८
१ ७
२ ४ ६श.
३ ५

र बढी लाभ पाउनका लागि बढी ध्यान लगाउने भएको, बडो भाग्यवान् झैं देखिने भएको अनि आमदानीको स्थानमा केही वैमनस्यता पाउने भएको अनि शत्रुहरू र विपक्षीहरूमा राम्रो प्रभाव पार्न जान्ने भएको, निकै प्रभावशाली र रोग दोषमा काबू पाउनेवाला तथा ईश्वरमा विश्वास राख्नेवाला, दाजु-भाइ दिदी-बहिनीको स्थानमा कटुता पाउने तथा पुरुषार्थमा केही कमी पाउने र धर्म एवं भाग्यको तागतले धन कमाउने कुटुम्बवाला, सज्जन स्वभावको होला।

जुन व्यक्तिको तुला राशिको शनि लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो व्यापार धनको शक्तिले गर्ने भएको र दिव्य देहवाला,

कु० नं० ११९६

११ ९
१२ १० ८
१ ७श.
२ ४ ६
३ ५

निकै प्रभावशाली तथा राजस्थानमा मान पाउने भएको र पिता स्थानमा उन्नति पाउने खालको र मातृस्थानमा कमी पाउनेवाला, सुखका साधनहरूमा केही न्यूनता पाउने भएको, स्त्री पक्षमा केही वैमनस्यता र संयोग पाउनेवाला, व्यापारको श्रेणीमा केही दैनिक घेराउ झैं केही कष्ट-बाधा पाउनेवाला र भोग वैभव पाउने तथा खर्चमा थिच्न (टार्न) खोज्ने र अधिकताको योग पाउनेवाला र उच्च भावना वा उच्च कर्मवाला होला।

जुन व्यक्तिको वृश्चिक राशिको शनि लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धेरै धन कमाउने भएको र प्रसस्त कीर्ति पाउनेवाला र धन लाभको उन्नति गर्ने, अनेक काममा लागि रहने खालको तथा आत्मबल र देह बलको शक्ति पाउने भएको, राम्रो शरीर भएको, धन र शरीरको तागतले आमदानी दरिलो तुल्याउने र विद्या बुद्धिमा उन्नति पाउने तथा सन्तान शक्ति पाउने भएको र जीवनको दिनचर्यामा अशान्ति अनुभव गर्ने खालको अनि निकै गहकिलो कुराहरू भन्ने तथा स्वार्थयुक्त रहने भएको तथा पुरातत्त्वको सम्बन्धमा केही विरोध पाउने र उच्च विचारको व्यक्ति होला।

कु० नं० ११९७

११ ९
१२ १० ८श.
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको धनुराशिको शनि लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस धेरै धन खर्च गर्ने भएको र अन्यान्य स्थानहरूमा गइरहने खालको तथा हृदयमा बढी अशान्ति पाउनेवाला, शरीरमा दुर्बलता पाउने र अन्य स्थानहरूको योगद्वारा धन प्राप्त गर्ने भएको तथा धनवृद्धिका लागि अनेकानेक कठोर कष्टहरू सहने खालको र भाग्य-वृद्धि गर्ने भएको, धर्मलाई मान्ने र यश प्राप्त गर्ने खालको अनि शत्रु स्थानमा मित्रताको प्रभाव राख्न सक्ने भएको, भ्रमणकारी बानी परेको र खर्चको अधिकताले कष्ट अनुभव गर्ने भएको तथा कोमल हृदय भएको व्यक्ति होला।

कु० नं० ११९८

११ ९श.
१२ १० ८
१ ७
२ ४ ६
३ ५

# मकर लग्नान्तर - राहुफलम्

जुन व्यक्तिको मकर राशिको राहु लग्नको प्रथम स्थानमा छ भने त्यो मानिस शरीरमा केही मादक वस्तु र मनमा अत्यास सहने, अनि शरीरमा

कु० नं० ११९९

११ ९ १२ १०रा. ८ १ ७ २ ४ ६ ३ ५

केही न्यूनता अनुभव गर्नेवाला र निकै ठूलो चातुर्य र गुप्त शक्तिहरूद्वारा उन्नतिको बाटो समाउने भएको, आफू भित्र महान् शक्ति प्राप्त गर्ने चेष्टामा लागिरहने भएको अनि सदाको लागि निर्भय हुने मार्ग खोज्ने भए तापनि आफू भित्र केही अपूर्ण भए झैं ठान्ने, केही कष्ट-बाधा सहन गरेपछि केही दरिलो बाटो पैल्याउने खालको अनि स्वार्थ सिद्ध गर्नका लागि सत्य असत्यको कुनै वास्ता नगरेर ठूलो सज्जनताको किसिमले काम सिद्ध पार्न जान्ने भएको निकै होशियार र बाठो व्यक्ति होला।

जुन व्यक्तिको कुम्भराशिको राहु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन स्थानमा केही हानि पाउने र धनको वृद्धि गर्नका लागि सदैव

कु० नं० १२००

११रा. ९ १२ १० ८ १ ७ २ ४ ६ ३ ५

चिन्तित रहने खालको तथा धनसंग्रहका लागि ठूला-ठूला र अत्यन्त कठिन कार्य गर्ने भएको, धनका लागि कहिले काहीं ठूलो विपत्तिमा पर्न पुग्नेवाला र कुटुम्बमा विग्रह पाउने भएको र स्वजनमा केही न्यूनता पाउने भएको, धन प्राप्तिका निमित्त केही गुप्त शक्तिको प्रयोग गर्न जान्नेवाला र निकै बर्ता चातुर्यसित आफू सोझो बनेर दृढतापूर्वक हिम्मत-साहस सहित इच्छित लक्ष्य पाउनेवाला, अन्त्यमा कुनै बलियो शक्ति पाउने खालको व्यक्ति होला।

जुन व्यक्तिको मीनराशिको राहु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै प्रभावशाली तथा ठूलो साहसले काम सिद्ध पार्नेवाला, दाजु-भाइको स्थानमा हानि वा क्लेशको योग पाउने भएको, आफ्नू पुरुषार्थको बलमा नाजायज धन कमाउने भएको तथा सधैं आफूलाई विजयी राख्ने मार्ग बनाउने खालको र आफ्नू साहस शक्तिमा कहिले काहीं आघात सहनेवाला र आफ्नू प्रभाव वृद्धि गर्नका लागि निकै ठूलो गुप्त युक्तिहरूको प्रयोग गर्ने भएको र आफ्नू पुरुषार्थ कार्यमा सज्जनता दर्शाएर आफ्नू चातुर्यहरूले काम सिद्ध पार्ने खालको अनि बर्ता होशियार र सावधान रहने शक्तिवाला, जोसिलो र तेजिलो व्यक्ति होला।

कु० नं० १२०१

११ ९ १२ रा. १० ८ १ ७ २ ४ ६ ३ ५

जुन व्यक्तिको मेष राशिको राहु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस माताको कष्ट सहनेवाला र मातृस्थानको वियोग पाउने भएको, भूमि-भवन अर्थात् निवास स्थानमा केही न्यूनता पाउने खालको अनि सुखका साधनहरूमा कमी पाउने भएको, आमोद-प्रमोदको पनि अभाव पाउनेवाला अनि सुख-शान्तिमा कहिले काहीं निकै गहीरो आघात सहनै परे पनि सुखको दृढता पाउनका लागि निकै गहीरो आघात सहनै परे पनि सुखको दृढता पाउनका लगि निकै ठूलो युक्तिपूर्ण कर्म गर्ने भएको, गुप्त शक्तिको सहयोग पाउने भएको र सुखका अपूर्ण वातावरणबाट पनि केही सुखको दरीलो हाँगो पाउनेवाला र अन्यान्यको सुखबाट पनि सुखको लाभ थोरै परिश्रमले पाउने खालको, तथा सुखको पूर्ण बलियो हाँगो समाउन खोज्ने खालको व्यक्ति होला।

कु० नं० १२०२

११ ९ १२ १० ८ १रा. ७ २ ४ ६ ३ ५

जुन व्यक्तिको वृषराशिको राहु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षबाट कष्ट पाउने खालको, विद्यामा केही न्यूनता पाउने भएको र विद्याको आन्तरिक तत्त्वलाई ग्रहण गर्ने भएको, जुन विद्याको बलद्वारा स्थाई लाभ प्राप्त हुन सक्दछ भने त्यसलाई पाउनेवाला किन्तु विद्या बुद्धिको शक्तिमा केही अपूर्णताको योग पाउनाले कहिले काहीं निकै दु:खको अनुभव गर्ने भएको र केही थोरै नशा खोज्ने भएको र कुरा-कानी भित्र र बोल-चालमा निकै स्वच्छता देखाउन जान्ने भएको अनि केही रूखो भावले र बडो चातुर्यले बोल्न जान्ने र झूठो र सत्यको विचार नराखेर केवल स्वार्थ सिद्ध गर्ने तथा आफ्नू कुरालाई उचित ठहराउने खालको व्यक्ति होला।

कु० नं० १२०३

११ ९
१२ १० ८
१ ७
२रा. ४ ६
३ ५

जुन व्यक्तिको मिथुन राशिको राहु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो प्रभावशाली तथा शत्रुको दमन गर्न सक्ने भएको र महान् विजय प्राप्त गर्ने खालको अनि महान् विवेक र चातुर्यद्वारा कूटनीतिको चाल चलेर उन्नतिमा पुग्न सक्ने भएको र हुल्याहा तथा लापरवाहीसित इच्छा पूरा गर्ने खालको र अनेकानेक ठूला कष्ट-बाधाको पनि वास्ता नगर्ने र महान् स्वार्थसिद्धि गर्नका लागि निकै ठूलो दृढताले काम पूरा गर्ने भएको र शील एवं सन्तोषको उल्लंघन गर्ने खालको तथा निर्भय रहने र तेजिलो, दरो होला।

कु० नं० १२०४

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३रा. ५

जुन व्यक्तिको कर्क राशिको राहु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री–स्थानमा ठूलो हानिको योग पाउने भएको अथवा स्त्रीपक्षबाट केही कष्ट र क्लेश पाउनेवाला, व्यापारको परिधिमा निकै कण्टक बोक्नेवाला, अनि व्यापारमा हानि पाउने भएको, व्यापारको सीमित परिधिमा केही बढी फाइदा प्राप्त गर्ने प्रयत्न गर्ने खालको, गृहस्थीको सम्बन्धमा मानसिक चिन्ताहरूको साथै कष्ट भोग्ने खालको अनि भोगादिक पक्षमा केही अव्यवस्थित भएर केही अनधिकार लाभ पाउने चेष्टा गर्ने भएको र चंचल चित्तको व्यक्ति होला।

कु० नं० १२०५

११ ९ १२ १० ८ १ ७ २ ४रा. ६ ३ ५

जुन व्यक्तिको सिंहराशिको राहु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस नाभि मुन्तिर पेटको भित्र बिमारी र कष्ट-बाधा पाउने भएको, जीवनको दिनचर्यामा क्लेश अनुभव गर्ने खालको र आयुमाथि अनेक आघात सहने र आयुमा दुर्बलता अनुभव गर्नेवाला, पैत्रिक धन र पुरातत्वको हानि सहने भएको र गुप्त एवं गहीरो चाल चलेर कठिन रीतिले दृढता साथ काम सपार्ने र शील सन्तोष नाघ्ने तथा निर्भय र तेजिलो व्यक्ति होला। धनको वृद्धिका लागि अनेकानेक युक्तिहरू प्रयोग गर्ने र जीवन निर्वाहका लागि केही कठोर श्रमद्वारा शक्ति पाउने होला।

कु० नं० १२०६

११ ९ १२ १० ८ १ ७ २ ४ ६ ३ ५रा.

जुन व्यक्तिको कन्याराशिको राहु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यको सम्बन्धमा चिन्ताग्रस्त रहने भएको तथा भाग्योन्नतिका लागि ठूला-ठूला युक्तिहरू द्वारा काम सिद्ध पार्ने र भाग्यमाथि कहिले काहीं कुनै ठूलो धक्का पनि सहनेवाला तथा भाग्यको उन्नतिका निम्ति निकै साहसले खतरा बोकेर र परिश्रम सहेर काम गर्ने भएको अनि धर्मको यथार्थतामा केही न्यूनता पाउने भएको तथा बाहिरी धर्मको राम्रो पालन गर्नेवाला, भाग्यलाई दरिलो पार्न कुनै न कुनै काइदाले केही न केही प्राप्त नगरी नछाड्ने खालको तथा निकै चतुरो होला।

कु० नं० १२०७

११ ९
१२ १० ८
१ ७
२ ४ ६रा.
३ ५

जुन व्यक्तिको तुला राशिको राहु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिताको स्थानमा केही अशान्ति र न्यूनताको योग पाउने भएको तथा व्यापारादि उन्नतिका स्थानमा केही बाधाहरू पाउनेवाला तर व्यापारिक कार्यहरूमा निकै ठूलो गुप्त योजनाहरूलाई निकै सतर्कतासाथ प्रयोग गर्न जान्ने भएको र निकै परिश्रमको मार्गबाट झ्याउलोका साथै उन्नतिको बाटो भेट्टाउने भएको र राज-स्थानसित सम्बन्धित कार्यहरूमा केही कष्ट-बाधा सहेर काम सिद्ध पार्नेवाला र आफ्नू प्रभाव कायम राख्नका लागि ठूला-ठूला चातुर्यद्वारा र होशियारीले काम गर्न जान्नेवाला तथा आफ्नू इज्जतलाई दरो पार्न बढी ध्यान र उपाय गरिरहने खालको होला।

कु० नं० १२०८

११ ९
१२ १० ८
१ ७रा.
२ ४ ६
३ ५

जुन व्यक्तिको वृश्चिक राशिको राहु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस बढी लाभ पाउने भएको तथा निकै बर्ता धन प्राप्त गर्नका लागि

कु० नं० १२०९

११ ९ १२ १० ८रा. १ ७ २ ४ ६ ३ ५

बढी लाभ पाउने भएको तथा निकै बर्ता धन प्राप्त गर्नका लागि बढी प्रयत्न गर्ने भएको तथा धनको प्राप्तिमा सन्तोष नमान्ने भएको बरु धन प्राप्तिको सम्बन्धमा अनधिकार चेष्टा गर्ने भएको र सित्तैंको धन लिन खोज्ने तथा प्राप्त गर्ने र धनको स्थिर आमदानी पाउनका लागि निकै गूढ प्रयत्न गरेर केही न केही दरीलो खालको हाँगा प्राप्त गरिछाड्नेवाला र आमदानीको स्थानको बाटोमा कहिले काहीं कष्ट-बाधा पनि आइलाग्ने खालको र आफ्नू स्वार्थसिद्धिमा निकै दृढताले काम लिन जान्ने खालको होला।

जुन व्यक्तिको धनुराशिको राहु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस खर्चको सम्बन्धमा अनेक कष्ट-झ्याउला र विघ्न-बाधा सहने भएको

कु० नं० १२१०

११ ९रा. १२ १० ८ १ ७ २ ४ ६ ३ ५

र अनावश्यक खर्चले काम चलाउन जान्ने भएको र खर्च संचालन शक्तिलाई केही लुकेको गुप्त र दुर्बल क्रियाहरू द्वारा प्राप्त गर्ने खालको तथा अन्य स्थानको सम्बन्धमा केही क्लेशित हुने भएको र गलत र अप्रशंसनीय मार्गबाट पनि खर्च गर्ने भएको र खर्च स्थानको योजनाहरूमा केही कंजूसी पनि प्राप्त गर्नेवाला र खर्च स्थानमा केही बदनामी र संकटहरूको पनि झ्याउलो आइलाग्ला अनि बर्ता बांगा युक्तिहरूबाट काम सिद्ध पार्न जान्ने खालको होला।

# मकर लग्नान्तर - केतुफलम्

जुन व्यक्तिको मकरराशिको केतु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस निकै बर्ता हठ गर्ने अर्थात् हठ्योगद्वारा काम गर्ने खालको र निर्भयता प्राप्त गर्ने भएको र शरीरमा केही न्यूनता र घाउ आदिको योग पाउने भएको र शरीरमा केही कष्ट-बाधा पनि सहने खालको तर देहमा केही आन्तरिक दृढता पाउने भएको र आफूलाई विख्यात पार्नका लागि दुर्नामको पनि वास्ता नगर्ने भएको, विपत्तिहरूको पनि केही वास्ता नगर्ने खालको, शरीरमा बढी काम-वासना राख्नेवाला, लौकिक उन्नतिका लागि गुप्त-शक्तिले काम सिद्ध पार्न जान्ने भएको र अनुहारको सौन्दर्यको न्यूनताको कष्ट अनुभव गर्नेवाला, स्वार्थयुक्त साहसी व्यक्ति होला।

कु० नं० १२११

११ ९
१२ १०के. ८
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको कुम्भराशिको केतु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनको पक्षमा केही कमी पाउनेवाला तथा धन वृद्धिका लागि निकै ठूलो हठधर्मीद्वारा काम बनाउनेवाला, धनको आन्तरिक दृढतालाई स्थाईरूपमा पार्नका लागि निकै कठिन प्रयत्न गर्ने भएको तथा अनेक जोखिम सहने खालको र धनस्थानमा कहिले काहीं निकै ठूलो संकट सहनु परेको भए पनि साहस र गुप्त शक्तिको बलले संकट सहनु परेको भए पनि साहस र गुप्त शक्तिको संकट बाट निस्कन सक्नेवाला र धनको अलिकति भए पनि स्थाई शक्ति भेट्टाउने भएको अनि कुटुम्बमा क्लेश र दुर्बलताको योग पाउनेवाला र अप्रत्यक्ष रूपले लाभ कमाइसकेपछि प्रत्यक्ष देखापर्ने खालको होला।

कु० नं० १२१२

११के. ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको मीन राशिको केतु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै ठूलो पुरुषार्थी तथा धेरै बर्ता परिश्रम गर्नेवाला र धेरै ठूलो साहसबाट काम गर्ने भएको, दाजु-भाइ दिदी-बहिनीको हानि पाउनेवाला तथा महान् कठिनभन्दा कठिन कार्यलाई सफल गर्नका लागि बहादुरीका साथै अगाडि बढ्नेवाला र ठूला-ठूला असफलताहरूको झ्याउलो पाउनेवाला किन्तु आन्तरिक धैर्यको दृढता भेट्टाउने खालको, निकै बांगा युक्तिहरू द्वारा आंशिक रूपमा स्थिर शक्तिलाई पाउने भएको र आफ्ना भुजाहरूका बलमा भर मान्ने खालको किन्तु आफ्नू शक्तिभित्र केही गुप्त न्यूनता अनुभव गर्ने भएको साहसी व्यक्ति होला।

कु० नं० १२१३

११, ९, १२ के., १०, ८, १, ७, २, ४, ६, ३, ५

जुन व्यक्तिको मेष राशिको केतु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृपक्षमा अर्थात् आमाको सुखमा कमी पाउने भएको, मातृभूमिबाट बिछोडको योग पाउने खालको सुख प्राप्तिका साधनहरूको न्यूनता र अशान्ति पाउनेवाला तथा धेरै थरिका दुःखहरू भोग्ने खालको भए पनि दुःखहरूको बाटामा निकै धैर्यले काम लिन जान्ने, भूमि-भवन र निवासस्थानमा पनि केही कमी र कष्टको योग पाउनेवाला, सुखको सम्बन्धमा स्थाई स्थिरशक्ति प्राप्ति गर्नका लागि निकै बढी साहस र गुप्त चातुर्यहरू द्वारा काम सिद्ध पार्न जान्ने, केही बलियो सफलता पाउने खालको होला।

कु० नं० १२१४

११, ९, १२, १०, ८, १ के., ७, २, ४, ६, ३, ५

जुन व्यक्तिको वृषराशिको केतु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस आफ्नू स्थिर बुद्धिद्वारा र आन्तरिक ज्ञानले काम गर्नेवाला र विद्या ग्रहण गर्नमा अनेक कष्ट-बाधा पाउने भएको तर निकै धैर्यसाथ विद्या ग्रहण गर्ने भएको र विद्याको सम्बन्धमा केही कमी वा असफलताहरूको झ्याउलो पाएर पनि केही दृढतालाई प्राप्त गरिलिनेवाला, कुराकानी वा बोलचालमा केही स्वच्छता र सुन्दरताको कमी पाउनेवाला, सन्तान पक्षमा केही कष्ट सहन गर्नेवाला, दिमाग भित्र केही अशान्तिको योग पाउने खालको, सत्य असत्यको वास्ता नगरेर गुप्त युक्तिहरूले काम बनाउन जान्ने होला।

कु० नं० १२१५

११ ९
१२ १० ८
१ ७
२के. ४ ६
३ ५

जुन व्यक्तिको मिथुन राशिको केतु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस मावली पक्षमा हानि पाउने भएको, शत्रु पक्षबाट क्लेशित भएर शत्रुलाई भेद युक्तिले गुप्त रीतिले हानि पुऱ्याउने खालको, अत्यन्त गुप्त बांगा उपायहरूले प्रभाव पाउने भएको, अनि आफ्नू युक्तिबल र शक्तिलाई उल्टो किसिमले प्रयोग गर्नाले समाजमा निन्दा पनि पाउने भएको, आफ्नू स्वार्थसिद्धि गर्नका लागि कुनै पनि जाति-नजातिको वास्ता नगर्ने खालको, तल्लो श्रेणीको चालले रोग र विपत्तिहरूलाई निमन्त्रण दिने भएको, निकै युक्ति जान्ने भएको अनि नडराउने साहसी होला।

कु० नं० १२१६

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३के. ५

जुन व्यक्तिको कर्कराशिको केतु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानमा ठूलो कण्टक र हानि पाउनेवाला र गृहस्थीका झ्याउलाबाट कष्ट-बाधा अनुभव गर्ने भएको र व्यापारको श्रेणीमा ठूला-ठूला विफलताहरू र हानिहरू पाउने, अनि इन्द्रियको भोगादि पक्षमा धेरै कमी वा खराबीहरू पाउने भएको अर्थात् अनेक झंझट खप्नेवाला भए पनि निकै दरिलो हिसाबले काम चलाउने भएको र व्यापारलाई साना-ठूला कष्ट-बाधा सहँदै रहेर पनि निराशामा आशालाई समाउने भएको, गुप्त हिम्मतको शक्तिले काम गर्नेवाला र मानसिक आघात सहेर पनि कुनै बलियो लाइनको मुख्य आन्तरिक फाइदा पाउने खालको होला।

कु० नं० १२१७

११ ९
१२ १० ८
१ ७
२ ४के. ६
३ ५

जुन व्यक्तिको सिंह राशिको केतु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस नाभिको तल पेट भित्र कुनै खराबी वा कष्ट सहने भएको, जीवनको दिनचर्यामा अनेक झ्याउला पाउनेवाला र आयुको माथि ठूला-ठूला विपत्तिहरू सहने खालको, पुरातत्त्वको संचित शक्तिबाट हानि पाउने अनि आयुको भविष्यसम्बन्धी विचारहरूका कारणहरूबाट चिन्ताको योग पाउने खालको र गुप्तभन्दा पनि गुप्त डरलाग्दो शक्ति धारण गर्ने भएको र जीवनकालमा केही स्थाई भर-थेग पाउनको लागि ठूला-ठूला कठिन परिश्रम सहेर पनि प्रभावशाली कठोर शक्तिलाई प्राप्त गर्ने भएको र आउने जाने वा यात्राको सम्बन्धमा अनेक कष्ट अनुभव गर्ने खालको होला।

कु० नं० १२१८

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५के.

जुन व्यक्तिको कन्याराशिको केतु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्य स्थानमा केही कष्ट-बाधा सहने खालको र धर्मको पालन गर्नमा केही आन्तरिक दुर्बलता पाउनेवाला तथा धर्मको बाहिरी अंगमा केही दृढता राख्नेवाला र भाग्यको दृढताका लागि अनेक कठिन प्रयत्न गर्ने भएको तथा भाग्योदय कालमा ढीलो पाउने भएको र केही पनि नजान्ने र गुप्त शक्तिको बलले धैर्यपूर्वक भाग्यको मजबूती सम्बन्धी स्थिर साधन पाउनेवाला र केही वास्तविक सुयश वा न्यूनता पाउने भएको, धर्मको स्थानमा स्वार्थयुक्त भएर पालन गर्नमा श्रद्धा राख्ने खालको अर्थात् पूर्ण धर्म वा ठीक पालन गर्न नसक्ने खालको होला।

कु० नं० १२१९

११ ९
१२ १० ८
१ ७
२ ४ ६के.
३ ५

जुन व्यक्तिको तुला राशिको केतु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता-स्थानमा केही कण्टक पाउनेवाला र पिताको अधूरो सुख प्राप्त गर्नेवाला, व्यापारादि कारबारमा अनेक कष्ट-बाधा सहने भएको र व्यापारको उन्नतिका लागि ठूला-ठूला कठिन प्रयास र परिश्रम गर्ने भएको, अनि अनेक गुप्त युक्तिहरूलाई महान् चातुर्यद्वारा कार्यरूपमा परिणत गर्ने अर्थात् उन्नति पाउनेवाला र उन्नतिको मार्गमा अनेक असफलताहरू आइलागे पनि आफ्नू ठूलो हिम्मतले काम गर्ने भएको र अन्धविश्वास तथा धैर्यको शक्तिले अगाडि बढ्दै रहने खालको अनि राज-सम्बन्धमा केही बाधा-तगारो परे पनि शक्तिद्वारा काम सिद्ध पार्ने खालको होला।

कु० नं० १२२०

११ ९
१२ १० ८
१ ७के.
२ ४ ६
३ ५

जुन व्यक्तिको वृश्चिक राशिको केतु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धेरै लाभ पाउने भएको र धन प्राप्तिका लागि ठूला-ठूला कठिन कार्य पनि साहसका साथ गर्ने भएको अनि सित्तैंको झैं धन पनि प्राप्त गर्ने खालको र सित्तैंको धन प्राप्त गर्नका लागि निकै बढी उद्योग पनि गर्दै रहने भएको, प्रत्येक मामलामा वित्तभन्दा बढी नाफा पाउने चेष्टा गर्नेवाला र अधिक धन प्राप्त गर्नका लागि अनेक गुप्त युक्तिहरूको प्रयोग गर्न जान्ने भएको र चाहिने जति आमदानीले पनि सन्तुष्ट नरहने खालको र आमदानीलाई स्थिर र बलियो केही न केही प्राप्त गरेर छाड्ने खालको अनि सदैव स्वार्थको नै चिन्तन गरिरहने व्यक्ति होला।

कु० नं० १२२१

११ ९
१२ १० ८के.
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको धनुराशिको केतु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस विचारै नगरेर बढी धन व्यय गर्ने खालको र बाहिरी स्थानबाट सम्बन्धित महान् शक्तिलाई प्राप्त गर्ने भएको र खर्चको निकै बलियो शक्ति पाउने खालको र निकै बर्ता साहस र बलद्वारा खर्चको संचालन क्रियालाई गर्दै रहने खालको र खर्चको महान् वेगलाई रोक्न नसक्ने भएको र बाहिरी व्यक्तिहरूको सम्पर्कमा निकै बढी साहस र अन्धविश्वासबाट काम सिद्ध पार्न जान्ने खालको तथा प्रभाव बर्ता भएको, धेरै ठूलो गुप्त शक्तिको बलले र युक्तिहरूद्वारा खर्चको शक्ति र बाहिरी सम्पर्कको स्थिरतालाई प्राप्त गर्न सक्ने खालको होला।

कु० नं० १२२२

११ ९के.
१२ १० ८
१ ७
२ ४ ६
३ ५

# कुम्भलग्न हुनेको-भविष्यका तारीखहरू

सन् १९९६ को वर्षमा - गुरु नीच भएर बाह्रौं रहने छन्, यसैनिम्ति धनको पक्षमा दुर्बलता रहने छ। ता० ७/१/९६ बाट भाग्य र लाभ राम्रो रहनेछ, धनको सफलता रहनेछ। ता० १५/७/९६ देखि उन्नतिमा बाधा रहला। ता० ३/९/९६ बाट उन्नति र सफलता रहला। ता० १७/१०/९६ बाट १५/११/९६ सम्ममा भाग्यमा केही कष्ट-बाधा रहला। ता० १६/११/९६ बाट ता० ३१/१२/९६ सम्म धन लाभको सफलता मिल्दै रहला।

कु० नं० १२२३

कु० नं० १२२४

सन् १९९७ को वर्षमा - ता० २/१/९७ देखि लाभ रहने छ। ता० १५/१/९७ बाट खर्च बढ्ने छ। ता० ९/२/९७ बाट भाग्यको उत्तम समय चल्न सक्दछन। उन्नति रहने छ। ता० २०/८/९७ देखि केही कष्ट-बाधा रहला। ता०३/९/९७ बाट भाग्यको उत्तम समय चल्नेछ। ता० २५/९/९७ बाट खर्च बढी हुनेछ। ता० १६/११/९७ देखि ता० १३/१२/९७ सम्ममा भाग्योन्नतिको अत्यन्त श्रेष्ठ समय रहने छ। मान-प्रभाव बढ्ला।

# कुम्भ लग्नमा–सुनौला तारीखहरू

कु० नं० १२२५

| | | |
|---|---|---|
| १२ | | १० |
| १ | ११ | ९ |
| २ | | ८ |
| ३ | ५ | ७ |
| ४ | | ६ |

सन् १९९८ को वर्षमा- ता० १/१/९८ बाट समय उत्तम रहने छ। ता० १५/१/९८ बाट लाभ-हानि समान चल्नेछन्। ता० १३/२/९८ बाट समय उत्तम चल्नेछ। ता० २६/२/९८ बाट उन्नतिमा केही कमी आउला। ता० २४/७/९८ देखि समय केही दुर्बल रहने छ। ता० २५/८/९८ देखि समय सप्रन्दै जानेछ। ता० १२/९/९८बाट भाग्य अलि कमजोर रहला। ता० ६/१०/९८ देखि ता० ३०/१२/९८ सम्ममा प्रायः लाभको सफलता रहने छ।

कु० नं० १२२६

| | | |
|---|---|---|
| १२ | | १० |
| १ | ११ | ९ |
| २ | | ८ |
| ३ | ५ | ७ |
| ४ | | ६ |

सन् १९९९ को वर्षमा - ता० ११/१/९९देखि समय बढी खर्चको भए पनि भाग्यको सफलता रहने छ। ता० १२/३/९९ बाट भाग्योदयको उत्तम समय आरम्भ हुनेछ। ता० १३/५/९९ देखि ता० १/९/९९ सम्ममा भाग्यको सफलता बनिरहला त्यसपछि केही दुर्बलता आउला। ता० १९/११/९९ देखि त० ३०/१२/९९ सम्ममा प्रायः समय भाग्योन्नति तर्फ रहने छ।

# कुम्भलग्नमा–सुनौला तारीखहरू

सन् २००० को वर्षमा - ता० १/१/२००० देखि समय लाभदायक रहने छ, धनागम होला ता० ३०/१/२००० देखि भाग्य अलि न्यून र खर्च बढी रहने छ। ता० २३/२/२००० बाट फेरि भाग्यको सफलता प्रबल रहने छ। ता० २४/७/२००० बाट भाग्य कमजोर चल्ने छ। ता० २५/७/२००० बाट गृहस्थी र व्यापारमा निकै सफलता रहने छ। ता० १३/८/२००० बाट फेरि भाग्यको न्यूनता देखापर्ला। ता० ९/९/२००० बाट भाग्य सप्रन्दै जानेछ। ता० २४/१२/२००० सम्म विशेष लाभको सफलता रहला।

कु० नं० १२२७

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

सन् २००१ को वर्षमा - ता० ५/२/२००१बाट समय केही राम्रो रहने छ। ता० १४/२/२००१ बाट भाग्यमा आंशिक दुर्बलता आउने छ, खर्च बढी भएर चिन्ता पर्नसक्तछ। ता० १५/४/२००१बाट भाग्योदय हुनेछ, मान-सम्मान र प्रभाव बढ्ला। ता० ९/८/२००१ देखि फेरि भाग्यको न्यूनता देखापर्ला। ता० ३/९/२००१ बाट केही धनको सफलता रहला। ता० २३/१०/२००१ बाट धन-मानको सफलता रहला। ता० २८/१२/२००१ सम्म धन-मानको उन्नति बनिरहने छ।

कु० नं० १२२८

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

# कुम्भ लग्नमा–सुनौला तारीखहरू

कु० नं० १२२९

सन् २००२ को वर्षमा - ता० १/१/२००२ बाट समय लाभदायक रहला। ता० १५/१/२००२ बाट व्यय-भार बढ्ने छ। ता० २१/२/२००२ बाट समय उन्नतिदायक रहला। ता० २६/३/२००२ बाट बुद्धि र सन्तान पक्षबाट शक्ति प्राप्त होला, सुखका साधन-बढ्नन्। ता० १६/५/२००२ बाट भाग्योदयको मार्गमा झ्याउलो र कष्ट रहला। ता० ६/७/२००२ बाट गृहस्थी र व्यापारमा सुख, सफलता बढ्ने छ। ता० १७/९/२००२बाट भाग्य र गृहस्थीमा अपठेरो आइलाग्ला। ता० १/१२/२००२ देखि ३१/१२/२००२ सम्ममा भाग्योदय र सन्तान-सुख रहला।

कु० नं० १२३०

सन् २००३ को वर्षमा - ता० ३/१/२००३ बाट भाग्यको राम्रो उन्नति रहने छ र आय-व्यय दुवै बढ्नेछ। ता० २०/३/२००३ बाट मान-सम्मान र प्रभाव बढ्ला, मन शान्त। ता० ९/७/२००३ बाट भाग्य केही विपरीत होला। ता० ४/८/२००३ देखि भाग्य सप्रन्दै जाला। ता० २८/८/२००३ बाट भाग्यको प्रबलता घट्ला। ता० २०/९/२००३ बाट भाग्योदयमा बाधा पर्ला। ता० १९/१०/२००३ बाट गृहस्थीको प्रपंच बढ्ला। ता० १६/११/२००३ बाट धनागममा बाधासहित केही सफलता मिल्ला। ता० ३/१२/२००३ देखि २९/१२/२००३ सम्म खर्च बढी रहने छ।

# कुम्भ लग्न हुनेहरूको लागि-सुनौला तारीखहरू

सन् २००४ को वर्षमा - ता० १/१/२००४ देखि समय लाभदायक रहने छ। ता० १४/१/२००४ देखि समय बढी खर्चको रहने छ। ता० १३/२/२००४ देखि समय सप्रन्दै जानेछ। ता० १४/४/२००४ देखि भाग्यमा न्यूनता आउला। ता० १३/६/२००४ देखि भाग्योन्नति रहने छ। ता० २/८/२००४ बाट फेरि भाग्योन्नतिमा बाधा आउला। ता० १८/९/२००४ बाट समय सप्रन्दै जाला। ता० १९/१०/२००४ देखि मनमा अशान्ति बढ्ने छ। ता० १६/११/२००४ देखि ता० ३१/१२/२००४ सम्म भाग्यको उत्तम उन्नति रहने छ।

कु० नं० १२३१

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

सन् २००५ को वर्षमा - ता० १/१/२००५ मा समय सामान्य ठीक रहला। ता० १४/१/२००५ बाट समय हानिकारक रहने छ। ता० १/३/२००५ बाट समय भाग्यको सफलताको रहने छ। ता० ३०/३/२००५ सम्म समय उत्तम रहने छ। ता० २३/४/२००५ देखि साहस शक्ति बढ्ने छ, भाग्यमा सपलता रहला। ता० १६/५/२००५ देखि भाग्योन्नति रहला। ता० ६/७/२००५ देखि व्यापार सफल रहने छ। ता० २/८/२००५ बाट भाग्यमा झ्याउलो आउला। ता० ३/९/२००५ देखि समय उत्तम रहने छ। ता० १७/९/२००५ बाट भाग्य विपरीत रहने छ। ता० १४/११/२००५ देखि ता० २८/१२/२००५ सम्म भाग्योन्नति रहने छ।

कु० नं० १२३२

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

# कुम्भ लग्न हुनेहरूको लागि-सुनौला तारीखहरू

सन् २००६ को वर्षमा - ता० ३/१/२००६ बाट समय दुर्बल रहनेछ।

कु० नं० १२३३

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

ता० २३/३/२००६ बाट भाग्यमा आंशिक सफलता रहने छ। ता० ११/५/२००६ बाट व्यापार र भाग्यमा विशेष सफलता मिल्नेछ। ता० ११/७/२००६ बाट भाग्यले विपरीत फल देला। ता० २९/८/२००६ बाट फेरि भाग्यमा सफलता मिल्ला। ता० ३०/१२/२००६सम्ममा प्रायः भाग्यमा सफलता बनिरहला, मान-सम्मान र प्रभाव बढ्ला।

कु० नं० १२३४

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

सन् २००७ को वर्षमा - ता० १/१/२००७ देखि लाभ र भाग्यको दुर्बलता रहने छ। ता० ८/२/२००७ देखि चौतर्फी सफलता रहला। ता० २५/४/२००७ पुरुषार्थ कर्मद्वारा भाग्यको उन्नति रहला। ता० १६/७/२००७ बाट केही बाधा आउला, उन्नतिमा अपठेरो पर्ला। ता० १८/११/२००७ बाट भाग्यको उन्नति चल्नेछ। ता० ३१/१२/२००७ सम्ममा लाभ राम्रो रहने छ।

# कार्यसिद्धिको विषय

कुम्भ लग्न हुने व्यक्तिहरूको- विद्या, सन्तान, बुद्धिको सम्बन्धमा बुध सदैव चिन्ता उत्पन्न गर्ने सूचक हुन् र शरीर स्वास्थ्यको सम्बन्धमा शनि

कु० नं० १२३५

१२ १०
१ ११ ९
२ ८
३ ५ ७
४ ६

सदैव दुर्बलता र चिन्ता उत्पन्न गर्ने सूचक हुन् र रोग, शत्रुपक्ष र मानसिक अशान्तिको सम्बन्धमा चन्द्रमा सदैव केही चिन्ता र बाधाका सूचक हुन्, यसैनिम्ति बुधवार भोजनभन्दा पहिले हरियो फल गाईलाई खान दिनु र सोमवार एक पाउ दही दान गरेर शिवको पूजा गर्नु अनि राहु-केतु स्वभावले नै दुःख दिने हुन् यसै निम्ति पक्षिहरूलाई अन्नका दाना र माछालाई पीठोको स-साना गोली बनाएर खान दिए उत्तम हुनेछ।

कुम्भ लग्न हुने व्यक्तिहरूको धनलाभको सम्बन्धमा गुरु प्रधान हुन् र भाग्योन्नतिको सम्बन्धमा शुक्र र मङ्गल मुख्य ग्रह हुन् यसै निम्ति पंचांग

कु० नं० १२३६

१२ १०
१ ११ ९
२ ८
३ ५ ७
४ ६

भित्र बृहस्पति जुन-जुन वर्षमा जब-जब कहिल्यै वृश्चिक, धन, मीन, मेष, मिथुन, सिंह, तुला र कुम्भमा आउँछन् र मंगल तथा शुक्र जहिले वृश्चिक, धनु, मीन, मेष, वृषभ, मिथुन, सिंह, कुम्भ र तुलामा आउँछन् तब ती महीनाहरूमा तथा वर्षहरूमा धन र भाग्यको उन्नति भइरहन्छ। अनि राहु जब-जब धनराशिमा आउँछन् तब-तब धनको उन्नति भइरहन्छ।

# कुम्भ लग्न हुनेको–प्रतिकूल समयको ज्ञान

कु० नं० १२३७

१२ १०
१ ११ ९
२ ८
३ ५ ७
४ ६

(सदैव कालको लागि)

तल लेखिएका ग्रह जब-जब यी राशिहरूमा पञ्चाङ्गमा आउनेछन् तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिनहरूमा प्रतिकूल समय रहने छ।

सू०- कन्या, तुला, मकर र कर्क।
चं०- कन्या, वृश्चिक, मकर र मीन।
मं०- कन्या, कर्क र मकर।
बु०- मकर, मीन र कर्क।
गु०- कन्या र मकर।
शु०- मकर, कर्क र कन्या।
श०- मकर, मीन, मेष, कर्क र कन्या।
रा०- धनु, कुम्भ, मीन, वृष, सिंह, कन्या र वृश्चिक।
के०- कुम्भ, मीन, वृष, मिथुन, सिंह, कन्या र वृश्चिक।

*नोट–* वर्ष दिनको फलादेश जान्नका लागि गु० श० रा० के० यी चार ग्रहहरूबाट हेर्नुपर्दछ। महीना-महीनाको फल जान्नका लागि सू० बु० शु० मं० यी चार ग्रहहरूबाट हेर्नुपर्दछ। अनि प्रतिदिनको फलादेश जान्नका लागि चन्द्रमाबाट हेर्नुपर्दछ। सूर्यबाट अस्त हुने ग्रहले दुर्बल र न्यून फल दिन्छ।

# कुम्भ लग्न हुनेहरूको-अनुकूल समयको ज्ञान

कु० नं० १२३८

१२　१०
१　११　९
२　८
३　५　७
४　६

(सदैव कालको लागि)

तल लेखिएका ग्रह जब-जब यी राशिहरूमा पञ्चाङ्गमा आउने छन्, तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिनहरूमा अनुकूल लाभदायक समय रहने छ।

---

**सू०-** सिंह, वृश्चिक, धनु, कुम्भ, मीन, मेष, वृष र मिथुन।
**चं०-** सिंह, तुला, धनु, कुम्भ, मेष, वृष, मिथुन र कर्क,
**मं०-** तुला, वृश्चिक, धन, कुम्भ, मीन, मेष, वृष, मिथुन र सिंह।
**बु०-** मिथुन, सिंह, कन्या, तुला, वृश्चिक, धनु, कुम्भ, मेष र वृष।
**गु०-** सिंह, तुला, वृश्चिक, धनु, कुम्भ, मीन, मेष, वृष, मिथुन र कर्क।
**शु०-** तुला, वृश्चिक, धनु, कुम्भ, मीन, मेष, वृष, मिथुन र सिंह।
**श०-** तुला, वृश्चिक, धनु, कुम्भ, वृष, मिथुन र सिंह।
**रा०-** मेष, मिथुन, कर्क, तुला र मकर।
**के०-** धनु, मकर, मेष, कर्क र तुला।

---

***नोट-*** सालाना फलादेश जान्नका लागि शु०, गु०, रा० के० यी चार ग्रहहरूबाट हेर्नुपर्दछ र मासिक फलादेश जान्नका लागि सू०, बु०, शु०, मं० यी चार ग्रहहरूबाट हेर्नुपर्दछ। दैनिक फलादेश जान्नका लागि चन्द्रमाबाट हेर्नुपर्दछ।

# कुम्भ लग्नान्तर–सूर्यफलम्

जुन व्यक्तिको कुम्भराशिको सूर्य लग्नको प्रथम स्थानमा छ भने त्यो मानिस प्रभावशाली स्त्री पाउनेवाला, प्रभावको व्यापार गर्नेवाला, शरीरमा केही दुर्बलता पाउने भएको, भोग विलासको शक्ति पाउने खालको तथा व्यापारको श्रेणीमा सम्पूर्ण शक्तिले काम गर्ने किसिमको, स्त्रीलाई केही अलिकति वैमनस्यताका साथै बढी महानता दिने भएको, स्त्रीको प्रभाव र दबाव अनुभव गर्ने खालको तथा लौकिक र दैनिक कार्यहरूलाई निकै महानता र प्रभावका साथ पूरा गर्नेवाला तथा मान प्राप्त गर्ने खालको र बढी तेजी राख्नेवाला, ठूला-ठूला काम गर्दै रहे पनि केही आलस्य मात्रै किसिमको होला।

कु० नं० १२३९

१२ १०
१ ११सू. ९
२ ८
३ ५ ७
४ ६

जुन व्यक्तिको मीन राशिको सूर्य लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस व्यापारको कामबाट धन कमाउने भएको र धनको शक्तिबाट खूब व्यापार गर्नेवाला र प्रभाव शक्तिद्वारा व्यापार तथा धन-सम्पत्तिको वृद्धि गर्नेवाला र स्त्री स्थानमा आंशिक रूपमा केही बन्धन पाउने भएको तथा भोगादि पक्षमा पनि केही बन्धन वा अधिकताको योग पाउने भएको, आफ्नू दैनिक कार्यक्रमको शक्तिबाट जीवनको दिनचर्यामा केही प्रभाव र प्रकाश पाउने भएको, गूढ युक्तिहरूको सम्बन्धमा तथा पुरातत्त्वको सम्बन्धमा पनि प्रकाश मार्ग पाउनेवाला, बहुमूल्य काम गर्ने भएको बहुभोगी होला।

कु० नं० १२४०

१२सू. १०
१ ११ ९
२ ८
३ ५ ७
४ ६

जुन व्यक्तिको मेषराशिको सूर्य लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस ठूलो व्यापार गर्ने भएको, दैनिक कार्यलाई निकै प्रभावका साथ गर्ने भएको र निकै बढी प्रभावशाली स्त्री पाउने भएको, गृहस्थी र दाजु-भाइको शक्तिबाट महानता पाउने भएको, निकै बढी पुरुषार्थ शक्ति राख्ने भएको, स्त्री भोगादिकको अधिकता पाउनेवाला र बर्ता दौड-धूप गर्ने खालको तथा भाग्यमा दुर्बलता पाउने भएको अनि धर्ममा न्यूनता पाउनेवाला र यशमा पनि कमी पाउने र पुरुषार्थको अनुपातमा भाग्यमा शक्तिलाई दुर्बल मान्ने खालको होला।

कु० नं० १२४१

१२ १० १ सू. ११ ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको वृष राशिको सूर्य लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस स्त्री-स्थानबाट केही सुख पाउने खालको, व्यापारको तर्फबाट पनि केही सुख साधन पाउनेवाला, स्त्रीको तर्फबाट मातृस्थानको सम्पर्कमा केही वैमनस्यता पाउनेवाला, स्त्रीका प्रभावको कारणहरूबाट सुखस्थानमा केही न्यूनता अनुभव गर्ने भएको, व्यापारको श्रेणीमा प्रभाव तथा मान-सम्मान प्राप्त गर्नेवाला, ससुराली पक्षबाट मान पाउने भएको, पिता स्थानबाट सहायक सम्पर्क राख्नेवाला, दैनिक व्यापारको तर्फबाट र राज-समाजबाट फाइदा पाउने भएको, उन्नतिको लागि बराबर कर्म गर्न ध्यान राख्ने खालको होला।

कु० नं० १२४२

१२ १० १ ११ ९ २सू. ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मिथुनराशिको सूर्य लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धिको प्रभावबाट व्यापार गर्नेवाला तथा बुद्धिमान स्त्री पाउने खालको प्रभावशाली बाठो सन्तान पाउने भएको र व्यापारिक प्रभावशाली विद्या प्राप्त गर्ने खालको र काम लाग्ने प्रभावबाट कुराकानी गर्नेवाला तथा बुद्धियोगद्वारा खूब लाभ कमाउने भएको र दिमाग भित्र बढी काम-वासनाहरू राख्ने खालको तथा ससुरालीबाट र स्त्रीबाट बुद्धिको सल्लाहद्वारा लाभ पाउनेवाला र छिटो-छिटो बोल्नेवाला अनि लाभ प्राप्तिको लागि बराबर ध्यान, चिन्तन गर्ने भएको र लौकिक एवं दैनिक कार्यहरूको योग्यता सम्वन्धी अनुभव राख्ने खालको होला।

कु० नं० १२४३

१२ १०
१ ११ ९
२ ८
३सू. ५ ७
४ ६

जुन व्यक्तिको कर्कराशिको सूर्य लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस स्त्रीस्थानबाट बढी प्रभावशक्ति पाउने तथा राख्नेवाला एवं स्त्रीसित केही झगडा पाउने भएको र स्त्री र ससुरालीको योगले अनेक झ्याउला र कष्ट-बाधालाई हटाउनमा सहायता पाउने भएको तथा व्यापारमा केही हानि, कष्ट सहने खालको अनि व्यापारकै लाइनमा प्रभाव पाउनेवाला र विपत्तिनाशक प्रभावशाली प्रकाश दिनेवाला, व्यापार गर्नेवाला र शत्रु तथा विपत्तिहरूमा विजय पाउने भएको र विवाहको सम्बन्धमा केही मावलीको पनि सहयोग पाउने अनि बढी व्यय गर्नाले कष्ट पाउने खालको र लौकिक, दैनिक कार्यमा चलिआएका परम्पराको वास्ता नगर्ने बरू त्यसको जरोमा सत्यको खोजी गर्ने खालको होला।

कु० नं० १२४४

१२ १०
१ ११ ९
२ ८
३ ५ ७
४सू. ६

जुन व्यक्तिको सिंह राशिको सूर्य लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस निकै प्रभावशाली व्यापार गर्नेवाला तथा प्रभावशाली स्त्री पाउनेवाला, रोजगारबाट निकै प्रभावशक्ति पाउने भएको, शरीरमा केही कष्ट अनुभव गर्ने, भोगादि पक्षमा निकै प्रभाव र धाक लगाउने खालको, लौकिक र दैनिक कार्यहरूलाई निकै तत्परता र प्रभावका साथ पूरा गर्ने खालको, गृहस्थीमा निकै बढी प्रभाव शक्ति राख्ने भएको, ससुरालीको निकै शक्ति पाउनेवाला, समाजमा चमत्कारिक काम गर्नेवाला र भोगादिको सम्बन्धमा केही अशान्ति पाउने खालको होला।

कु० नं० १२४५

१२ १०
१ ११ ९
२ ८
३ ५सू. ७
४ ६

जुन व्यक्तिको कन्याराशिको सूर्य लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस स्त्री-स्थानमा अशान्ति र क्लेशको योग पाउनेवाला, भोगादिक पक्षमा न्यूनता पाउने भएको, ससुरालीको असहयोग पाउनेवाला, व्यापारको लाइनमा साना-ठूला कष्ट-बाधा र परिश्रम सहने भएको, विदेश आदिको सम्बन्ध पनि व्यापारमा सहने भएको र गृहस्थीको सम्बन्धमा केही विद्रोह र केही कष्ट अनुभव गर्नेवाला, व्यापारको सम्बन्धमा केही गूढ र प्रभावी योजनाहरू द्वारा आफ्नू कार्य सिद्ध पार्ने भएको, धनवृद्धिका लागि निकै परिश्रम र हेर-विचार पुऱ्याउने खालको तथा केही गूढ इन्द्रिय-विकारवाला व्यक्ति होला।

कु० नं० १२४६

१२ १०
१ ११ ९
२ ८
३ ५ ७
४ ६सू.

जुन व्यक्तिको तुला राशिको सूर्य लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस स्त्री पक्षबाट भाग्यमा दुर्बलता अनुभव गर्नेवाला, व्यापार तर्फबाट पनि भाग्यमा दुर्बलता अनुभव गर्ने खालको र धर्मको पालनमा पनि कमजोरीकै योग पाउने भएको, भाग्यको दुर्बलताले अशान्ति पाउनेवाला, भाग्यको उन्नतिमा गृहस्थीको दैनिक कार्यले बाधा पाउने भएको, पुरुषार्थको उन्नति गर्नेवाला, भाग्यभन्दा पुरुषार्थलाई नै महत्व दिनेवाला, भाइ-बहिनीको शक्ति पाउनेवाला, भोगादिक पक्षमा न्यूनता पाउने भएको, लौकिक र धार्मिक कामहरूमा संगसंगै चल्नाले दुवैमा एउटाको पनि राम्ररी पालन गर्न नसक्ने खालको होला।

कु० नं० १२४७

| | | |
|---|---|---|
| | १२ / ११ / १० | |
| १ | २ / ८ | ९ |
| ३ | ४ / ५ / ६ | ७सू. |

जुन व्यक्तिको वृश्चिक राशिको सूर्य लग्नबाट दसौं स्थानमा छ भनें त्यो मानिस दैनिक व्यापारलाई काइदासाथ र निकै प्रभावी यत्नपूर्वक गर्नेवाला, व्यापारको कामबाट नै ठूलो प्रभाव र सम्मान पाउने भएको, स्त्री र ससुरालीको शक्तिबाट पनि मान पाउने भएको, प्रभावशाली स्त्री र भोग पाउनेवाला र पिता स्थानबाट व्यापार तथा प्रभाव पाउने भएको र राज्यस्थानमा मान पाउनेवाला ठूलो इन्तजाम सहित काम गर्नेवाला तथा लौकिक र सामाजिक कार्यहरू निकै शानदारी एवं प्रभावसहित गर्नेवाला, अनि गृहस्थी भित्र निकै ठूलो गौरव प्राप्त गर्ने भएको तथा सबैतिर आफ्नू प्रभाव राख्नेवाला, मातृस्थान र सुखस्थानमा केही न्यूनता पाउने खालको होला।

कु० नं० १२४८

| | | |
|---|---|---|
| | १२ / ११ / १० | |
| १ | २ / ८सू. | ९ |
| ३ | ४ / ५ / ६ | ७ |

जुन व्यक्तिको धनु राशिको सूर्य लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारमा खूब धन कमाउने र व्यापारमा प्रभाव पाउनेवाला,

कु० नं० १२४९

१२ १०
१ ११ ९सू.
२ ८
३ ५ ७
४ ६

स्त्री स्थानबाट निकै बढी शोभा पाउनेवाला तथा स्त्री र ससुरालीको कारणले पनि बढी प्रभावका साथ धनलाभ पनि पाउने भएको, भोगादिक पक्षमा धेरै लाभ र प्रभाव पाउनेवाला, सन्तानको लाभ पाउने अनि विद्याको लाभ पाउने भएको र बढी लाभ प्राप्तिको सम्बन्धमा निकै प्रभावले कुराकानी गरेर लाभ पाउने भएको, गृहस्थीको अनुपम लाभ पाउनेवाला तथा लौकिक कार्यहरूमा बर्ता प्रवीणता र प्रभाव राख्ने तथा मस्तिष्कमा तेजी राख्ने खालको होला।

जुन व्यक्तिको मकरराशिको सूर्य लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानमा हानि पाउने र व्यापारमा पनि हानि नै पाउनेवाला तथा

कु० नं० १२५०

१२ १०सू.
१ ११ ९
२ ८
३ ५ ७
४ ६

भोगादि पक्षमा बढी न्यूनता भेट्टाउने भएको, गृहस्थीमा बर्ता हानि र अशान्ति पाउने खालको र प्रभावमा कमी पाउनेवाला अनि व्यापारको सम्बन्धमा अन्य स्थानको केही कटु सम्बन्ध पाउने भएको र खर्च स्थानमा केही बढी कटुता पाउने खालको तथा भोगादि पक्षमा केही अन्य स्थानको भर-थेग पाउनेवाला, शत्रु स्थानमा प्रभाव राख्ने भएको, विपत्तिहरू र रोगादिक बाधा-कष्टमा विजय पाउने भएको र लौकिक कामहरूमा चातुर्यको न्यूनता (कमी) पाउने खालको व्यक्ति होला।

# कुम्भलग्नान्तर–चन्द्रफलम्

जुन व्यक्तिको कुम्भराशिको चन्द्रमा लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस शत्रु पक्षमा मनोयोगको शक्तिले सम्मान पाउनेवाला तथा शरीरमा केही रोग र कष्ट-बाधा तथा मनमा केही विकार अनि शक्ति भेट्टाउनेवाला र मावली पक्षबाट केही शक्ति पाउने भएको, मनोयोगका बाङ्गा र आदर्श शक्तिको बल आफूभित्र राख्नेवाला र केही बाधित वा घेराउमा रहनेवाला तथा स्त्रीसित केही मानसिक झगडा-विवाद कष्टदायक योग पाउने भएको र रोजगारको लाइनमा केही मनोयोगमा गुप्त चातुर्यहरू र परिश्रमले काम सिद्ध पार्ने भएको, केही झ्याउलोले भरिएको तर प्रभावशाली गुप्त क्रोध राख्ने खालको होला।

कु० नं० १२५१

१२ १० १ ११चं. ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मीन राशिको चन्द्रमा लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस मनोयोगको महान् शक्तिको बलले धन प्राप्त गर्ने भएको, धन संग्रह गर्न जान्ने, अनेक युक्तिहरूले र कठोर परिश्रमले इज्जत बनाउनेवाला, धन स्थानमा कहिले-काहीं केही हानिको पनि योग पाउने भएको र धनाढ्य मावली पक्षवाला तथा कुटुम्बमा केही विग्रह पाउनेवाला, धनको प्रभावद्वारा अर्थात् धनाढ्य जस्तै काइदाले शत्रुमा प्रभाव राख्ने भएको, मनभित्र केही बन्धन र कष्ट-बाधाको योग पाउने भएको अनि आयुको समयलाई निकै शानले व्यतीत गर्ने भएको तथा पुरातत्त्वको सम्बन्धमा मनोयोगको गूढ शक्तिद्वारा काम सिद्ध पार्नेवाला र झञ्झटहरूबाट फाइदा प्राप्त गर्ने खालको होला।

कु० नं० १२५२

१२चं. १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मेषराशिको चन्द्रमा लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस मनोयोगको बलले महान् पुरुषार्थ गर्ने भएको अनि ठूलो उत्साही

कु० नं० १२५३

१२　१०
१ चं.　११　९
२　८
३　५　७
४　६

परिश्रमद्वारा निकै बर्ता प्रभाव पाउने भएको र प्रभावको शक्तिले शत्रुलाई थिच्न जान्ने खालको तथा बढी साहस र बाँगा उपायहरू द्वारा उन्नतिको शिखरमा उक्लनेवाला, दाजु-भाइको पक्षमा वैमनस्यता पाउने भएको तथा भाग्योन्नतिका लागि निकै कठोर परिश्रम र प्रभावले काम सिद्ध पार्न जान्ने तथा धर्मको सम्बन्धमा पूर्णरूपेण ध्यान राख्ने, उन्नतिको महान् उत्साह हृदय भित्र राख्ने भएको तथा बढी दौड-धूप गर्ने र शक्ति सम्पन्न व्यक्ति होला।

जुन व्यक्तिको वृषराशिको चन्द्रमा लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस शत्रुपक्षको कत्ति पनि वास्ता नगर्ने खालको, सुख-शान्तिमा केही

कु० नं० १२५४

१२　१०
१　११　९
२चं.　८
३　५　७
४　६

बाधाहरू पाउने भएको अनि मातृस्थानमा केही मनोयोगको विशेष झ्याउलो बोक्ने खालको तथा केही भूमि स्थानमा प्रभाव पाउनेवाला र मावली पक्षको सुख-शक्तिको अनुभव गर्ने भएको, मान-सम्मान र उन्नतिको सम्बन्धमा मनले दुर्बलता अनुभव गर्ने खालको, व्यापार आदि राज-सम्बन्धमा पनि केही कष्ट-बाधा वा दुर्बलता अनुभव गर्नेवाला, मनोयोग शक्तिको महान् प्रपंचबाट सुख अनुभव गर्ने खालको बडो लापरवाह होला।

जुन व्यक्तिको मिथुन राशिको चन्द्रमा लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षमा केही झञ्झट अनुभव गर्नेवाला, विद्यामा कमी पाउने भएको तथा बुद्धिमा केही परेशानी अनुभव गर्ने खालको, दिमाग भित्र मनोयोगको गूढ शक्तिबाट फाइदा प्राप्त गर्नेवाला, केही बाँगा चालहरू द्वारा प्रभावको रक्षा तथा शत्रुबाट बचाउ पाउने भएको, मन भित्र गुप्त डर र आंशकाहरू पाउने भएको, सबै प्रकारका विपत्तिहरूबाट जोगिनका लागि मन भित्र निकै गहीरो सोच-विचार गर्ने भएको, धन लाभको लागि ठूला-ठूला उपायहरू विचार्नेवाला, अशान्तियुक्त र भ्रमित बुद्धि भएको, यता-उता घुमाएर कुरा गर्ने खालको होला।

कु० नं० १२५५

१२ १० १ ११ ९ २ ८ ३चं. ५ ७ ४ ६

जुन व्यक्तिको कर्क राशिको चन्द्रमा लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस मनोयोगको स्थिर शक्तिले बढी प्रभाव पाउने भएको तथा शत्रुपक्षमा सतर्क, सावधान तथा विजयी रहने खालको, मावली पक्षको शक्तिमा सौन्दर्य देख्नेवाला, मनमा केही बाधा वा निर्भयता पाउने भएको, विपत्तिहरूको वास्ता नगर्ने किसिमको तथा बढी व्यय गर्नेवाला अनि मन भित्र गूढ युक्तिहरूको महान् शक्तिले प्रसन्न तथा निश्चिन्त रहनेवाला र चीसो आगोले काम सिद्ध पार्ने भएको, अन्य स्थानको सम्बन्धमा प्रभाव पाउनेवाला तथा खर्चमा आफ्नू प्रभावले काम लिन जान्ने अनि दानी दुश्मन होला।

कु० नं० १२५६

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४चं. ६

जुन व्यक्तिको सिंहराशिको चन्द्रमा लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस मनोयोगको बलले, कष्ट-बाधाबाट र परिश्रमद्वारा व्यापार गर्ने भएको र स्त्री स्थानमा केही विवाद-झगडा वैमनस्यता तथा केही परेशानीहरू पाउनेवाला अनि स्त्री भोगादिक पक्षमा केही कमी पाउने भएको तर मनोयोगले भोगको बर्ता चिन्तन गर्ने खालको, भोगको सम्बन्धमा केही युक्तिहरूले पनि काम लिनेवाला तथा शरीरमा केही बन्धन वा कष्ट-बाधा पनि अनुभव गर्नेवाला, स्त्री पक्षमा शीतल रोगको लांछना पाउनेवाला र व्यापारको स्थानमा केही परतन्त्रता अथवा केही दुर्बलताको साथसाथै युक्तिहरूले काम गर्न जान्ने खालको व्यक्ति होला।

कु० नं० १२५७

१२ १० १ ११ ९ २ ८ ३ ५चं. ७ ४ ६

जुन व्यक्तिको कन्याराशिको चन्द्रमा लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस शत्रु पक्षमा केही कष्ट-बाधाहरू सहनेवाला, प्रभावमा केही दुर्बलता भए पनि, जीवनको समयलाई केही दुःख सहिरहनु परे पनि प्रभावशाली तुल्याइराख्न जान्नेवाला, केही अलिकति उदर विकारले ग्रसित रहने तथा पुरातत्त्व पैतृक विभूतिमा केही न्यूनता र क्लेश पाउनेवाला, धनको वृद्धिका लागि ठूला-ठूला प्रयत्न गर्ने भएको, मनोबलद्वारा अत्यन्त गूढ युक्तिहरू जान्ने खालको, गुप्त-शक्तिलाई मनभित्र थिचेर राख्नेवाला, मावली पक्षमा हानि पाउने भएको र अशान्त चित्तको व्यक्ति होला।

कु० नं० १२५८

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६चं.

जुन व्यक्तिको तुलाराशिका चन्द्रमा लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यस्थानमा केही चिन्ताग्रस्तको योग पाउने खालको र मनोयोग तथा भाग्यको शक्तिद्वारा शत्रुमाथि प्रभाव राख्न जान्ने भएको र धार्मिक प्रपंचको केही कार्य गर्नेवाला तथा धर्म-कर्मको यथार्थतामा केही न्यूनता वा अपठेराहरू पाउने भएको र मनोयोगको उत्तम तथा बांगिएका उपायहरू द्वारा काम गर्नेवाला, दाजु-भाइ दिदी-बहिनीको पक्षमा केही वैमनस्यता पाउने भएको र मावली पक्षबाट केही उत्तम सहयोग पाउने भएको अनि शत्रुसित मैत्री सम्बन्ध राख्ने खालको होला।

कु० नं० १२५९

१२ १० १ ११ ९ २ ८ ३ ५ ७चं. ४ ६

जुन व्यक्तिको वृश्चिक राशिको चन्द्रमा लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता स्थानबाट निकै अशान्ति अनुभव गर्ने र उन्नतिको बाटोमा अनेक कष्ट र हानिहरू पाइरहने खालको, राज्य, मान-प्रतिष्ठा आदिको स्थानमा अनेक धक्का र आघात सहनेवाला, अनि मातृस्थानमा सुखको सम्बन्धमा तथा भूमि-भवनको विषयमा अनेक प्रपञ्च तथा युक्ति बलले वृद्धि प्राप्त गर्ने भएको अनि सच्चा सहयोगीहरूको कमी र कपटले गर्दा व्यापारको उन्नति हुने बाटोमा बाधा, तगारो र कष्ट सहने खालको र मनोयोगको महान् परिश्रम र युक्तिहरू द्वारा, धेरै हेर-फेरपछि उन्नतिको शिखरमा पुग्नेवाला र शत्रुसित अशान्ति अनुभव गर्ने भएको तथा पूर्व संचित पापहरूको प्रायश्चित गर्ने खालको होला।

कु० नं० १२६०

१२ १० १ ११ ९ २ ८चं. ३ ५ ७ ४ ६

जुन व्यक्तिको धनुराशिको चन्द्रमा लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस मनोयोगको उत्तम परिश्रमबाट बढी लाभ पाउनेवाला र मनोयोगको राम्रो नीति एवं चालहरूले शत्रुलाई थिचेर फाइदा पाउनेवाला अनि मावली पक्षबाट पनि लाभ प्राप्त गर्ने खालको र लाभ तथा प्राप्तिको स्थानमा केही मानसिक झ्याउलो तथा केही कष्ट-बाधा अनुभव गर्ने भएको तथा केही सित्तैको झैं धन खोज्नेवाला र सन्तान पक्षमा केही बाधा-कष्ट अनुभव गर्ने भएको, विद्या स्थानमा केही न्यूनता पाउनेवाला किन्तु बुद्धिद्वारा र चातुर्यले आफ्नू काम सपार्न जान्ने खालको अनि गुप्त चाल चलेर मगन-मन रहने भएको, रोग दोषको कुनै वास्ता नगर्ने खालको होला।

कु० नं० १२६१

१२ १०
१ ११ ९चं.
२ ८
३ ५ ७
४ ६

जुन व्यक्तिको मकर राशिको चन्द्रमा लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस शत्रु स्थानमा न्यूनता भेट्टाउने र प्रभावमा दुर्बलता पाउनेवाला, अनि शत्रु पक्षमा अशान्ति प्राप्तिको डरले गुप्त युक्तिहरू द्वारा काम बनाउने तथा बढी खर्चले बाधा-कष्ट पाउनेवाला, किन्तु तैपनि खर्च स्थानबाट प्रभाव पाउनेवाला, अन्यान्य स्थानबाट र मनोयोगबाट प्रभावको रक्षा गर्दै रहने खालको अनि मावली पक्षमा केही न्यूनता अनुभव गर्ने भएको तथा बाहिरी स्थानमा केही बाधाहरू अनुभव गर्ने भएको तथा मन भित्र अशान्ति र दुर्बलताको योग पाउने खालको र केही झगडा-विवाद आदि र बीमारीहरूमा बढी खर्च गर्ने खालको व्यक्ति होला।

कु० नं० १२६२

१२ १०चं.
१ ११ ९
२ ८
३ ५ ७
४ ६

# कुम्भ लग्नान्तर–भौमफलम्

जुन व्यक्तिको कुम्भराशिको मङ्गल लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस आफ्नू शरीरको पुरुषार्थ बलले उन्नति गर्नेवाला र निकै ठूलो कर्म-शक्ति र साहसले काम सिद्ध पार्नेवाला, दाजु-भाइ र पिताको सम्बन्ध केही सामान्य रूपबाट प्राप्त गर्ने भएको र माताको पक्षमा पनि सामान्य शक्तिलाई केही आलस्यले पाउनेवाला र केही भूमिको शक्ति पनि पाउने खालको व्यापारमा उन्नति गर्न जान्ने र शरीरमा अलिकति गर्मीको विकार पाउने भएको, राज-समाजसित सम्बन्धित केही मान-सम्मान पाउने खालको, स्त्री पक्षमा केही क्लेश र केही सहायता शक्ति प्राप्त गर्नेवाला र केही वीर्य-दोष पाउने भएको र जीवनको दिनचर्यालाई निकै प्रभावसाथ व्यतीत गर्ने भएको तथा मान-सम्मान पाउनेवाला र केही पुरातत्त्वको शक्ति पाउने खालको होला।

कु० नं० १२६३

१२ १० १ ११मं. ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मीन राशिको मङ्गल लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस इज्जत प्राप्त गर्नेवाला पिताको केही शक्तिको सहारा पाउनेवाला र दाजु-भाइको केही बन्धन झैं पाउनेवाला र धन प्राप्तिको लागि ठूला-ठूला शक्तिशाली कर्म र परिश्रम गर्नेवाला अनि धर्म-कर्मको केही विचार राख्नेवाला, जीवनको दिनचर्यामा मान-प्रतिष्ठा आदिको ध्यान राख्ने भएको र विद्या-शक्ति प्राप्त गर्ने खालको तथा केही सन्तान शक्ति भेट्टाउने किसिमको, बुद्धि र वाणीद्वारा उन्नतिको लागि निकै प्रभाव र शान्तिले काम पूरा गर्नेवाला र भाग्यको उन्नतिको लागि पूरा प्रयत्न सदैव गर्दै रहने खालको होला।

कु० नं० १२६४

१२मं. १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मेष राशिको मंगल लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्ना पिताको महान शक्ति पाउने भएको र राज-समाजमा

कु० नं० १२६५

१२ १० १ मं. ११ ९ २ ८ ३ ५ ७ ४ ६

निकै ठूलो हुकूमत र प्रभाव राख्ने खालको अनि उन्नति गर्नको लागि स्थिर परिश्रम-द्वारा महान् कर्म गर्न जान्ने भएको र राज्यको शक्तिलाई आफ्नू हातले नै संचालन गर्नेवाला, मावली पक्षमा केही कमजोरी पाउनेवाला र गुप्त शक्तिले शत्रुलाई पराजित पार्ने खालको, धर्म-कर्मको पालन गर्ने भएको तथा दाजु-भाइको शक्ति पाउने, बल पुरुषार्थको वृद्धि पाउने भएको र लामा बाहुली हुने तथा तीव्र र तीक्ष्ण गतिले सारा काम गर्ने भएको, धर्म-कर्म भाग्यलाई अलि-अलि मात्रै खालको निकै प्रतापी र पुरुषार्थी होला।

जुन व्यक्तिको वृषराशिको मङ्गल लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आफ्नू पिताको सहायक शक्ति पाउनेवाला र माता दाजु-भाइको

कु० नं० १२६६

१२ १० १ ११ ९ २मं. ८ ३ ५ ७ ४ ६

अलिकति सुख प्राप्त गर्नेवाला र आफ्नै पुरुषार्थ कर्मले बिस्तार-बिस्तार घरै बसेर उन्नति गर्ने भएको, राज-समाजमा निकै मान-प्रतिष्ठा पाउने भएको, भूमि भवनको स्वामी भएको र निकै सुख पाउने खालको, कार्य र व्यवहार गर्न जान्ने तथा प्रभावशाली व्यापार गर्ने भएको, स्त्री पक्षमा प्रभाव राख्न जान्ने, स्त्रीबाट प्रभाव पाउने भएको र आफ्ना उत्तम एवं सुखद कर्मद्वारा आमदानीमा वृद्धि गर्ने खालको निकै प्रभावशाली होला।

जुन व्यक्तिको मिथुन राशिको मङ्गल लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस राजसी विद्याको ज्ञान राख्नेवाला र पिता एवं दाजु-भाइको थोरै सहयोग पाउने र खर्च बढी गर्ने खालको, मस्तिष्क भित्र तेजी र हुकूमत राख्ने भएको, सामान्य तथा उत्तम लाभ पाउने भएको, जीवनको दिनचर्यामा निकै गौरव र प्रभाव मान्ने खालको, सन्तानबाट केही शक्ति पाउने भएको, कानूनका कुरा गर्ने र अन्यान्य स्थानको सम्पर्कमा निकै मान-सम्मान र प्रभाव पाउनेवाला, पुरातत्त्वसित सम्बन्धित केही फाइदा हात पार्ने र शीलको पालन गर्न नसक्ने खालको होला।

कु० नं० १२६७

जुन व्यक्तिको कर्कराशिको मङ्गल लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस पिता र दाजु-भाइको सम्बन्धमा विरोध र अशान्तिको योग पाउने भएको, केही परतन्त्रतापूर्वक धर्म-कर्म गर्न जान्ने भएको र गुप्त रहेका दुर्बल शक्तिको बल राख्नेवाला र दुश्मनलाई धोखाले मार्ने खालको, मावलीबाट दुर्बलता पाउने भएको, बढी धन व्यय गर्नेवाला, सम्मान र पदोन्नतिमा बाधा र अनेक झ्याउला पाउने भएको, शरीरमा थकान र मान पाउनेवाला, भाग्यको उन्नतिका लागि विशेष ध्यान राख्ने र उपाय गर्दै रहने भएको र बाहिरी स्थानमा केही इज्जत पाउनेवाला र उत्साहमा न्यूनता र आलस्यको योग पाउने खालको, महान् घुमेका र बाँगा युक्तिहरू प्रयोग गर्ने खालको होला।

कु० नं० १२६८

जुन व्यक्तिको सिंहराशिको मङ्गल लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो सम्मान प्राप्तिको व्यापार व्यवसाय गर्ने भएको र व्यापार भित्र स्थायी इज्जत प्राप्त गर्दै रहने खालको तथा राज र समाजको शक्ति तथा दाजु-भाई दिदी-बहिनीको योग पाउनेवाला तथा निकै व्यवस्थापूर्वक काम गर्न जान्ने र आफ्नू कार्य-प्रणाली भित्र केवल हुकूम चलाएर काम बनाउने र शरीरमा थकाई, आलस्य पाउने खालको अनि पिताको सहायक शक्तिबाट सम्बन्ध पाउने भएको, धन वृद्धिका लागि निकै ठूलो, शक्तिको प्रयोग गर्न जान्ने खालको र स्त्री स्थानमा प्रभाव राख्ने भएको अनि स्त्रीबाट नै प्रभाव पाउनेवाला र व्यापारको क्रममा प्रतिदिन बढी परिश्रम गरेर महान् सफलता प्राप्त गर्ने भएको अनि निकै बाठो खालको व्यक्ति होला।

कु० नं० १२६९

१२ १० १ ११ ९ २ ८ ३ ५मं. ७ ४ ६

जुन व्यक्तिको कन्याराशिको मङ्गल लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा हानि पाउने र दाजु-भाइ दिदी-बहिनीको क्षीण शक्ति पाउनेवाला र महान् परिश्रमको काम गर्ने भएको अनि विदेश आदिको योगबाट अनेक कष्ट-बाधा सहेर पनि आफ्नू शक्ति पाउने र धेरै ठूलो परिश्रमको योगबाट आमदानीमा वृद्धि पाउने खालको तथा गुप्त गूढ युक्ति-बलले उन्नति गर्न जान्ने र साहस-हिम्मत पाउने तथा धनको शक्ति भेट्टाउने र मान-प्रतिष्ठामा कमी पाउने र शरीरमा बल वृद्धिका लागि पनि साधना गर्दै रहनेवाला, परिश्रमको काममा बराबर लागिरहने खालको तथा जीवनको दिनचर्यामा निकै प्रभाव राख्नेवाला र रहन-सहनको लुगा र पोशाक आदिमा न्यूनता पाउने खालको होला।

कु० नं० १२७०

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६मं.

जुन व्यक्तिको तुलाराशिको मङ्गल लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस निकै भाग्यशाली र भाग्य-शक्तिबाट अनि पुरुषार्थ शक्तिको उन्नतिको योग पाउनेवाला तथा भाग्य र पुरुषार्थद्वारा नै कार्य-व्यापारमा उन्नति गर्ने भएको र धर्म-कर्मको पालन राम्ररी गर्ने खालको तथा बढी धन खर्च गर्नेवाला र बाहिरी अन्यान्य स्थानहरूको सम्पर्कबाट मानोन्नति र व्यापारमा उन्नतिको योग पाउने खालको र सुख एवं भवन-भूमिको शक्ति पाउने भएको, दाजु-भाइ दिदी-बहिनीको योग पाउने र पितास्थानको शक्तिबाट ठूलो सहारा पाउने भएको, बल-पुरुषार्थको वृद्धिको खूब ध्यान राख्ने खालको तथा राज-समाजमा मान पाउनेवाला र दैवीशक्तिको भर-थेग पाउने प्रभावशाली व्यक्ति होला।

कु० नं० १२७१

१२ १० ९ ११ ९ २ ८ ३ ५ ७मं. ४ ६

जुन व्यक्तिको वृश्चिक राशिको मंगल लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै प्रतापी तथा स्वतन्त्र कारबार गर्ने भएको, राज-समाजमा निकै ठूलो मान-सम्मान पाउनेवाला, पिताको महान शक्ति भेट्टाउने खालको र राज-समाजको निकै ठूलो काम गर्नेवाला, शरीरमा थकाई र आलस्य पाउने भएको र पुत्र-शक्तिको महानता पाउने भएको, अनेक सुख पाउनेवाला र भवन-भूमिको योग प्राप्त गर्ने खालको तथा निकै ठूलो प्रभाव र हुकुम चलाएर काम बनाउन जान्ने र दाजु-भाइ दिदी-बहिनी आदिको वास्ता नराख्नेवाला र ठूला-ठूला बहुमूल्य पोशाकहरू लगाउने तथा राजसम्बन्धी विद्या ग्रहण गर्ने भएको, मस्तिष्कमा र कुराकानीमा तातो रिस पोख्ने र ऐन-कानून जान्ने खालको होला।

कु० नं० १२७२

१२ १० ९ ११ ९ २ ८मं. ३ ५ ७ ४ ६

जुन व्यक्तिको धनुराशिको मङ्गल लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारमा निकै बढी आमदानी कमाउने भएको, पिताबाट बर्ता फाइदा पाउनेवाला, राज-समाजबाट खूब लाभ प्राप्त गर्ने खालको, दाजु-भाइको शक्ति पाउनेवाला, पुरुषार्थ कर्मको प्रभावले ठूला-ठूला उत्तम लाभ पाउनें खालको र धन संग्रह गर्नका लागि निकै बढी र बलियो शक्तिको प्रयोग गर्न जान्ने र बुद्धिमान् तीक्ष्णता राख्ने तथा सन्तान प्राप्त गर्ने भएको, मावली पक्षमा न्यूनता (कमजोरी) पाउने तथा शत्रुस्थानमा गुप्त शक्तिबाट विजय पाउने भएको, वस्त्राभूषण आदिको शोभा पाउने भएको तथा मान-सम्मान पाउने प्रभावशाली होला।

कु० नं० १२७३

| | | | |
|---|---|---|---|
| १२ | ११ | १० | ९मं. |
| १ | २ | ८ | ७ |
| ३ | ५ | ४ | ६ |

जुन व्यक्तिको मकरराशिको मङ्गल लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन व्यय गर्ने खालको र पिता स्थानमा बढी हानिको योग पाउने र दाजु-भाइको अलि विचित्र किसिमको सम्बन्ध पाउने भएको, व्यापारमा हानि-नोक्सानी गर्ने र अन्य स्थानमा सफलता पाउने भएको र खर्चको महान् शक्तिबाट अनि अन्यान्य सम्बन्धबाट सम्मान पाउने खालको तथा शत्रुस्थानमा गुप्त शक्तिले काम लिने खालको र मावली पक्षमा दुर्बलता पाउने तथा खर्चको तागतले बल स्फूर्ति पाउने खालको र दैनित व्यापारमा शक्ति पाउनेवाला तथा स्त्री स्थानमा प्रभाव राख्ने भएको तथा स्त्रीबाट प्रभाव पाउने खालको होला।

कु० नं० १२७४

| | | | |
|---|---|---|---|
| १२ | ११ | १०मं. | ९ |
| १ | २ | ८ | ७ |
| ३ | ५ | ४ | ६ |

# कुम्भ लग्नान्तर-बुधफलम्

जुन व्यक्तिको कुम्भ राशिको बुध लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस उत्तम आयु पाउनेवाला, आयुको समय अर्थात् दिनचर्यालाई निकै शानले व्यतीत गर्न जान्ने तथा पुरातत्त्वको संचित शक्तिको फाइदा पाउने खालको, विद्या र बुद्धिको विकास पाउनेवाला अनि सन्तान पक्षमा केही कष्ट-बाधाको साथसाथै राम्रो लाभ पाउनेवाला, विवेक-शक्तिको गूढ युक्तिले महान् बुद्धिमानीको काम गर्ने भएको, निकै गहीरो र गुप्त चालहरूलाई पनि आदर्श बनाएर काममा ल्याउने र शरीरमा केही कष्ट-बाधा सहने भएको र स्त्रीबाट अलिकति बाधासहित मित्रता पाउने खालको र व्यापारमा बढी चातुर्यले आफ्नू काम बनाउन जान्ने खालको होला।

कु० नं० १२७५

१२ १० १ ११बु. ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मीनराशिको बुध लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस विद्यामा कमी पाउनेवाला, सन्तान पक्षमा बन्धन र कमी पाउने भएको, धनको कोषमा न्यूनता पाउने खालको, कुटुम्बमा क्लेश र हानि पाउने भएको र बुद्धि र विवेकको न्यूनताको साथसाथै पुरातत्त्वको गूढ ज्ञानको शक्तिबाट ठूलो दाबी गर्ने खालको र पूर्व संचित धनको हानि पाउने भएको, जीवनको दिनचर्यामा बन्धनहरू भए पनि प्रत्यक्षमा प्रसन्न रहेर समय बिताउने खालको अनि आयुमा वृद्धि र सामान्यता पाउने किसिमको, बुद्धि विद्याको संकीर्ण मार्गबाट जीवन निर्वाह गर्ने तथा बुद्धिको हठ्योग शक्तिद्वारा कुराकानी गर्ने होला।

कु० नं० १२७६

१२बु. १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मेष राशिको बुध लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस बुद्धि विद्याबाट बल प्राप्त गर्ने र सन्तान पाउने तर सन्तान पक्षबाट केही क्लेश पाउने तथा शक्ति भेट्टाउने र दाजु-भाइ दिदी-बहिनीबाट पनि कष्ट पाउनेवाला, आयुमा वृद्धि, पुरातत्त्व शक्तिको लाभ, पाउने खालको र विवेक शक्तिको अतिगूढ ज्ञानले भाग्यको लाभ र उन्नति पाउनेवाला र धर्म-कर्मको प्रदर्शन गर्नेवाला तथा विवेक शक्तिको बलले नै लौकिक र पारलौकिक विषयमा प्रभावपूर्ण बोल्न जान्ने र कहीं पनि आउन-जानको मार्गसम्बन्धी यात्राको विषयमा निकै हिम्मत र बुद्धिले काम लिन जान्ने तथा कसैको पनि वास्ता नगर्ने होला।

कु० नं०-१२७७

१२ ११ १० १ बु. ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको वृषराशिको बुध लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आयुको वृद्धि पाउने र जीवनको समय विवेक र आरामसित नै व्यतीत गर्ने तथा मातृस्थानमा केही रूखो (खस्रो) भाव पाउने भएको, सन्तानको सुखमा केही न्यूनता वा कमी अनुभव गर्नेवाला, भवन-भूमि स्थानमा केही हानि पाउने भएको र पुरातत्त्व शक्तिको पूर्व संचित लाभ पाउने खालको, विद्या ग्रहण गर्नेवाला तथा बुद्धिभित्र गूढ विवेकको शक्तिबाट केही सुख प्राप्त गर्ने भएको, जीवनमा मनोरंजन मनपराउने तथा पिता स्थानमा र सम्मान एवं व्यापारादि उन्नतिको स्थानमा केही कष्ट-साध्य योग पाउने खालको होला।

कु० नं० १२७८

१२ ११ १० १ ९ २बु. ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मिथुन राशिको बुध लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस धेरै थरी विद्या बुद्धि राख्ने खालको तथा सन्तान पक्षमा केही विरोधका साथै शक्ति प्राप्त गर्ने भएको र लामू आयु पाउनेवाला तथा बुद्धिको स्थिर शक्ति र गूढ विवेकद्वारा धनको लाभ पाउने भएको तथा पाश्चात्य सभ्यताको शक्तिले कुराकानी गर्नेवाला, उचित कुराहरूको भित्र गुप्तशक्तिले काम सिद्ध पार्न जान्ने तथा प्रतिपक्षीमा कुराको प्रभाव पार्ने भएको र पुरातत्त्वबाट फाइदा पाउने खालको र जीवनको दिनचर्यालाई बुद्धिले व्यतीत गर्ने खालको तथा मस्तिष्क भित्र केही कष्ट-बाधा सहिरहने खालको व्यक्ति होला।

कु० नं० १२७९

१२ १०
१ ११ ९
२ ८
३बु. ५ ७
४ ६

जुन व्यक्तिको कर्कराशिको बुध लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षमा हानि र क्लेश, झञ्झट सहनेवाला र विद्यामा कमी पाउने र बुद्धिमा व्यथित रहने भएको, जीवनको दिनचर्यामा शील र विवेकले काम लिन जान्ने र आयुमाथि ठूला-ठूला प्रहार सहनेवाला तथा जीवनमा अनेक विघ्न-बाधाहरू सहने भएको र आफ्नू जीवनका समयको बन्धन सहेर अर्कालाई मित्रभावमा मानेर जीवनमा सान्त्वना दिने भएको, बुद्धिको भित्र निकै गूढातिगूढ विवेकको शक्ति राख्ने खालको, केही उदर विकारको बाधा पाउनेवाला, पुरातत्त्व र पूर्वसंचित शक्तिको न्यूनता पाउने र बढी धन खर्च गर्ने खालको होला।

कु० नं० १२८०

१२ १०
१ ११ ९
२ ८
३ ५ ७
४बु. ६

जुन व्यक्तिको सिंहराशिको बुध लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस विद्या ग्रहण गर्नेवाला तथा सन्तान प्राप्त गर्ने भएको र व्यापारको काममा बुद्धि विवेक र परिश्रम एवं गूढ युक्तिहरूले काम सिद्ध पार्ने वाला, पुरातत्त्वको फाइदा पाउने भएको र स्त्री स्थानमा केही व्यथित एवं आशक्ति पाउने भएको, लामू आयु पाउने भएको तथा जीवनको दिनचर्यालाई लौकिक व्यवहार र गृहस्थीका कार्यहरूमा व्यतीत गर्ने भएको तथा मान-सम्मान पाउनेवाला, इन्द्रिय भोगादिक पक्षमा केही कमी र न्यूनता अनुभव गर्ने खालको, दैनिक कार्य-प्रणालीलाई महान् चातुर्यद्वारा पूरा गर्ने भएको, व्यापारमा कहिले काहीं हानि सहनेवाला होला।

कु० नं० १२८१

१२　१०
१　११　९
२　८
३　५बु.　७
४　६

जुन व्यक्तिको कन्याराशिको बुध लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस पुरातत्त्व सम्बन्धी संचित शक्ति प्राप्त गर्ने किसिमको तथा जीवनको दिनचर्यामा अलमस्त र आनन्द अनुभव गर्ने भएको र सन्तान पक्षमा कमी पाउनेवाला, विद्याको पक्षमा पनि न्यूनता पाउने अनि कष्टका साथै दृढता पनि प्राप्त गर्नेवाला, लामू आयु पाउने भएको तथा गूढ युक्तिहरूका साथसाथै सदैव घुमाउरा कुराले आफ्नू प्रभाव दर्शाउने भएको तथा धनको बेवास्तामा विचार गरे पनि आनन्द मान्ने खालको तथा मस्तिष्क र विवेकको शक्तिले धेरै बढी काम गर्ने भएको, कुराकानी गर्दा असत्यलाई पनि सत्यरूपमा साट्न जान्ने भएको निकै बाठो खालको होला।

कु० नं० १२८२

१२　१०
१　११　९
२　८
३　५　७
४　६बु.

जुन व्यक्तिको तुलाराशिको बुध लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस पुरातत्त्व सम्बन्धी ज्ञान र पूर्व संचित धनको लाभ पाउनेवाला तथा

कु० नं० १२८३

१२ १० १ ११ ९ २ ८ ३ ५ ७बु. ४ ६

राम्रो र लामू आयु हुने तथा जीवनको दिनचर्यामा भाग्यमानी कहिने भएको तथा विद्याको माध्यमबाट धार्मिक ज्ञान प्राप्त गर्ने भएको तथा बुद्धि भित्र लौकिक तथा अलौकिक विवेकको महान् शक्तिलाई प्राप्त गर्ने खालको तथा दूरदर्शिता पाउनेवाला तथा धर्म-कर्म पालनको स्थानमा केही कमी पाउने भएको तथा भाग्यको सम्बन्धमा केही चिन्ता पाउनेवाला र दाजु-भाइ दिदी-बहिनीको सम्पर्कमा केही कष्ट-बाधा अनुभव गर्ने भएको र बोल-चालमा सज्जनता दर्शाउने भएको तथा सन्तानवाला र निकै बाठो होला।

जुन व्यक्तिको वृश्चिक राशिको बुध लग्नबाट दसौं छ भने त्यो मानिस लौकिक विद्याको शक्ति पाउने भएको तथा सन्तान-शक्ति प्राप्त गर्ने भएको

कु० नं० १२८४

१२ १० १ ११ ९ २ ८बु. ३ ५ ७ ४ ६

तथा लामू आयु पाउने भएको तथा जीवनको दिनचर्यालाई निकै प्रभावका साथ व्यतीत गर्नेवाला तथा पिता स्थानमा हानि पाउनेवाला तथा व्यापारमा अलि-अलि कष्ट-बाधा सहन गर्ने भएको राज-स्थानमा केही परेशानीका थोरै योग पाउने भएको तथा मातृ-स्थानमा पनि अलिकति बाधा र कष्ट-अनुभव गर्ने भएको अनि बुद्धि तथा विवेकको महान् शक्ति र गुप्त युक्तिहरू द्वारा सामान्य परिश्रम गरेर मान-सम्मानको उन्नति वा समाजमा निकै प्रतिष्ठा प्राप्त गर्न सक्ने खालको व्यक्ति होला।

जुन व्यक्तिको धनुराशिको बुध लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस विद्याग्रहण गर्ने भएको र सन्तानको लाभ पाउनेवाला अनि पूर्वसंचित धनको पनि विशेष लाभ पाउने भएको र पुरातत्त्वको गूढ युक्तिहरू द्वारा तथा बुद्धि विवेकको योग्यताले बढी लाभ पाउनेवाला अनि आयुको राम्रो लाभ पाउने भएको र जीवनको दिनचर्यामा लाभ र मनोरंजनको आनन्द विवेक-शक्तिद्वारा प्राप्त गर्ने भएको, निकै चातुर्यले कुराकानी गर्न जान्ने खालको अनि कुरैकुरामा आफ्नू काम सिद्ध पार्नेवाला र आफ्नू यथार्थ लाभको सम्बन्धमा केही न्यूनता अनुभव गर्ने खालको तर जीवन निर्वाहक शक्तिको तर्फबाट निस्फिक्री पाउने खालको होला।

कु० नं० १२८५

| | | |
|---|---|---|
| १२ | | १० |
| १ | ११ | ९बु. |
| २ | | ८ |
| ३ | ५ | ७ |
| ४ | | ६ |

जुन व्यक्तिको मकर राशिको बुध लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस सन्तानको हानि पाउने खालको तथा विद्यामा न्यूनता पाउने भएको र आयुमा केही दुर्बलताको योग पाउनेवाला तथा पूर्वसंचित पुरातत्त्वको कमजोरी पाउने खालको र बढी धन खर्च गर्नेवाला, जीवनको दिनचर्यामा अशान्ति अनुभव गर्नेवाला, कुराकानी गर्दागर्दै केही गुप्त विवेकको दुर्बल शक्तिद्वारा काम लिन जान्ने र प्रभावमा केही न्यूनता अनुभव गर्ने भएको तथा खर्चको र अन्य स्थानको सम्पर्कमा केही विघ्न-बाधा र केही सहायता पाउनेवाला अनि शत्रुपक्षमा समभाव राख्ने खालको होला।

कु० नं० १२८६

| | | |
|---|---|---|
| १२ | | १०बु. |
| १ | ११ | ९ |
| २ | | ८ |
| ३ | ५ | ७ |
| ४ | | ६ |

# कुम्भ लग्नान्तर-गुरुफलम्

जुन व्यक्तिको कुम्भराशिको गुरु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस देहको योग र परिश्रमद्वारा धनको शक्ति वा आमदानी प्राप्त गर्ने भएको अनि शरीरको मान-सम्मान र इज्जत प्राप्त गर्ने खालको अनि सन्तानको लाभ प्राप्त गर्नेवाला, विद्या प्राप्त गर्नेवाला कुराकानी गर्दा अभिमान साथ आफ्नू स्वार्थका कुरा मात्र गर्ने किसिमको र बुद्धिद्वारा लाभ प्राप्त गर्न जान्ने तथा धर्मको सम्बन्धमा लाभ र ज्ञान पाउने भएको, भाग्यको उन्नति गर्न जान्नेवाला, व्यापारबाट लाभ कमाउने भएको, स्त्री स्थानमा पनि धन पाउने खालको, विपत्तिको परिस्थितिमा पनि आवश्यकताहरूको पूर्ति गर्ने र केही बन्धनयुक्त होला।

कु० नं० १२८७

१२ १० १ ११गु. ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मीन राशिको गुरु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धेरै धनवान् तथा प्रसस्त लाभ पाउने भएको र आमदानी जोर्ने हृदयबाट नै चेष्टा गर्ने र धनी मावलीको योग पाउने भएको, शत्रु स्थानमा बढी प्रभाव राख्ने, धन प्राप्तिका लागि ठूलो कारबार र बढी प्रपंच एवं परिश्रम गर्नेवाला, पिता स्थानबाट धेरै फाइदा उठाउनेवाला, राजकाज र समाजमा लाभ र इज्जत पाउने भएको, आयु स्थानमा बढी प्रतिष्ठाले समय व्यतीत गर्ने खालको, प्रभावशाली कुटुम्ब भएको प्रतिष्ठित व्यक्ति होला।

कु० नं० १२८८

१२गु. १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मेषराशिको गुरु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस पुरुषार्थले धन कमाउने भएको र निकै प्रभावी ढङ्गले व्यापार गर्न जान्ने र व्यापारमा खूब नाफा कमाउने खालको, ससुरालीबाट पनि धनको केही सहायता पाउने भएको र स्त्रीमा सौन्दर्य र स्त्रीबाट धेरै सहायता पाउने खालको, दाजु-भाइको सहायता पाउनेवाला, निकै मूल्यवान परिश्रम गर्नेवाला, धर्म-कर्मको पालन गर्ने भएको, अनेक थरिका लाभ वस्त्र आभूषण, धन इत्यादि प्राप्त गर्ने खालको, भाग्यको उन्नति पाउनेवाला, स्त्रीको भोग सम्बन्धी विषयमा हृदयको केही बढी आसक्ति राख्ने खालको सौन्दर्य प्रेमी होला।

कु० नं० १२८९

१२ १० १ गु. ११ ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको वृषराशिको गुरु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस धन संग्रह गर्ने र धनैबाट इज्जत पाउनेवाला, जीवनको दिनचर्यामा धन-शक्तिको कारणले, आमोद-प्रमोद पाउनेवाला, खर्च कम गर्ने बराबर चेष्टा गरिरहने भएको, पुरातत्त्वसित सम्बन्धित लाभ पाउने र राज-समाजबाट लाभ र इज्जत पाउने खालको, धनले नै गर्दा सुख प्राप्त गर्ने भएको, भूमि-भवनको शक्तिबाट बढी लाभ प्राप्त गर्ने भएको र मातृपक्षमा केही बन्धन र केही लाभ पाउने भएको अनि सुखपूर्वक धन र लाभको वृद्धि गर्ने खालको होला।

कु० नं० १२९०

१२ १० १ ११ ९ २गु. ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मिथुन राशिको गुरु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस धेरै बढी बुद्धिमान तथा विद्या संग्रह गर्ने भएको र सन्तान-शक्ति पाउने खालको, विद्याबाट धन-शक्ति प्राप्त गर्नेवाला, बुद्धि र वाणीद्वारा धेरै बढी मूल्यवान कुरा गर्ने खालको भाग्यको उन्नति पाउने भएको, खूब लाभ पाउनेवाला, शरीरको शक्ति प्राप्त गर्ने र धर्म-कर्मको इज्जत गर्ने खालको, बढी ढाँचा देखाउने भएको, सन्तानबाट धनको सहायता पाउनेवाला, हृदय र धनको शक्तिले विद्या भित्र केही विशेष कला वा चातुर्य प्राप्त गर्ने खालको होला।

कु० नं० १२९१

१२ १० १ ११ ९ २ ८ ३गु. ५ ७ ४ ६

जुन व्यक्तिको कर्कराशिको गुरु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस धन-शक्ति पाउनेवाला र मावलीको प्रभाव पाउने खालको, खर्चमा न्यूनताको योग पाउने भएको, धनको दुरुपयोग गर्ने खालको, धन-शक्तिले ठूलो प्रभाव कमाउनेवाला, अकस्मात् कहिले सित्तैंको धन पाउने भएको, धन प्राप्तिको सम्बन्धमा प्रभावशाली र बढी परिश्रम गर्ने भएको, उल्टो र संकीर्ण युक्तिले खर्च गर्ने खालको, उन्नतिका लागि र सम्मान वृद्धिका लागि धन र परिश्रमको तागतले काम गर्ने भएको, राज र समाजबाट केही फाइदा प्राप्त गर्नेवाला, अन्यान्य स्थानबाट संकीर्ण सम्बन्ध राख्ने भएको ठूलो प्रपंचले फाइदा प्राप्त गर्ने खालको होला।

कु० नं० १२९२

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४गु. ६

जुन व्यक्तिको सिंहराशिको गुरु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस धनको तागतले निकै ठूलो व्यापार गर्ने खालको अनि व्यापारबाट खूब धन कमाउनेवाला र ससुरालीबाट विवाहको केही दिनपछि धनको वृद्धि पाउनेवाला अनि भोग-विलाससित सम्बन्धित अनेक थरिका लाभ र अनेक पदार्थ प्राप्त गर्ने खालको, गृहस्थीको उत्तमता भित्र बेसरी धनको आनन्द भोग्ने भएको र दाजु-भाइ दिदी-बहिनीको शक्ति पाउनेवाला, तोकिएको आमदानी पर्याप्त रूपमा प्राप्त गर्ने खालको, ठूलो बन्ने फाइदाबाट र दैनिक कर्मको योगले बढी आमदानी पाउनेवाला, धन कमाउने निकै बाठो, पुरुषार्थी होला।

कु० नं० १२९३

१२ १० १ ११ ९ २ ८ ३ ५गु. ७ ४ ६

जुन व्यक्तिको कन्याराशिको गुरु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस धन-जनको हानि पाउने भएको, आमदानीको लागि कठोर परिश्रम र परदेश यात्रा आदिको योग पाउनेवाला तर पुरातत्त्वसित सम्बन्धित गूढ धनशक्ति प्राप्त गर्ने भएको, खर्चमा कमीको योग र केही गुप्त खर्चको योग पाउने खालको, धनको तथा परिश्रमको तागतले सुखको वृद्धि गर्नका लागि हृदयबाट नै चेष्टा गर्ने भएको, अन्यान्य स्थानहरूको सम्पर्कमा केही न्यूनता वा संकीर्णता पाउने खालको, आयुमा केही वृद्धि र सम्मान पाउने भएको, धनको सहायता बेला-बेलामा प्राप्त गर्दै रहने खालको होला।

कु० नं० १२९४

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६गु.

जुन व्यक्तिको तुला राशिको गुरु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यको बलले धन प्राप्त गर्ने खालको र आमदानी पनि भाग्य एवं धर्मको सहायताले नै पाउनेवाला तथा हृदयले धर्म-कर्मको ध्यान राख्ने र दाजु-भाइको शक्ति पाउनेवाला, सन्तानलाभ र विद्या बुद्धि एवं चातुर्य प्राप्त गर्नेवाला, लोक र परलोक दुवैको ध्यान राख्नेवाला, बल पुरुषार्थको शक्ति पाउने खालको, हृदय भित्र भाग्य शक्तिको आंशिक दुर्बलता अनुभव गर्ने भएको, अनि धन लाभका कारणहरू द्वारा वा भाग्यबलले धन प्राप्त गर्नेवाला, धनको नै कारणले शरीरमा केही बन्न झैं अनुभव गर्नेवाला स्वाभिमानी होला।

कु० नं० १२९५

१२ १० १ ११ ९ २ ८ ३ ५ ७गु. ४ ६

जुन व्यक्तिको वृश्चिक राशिको गुरु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस धेरै ठूलो व्यापार गर्ने भएको र निकै बढी धन कमाउने खालको अनि धेरै ठूलो इज्जत भएको तथा महान् इज्जतको साथसाथै आमदानी पाउनेवाला, राज-समाजबाट बढी फाइदा र मान-सम्मान प्राप्त गर्ने भएको तथा पिताको महान् शक्ति पाउने किसिमको अनि मातृ-स्थानको केही भर-थेग भेट्टाउने र शत्रु स्थानमा र अल्झोहरू पन्छाउनमा निकै बर्ता प्रभाव पाउने खालको अनि मावली पक्षमा बर्ता प्रभाव पाउने भएको र विशेष धन प्राप्त गर्नको लागि हृदय शक्तिले महान् कर्म गर्नेवाला एवं हृदयभित्र निकै ठूलो गौरव अनुभव गर्ने खालको होला।

कु० नं० १२९६

१२ १० १ ११ ९ २ ८गु. ३ ५ ७ ४ ६

जुन व्यक्तिको धनुराशिको गुरु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धेरै बढी आमदानी स्वतः पाउनेवाला र धनको शक्ति पनि स्वतः पाउने भएको अनि हृदय-भित्रको महान् स्थिरताद्वारा सिद्धि प्राप्त गर्ने भएको, हृदयमा महान् सन्तोष पाउनेवाला सन्तान लाभ पाउने खालको, निकै बढी मूल्यवान् परिश्रम गर्नेवाला र बल एवं पुरुषार्थ पाउने भएको, दाजु-भाइ दिदी-बहिनी धेरै भएको, उत्तम र उज्ज्वल व्यापार गर्नेवाला ससुराली र स्त्रीबाट धनको सहायता शक्ति पाउने भएको तथा व्यापार र स्त्री मनद्वारा चिन्तन गरेर धनको तागतले उन्नति पाउने खालको र स्थिर हृदयको तागतले बुद्धि र विद्यामा कला पाउनेवाला इज्जतदार मनमोजी होला।

कु० नं० १२९७

१२ १० १ ११ ९गु. २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मकर राशिको गुरु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस धनको कमी र हानि पाउनेवाला, धन प्राप्तिको लागि अन्यान्य स्थानको संकीर्ण सम्पर्क पाउने भएको र खर्चमा कमीको योग पाउनेवाला, गुप्त र गलत काइदाले पनि धन खर्च गर्ने भएको, गुप्त रीतिको खर्चशक्ति द्वारा अर्थात् अर्कालाई लोभ देखाएर पनि धन प्राप्त गर्ने भएको र शत्रु स्थानमा र विपक्षीहरूमा धनको प्रभाव पार्न जान्ने खालको, कुटुम्बमा कमी र क्लेश पाउने भएको र अनेक सुख प्राप्तिका साधन धेरै प्रकारले उत्पन्न गर्नेवाला, भवन-भूमि आदिबाट फाइदा पाउने भएको, घुमाउरा उपायहरूबाट वा मावलीबाट फाइदा पाउनेवाला, जीवनको दिनचर्यामा धनाढ्य र वस्त्राभूषणबाट निर्धनको योग पाउने खालको होला।

कु० नं० १२९८

१२ १०गु. १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

# कुम्भ लग्नान्तर-शुक्रफलम्

जुन व्यक्तिको कुम्भ राशिको शुक्र लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस भाग्य शक्तिले ठूलो सुख भोग्नेवाला, माताको उत्तम र आदर्श

कु० नं० १२९९

१२ १० १ ११शु. ९ २ ८ ३ ५ ७ ४ ६

सुख प्राप्त गर्ने भएको अनि भूमि-भवनको शक्ति पनि पाउनेवाला, खान-पान एवं वस्त्र इत्यादि सुखद पदार्थलाई सदैव स्वतः वेला-मौकामा प्राप्त गर्ने खालको, धर्म-कर्मको उत्तम पालन गर्नेवाला, दैवी सहायता तथा यश प्राप्त गर्नेवाला र शरीरमा सम्मान सज्जनता तथा उत्तम चातुर्यको कला आदि विभूतिहरू पाउने भएको र दैवी गुणहरूलाई जान्ने खालको, दूरदर्शिता राख्ने खालको र गृहस्थीको सम्बन्धमा स्त्री-सुख र व्यापारको शक्तिलाई केही वैमनस्यताद्वारा नै पाउने खालको होला।

जुन व्यक्तिको मीन राशिको शुक्र लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन प्राप्त गर्नेवाला, धनको वृद्धिमा नै सुख सौभाग्यको महानता

कु० नं० १३००

१२शु. १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

अनुभव गर्ने खालको अनि धेरै कुटुम्ब हुने, भवन-भूमि भएको, भाग्यको महानता पाउने खालको, धर्म संचय गर्न जान्ने, भाग्यको सहायताले कोष वृद्धि पाउने भएको तथा जीवनको दिनचर्यामा केही न्यूनता अनुभव गर्नेवाला अनि धन-वृद्धिका लागि महान् चातुर्यले काम सिद्ध पार्ने भएको, सुख-शान्तिको सम्बन्धमा केही बन्धन र केही वृद्धिको योग पाउनेवाला र पुरातत्त्व शक्तिको सम्बन्धमा केही दुर्बलता ठान्ने खालको माननीय व्यक्ति होला।

जुन व्यक्तिको मेषराशिको शुक्र लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस पुरुषार्थ शक्तिद्वारा सुखपूर्वक भाग्यको उन्नति गर्ने भएको, धर्म-कर्मको पालन गर्ने र भूमि-भवनको सम्पत्ति पाउने, धेरै दाजु-भाइ दिदी-बहिनी हुने भएको र मातृ-स्थानको शक्ति पाउनेवाला, राम्रो कद-काठीको, बर्ता चातुर्य र दूरदर्शिता राख्ने र यश प्राप्त गर्नेवाला तथा दैवी शक्तिको सहयोग पाउने भएको र भाग्यबललाई बुझ्ने भएको, अनि प्रभाव शक्ति राख्ने भएको र न्याय शक्तिद्वारा काम सिद्ध पार्न कुशल अनि इहलोक र परलोक दुवै पालन गर्ने खालको, थोरै धनले धेरै काम गर्ने शान्तिप्रिय व्यक्ति होला।

कु० नं० १३०१

१२ १० १ शु. ११ ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको वृषराशिको शुक्र लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस धर्म-कर्मको पालन गर्ने भएको, भूमि-भवनको योग पाउने खालको, मातृ-स्थानको शक्ति भेट्टाउने र भाग्य-स्थानबाट सुख प्राप्त गर्नेवाला, अनि दैवीकलाबाट सुख-शक्तिको सामर्थ्यको संचार गर्ने, व्यापार गर्ने र पिता-स्थानबाट लाभ पाउने भएको, मान-सम्मान प्राप्त गर्नेवाला, अनि धार्मिक कार्यहरूबाट वा बढी चातुर्यहरू द्वारा आफ्नू उन्नति एवं प्रतिष्ठा पाउने खालको, सुखका साधनहरूमा स्थिरताले अन्न-वस्त्र र आवश्यक पदार्थहरू पाउनेवाला तथा राज-समाजबाट सुख प्राप्त गर्ने खालको निकै बाठो व्यक्ति होला।

कु० नं० १३०२

१२ १० १ ११ ९ २शु. ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मिथुन राशिको शुक्र लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्या बुद्धिको योगद्वारा भाग्योदय प्राप्त गर्नेवाला तथा धार्मिक र दैवीज्ञान प्राप्त गर्ने भएको अनि उत्तम सन्तान सुख पाउने खालको, विद्या भित्र नै महान् कला तथा बुद्धिमा भाग्यको सम्बन्धको ज्ञान प्राप्त गर्ने भएको, मातृ-स्थानको सहायक शक्ति पाउने भएको, भवन-भूमिको सुख प्राप्त गर्नेवाला र बुद्धि तथा वाणीले परमार्थ धनको पालन गर्नेवाला र भाग्य सम्बन्धी दैवी गुणहरूलाई अनेक रूपले लेखहरूमा प्रकाशित गरेर सुख पुऱ्याउने खालको तथा सुयश प्राप्त गर्ने र बढी लाभ एवं सुख अनि अनेक आवश्यक पदार्थ तथा शील सन्तोष पाउने खालको र सत्यवादी, दूरदर्शी होला।

कु० नं० १३०३

१२ १०
१ ११ ९
२ ८
३शु. ५ ७
४ ६

जुन व्यक्तिको कर्कराशिको शुक्र लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस धर्म-विरुद्ध काम गर्नेवाला, भाग्यमा दुर्बलता पाउनेवाला, मातृ स्थानमा विरोध पाउने र सुख शान्तिमा बाधा पाउने खालको अनि भाग्योन्नतिका लागि निकै बटारिएका युक्तिहरूबाट र परिश्रम एवं अशान्तिले लाभ पाउनेवाला अनि निकै ठूलो कलाधारी रचनात्मक उपायहरूबाट सफलता पाउने भएको, न्याय अन्यायको वास्ता नगरेर स्वार्थ-सिद्धि गर्न जात्रे खालको र धेरै धन खर्च गर्ने अनि गुप्त युक्तिहरूका महान् उपायहरूबाट सफलता पाउने भएको, न्याय अन्यायको वास्ता नगरेर स्वार्थसिद्धि गर्न जात्रे खालको र धेरै धन खर्च गर्ने अनि गुप्त युक्तिहरूका महान उपायहरूबाट शत्रुलाई थिच्ने तथा प्रभाव पाउने भएको र निकै बाठो कूटनीतिज्ञ एवं केही बीमारी वा रोगको औषधि आदि धर्मार्थ बाँड्ने खालको र केही अन्यान्य व्यक्तिको कष्ट निवारण गर्ने किसिमको होला।

कु० नं० १३०४

१२ १०
१ ११ ९
२ ८
३ ५ ७
४शु. ६

जुन व्यक्तिको सिंहराशिको शुक्र लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस गृहस्थीको सुख-सौभाग्य पाउनेवाला, त्यति भएर पनि गृहस्थीमा केही आनन्दको न्यूनता पाउनेवाला, आमा र स्त्रीको पक्षमा सुखको प्राप्ति भएर पनि केही न केही कष्ट-बाधाको अनुभव गर्नेवाला, व्यापारमा केही परिश्रम गरेर भाग्यवृद्धि पाउने भएको, लौकिक सुखभोग प्राप्त गर्ने खालको, भवन-भूमि आदिबाट केही शक्ति पाउने भएको, अनि शरीरमा सुख-सौभाग्य पाउने खालको अनि मान-सम्मान, यश पाउने र विलक्षण चातुर्यहरूबाट काम सिद्ध पार्न जान्ने भएको, गृहस्थीका कामहरूमा केही परमार्थ धर्मको पालन गर्ने र व्यापारमा केही सन्ताप र सत्यताबाट काम लिने खालको होला।

कु० नं० १३०५

१२ १० १ ११ ९ २ ८ ३ ५शु. ७ ४ ६

जुन व्यक्तिको कन्याराशिको शुक्र लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस धर्मको सम्बन्धमा महान् दुर्बलता पाउनेवाला, मातृस्थानको हानि पाउने भएको, सुखको सम्बन्धमा कमी पाउने खालको, भूमि-भवन तथा सम्पत्ति आदिमा कमी पाउने भएको, र दुःखी रहनेवाला, भाग्यमा दुर्बलता अनुभव गर्ने भएको, उन्नतिका लागि ठूला-ठूला अशान्ति र विदेश आदिको योगले ढीलो केही फल पाउनेवाला तर धन बढी पाउने चेष्टा गर्ने र बढी धनको सम्पर्कमा नै मनमा सुख मान्ने भएको र धनलाई नै ईश्वर ठान्ने भएको, भाग्य वृद्धिका लागि निकै बर्ता गुप्त चालहरू चल्नेवाला तथा जीवनमा अशान्तिको योग पाउने खालको होला।

कु० नं० १३०६

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६शु.

जुन व्यक्तिको तुलाराशिको शुक्र लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी तथा धर्म-कर्मको पालन गर्न जान्ने, निकै बढी यश प्राप्त गर्ने मातृस्थानको ठूलो शक्ति पाउनेवाला र भवन-भूमि सम्पत्ति आदिको महानता पाउने भएको तथा सुखपूर्वक भाग्य वृद्धि स्वतः प्राप्त गर्नेवाला, भाग्यबलले खूब सुख-शक्ति प्राप्त गर्ने खालको तथा धर्मात्मा आमा पाउने भएको र दैवी-शक्तिको महान् सहायता पाउने भएको र ईश्वरमा निष्ठा र विश्वास राख्नेवाला, दाजु-भाइ दिदी-बहिनीको सुन्दर योग पाउने भएको तथा पुरुषार्थ बलको सुख पाउनेवाला र धर्मको एवं भाग्यको महान् कला प्राप्त गर्ने भएको, निकै दूरदर्शी परमज्ञानी र बाठो होला।

कु० नं० १३०७

१२ १० १ ११ ९ २ ८ ३ ५ ७शु. ४ ६

जुन व्यक्तिको वृश्चिक राशिको शुक्र लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस भाग्य बलले धेरै ठूलो पदवी पाउनेवाला, राज-समाजबाट प्रभुत्व र फाइदा पाउने भएको, माता-पिताको परमशक्तिको सौभाग्य पाउनेवाला, भवन भूमि-सम्पत्तिको शक्ति पाउने भएको, राजसी सुख भोग्नेवाला, धर्म-कर्मको पालन गर्ने भएको, आफ्नू व्यापार कार्यमा र उन्नतिको मार्गमा निकै ठूलो चातुर्यहरू द्वारा वा योग्यताले काम पूर्ण पार्ने भएको तथा न्याय र शान्तिको इच्छुक अनि कुनै कलापूर्ण महान् कार्य पनि गर्नेवाला, स्वार्थ र परमार्थको बराबर ध्यान राख्ने भएको अनि दैवी-शक्तिको भर-थेग पाउनेवाला, इज्जतदार यशस्वी होला।

कु० नं० १३०८

१२ १० १ ११ ९ २ ८शु. ३ ५ ७ ४ ६

जुन व्यक्तिको धनुराशिको शुक्र लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस भाग्यको तागतले निकै बढी लाभ पाउनेवाला तथा मातृस्थानको

कु० नं० १३०९

१२ १०
१ ११ ९शु.
२ ८
३ ५ ७
४ ६

सहायक शक्ति पाउने र भवन-भूमिको लाभ पाउनेवाला, इच्छित सुख प्राप्त गर्नेवाला तथा धर्मको लाभ पाउने र आमदानीको योगबाट केही धर्म-कर्म गर्न रुचाउने अनि अन्न-वस्त्राभूषण इत्यादि अनेक आवश्यक पदार्थ स्वतः सुखपूर्वक चातुर्यद्वारा प्राप्त गर्ने तथा विद्या ग्रहण गर्ने भएको अनि कुराकानी गर्दा निकै सज्जनता र शीलताले काम सिद्ध पार्न जान्ने, बढी दूरदर्शी परम विवेकी, स्वार्थ-परमार्थले युक्त होला।

जुन व्यक्तिको मकर राशिको शुक्र लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यको तागतद्वारा र मातृस्थानको तागतबाट धेरै बढी धन

कु० नं० १३१०

१२ १०शु.
१ ११ ९
२ ८
३ ५ ७
४ ६

खर्च गर्ने खालको तथा भाग्यमा बढी दुर्बलता पाउने भएको, मातृ स्थानको हानि पाउने खालको तथा भवन-भूमि आदि निवास स्थानमा पनि दुर्बलता पाउने भएको अर्थात् सुखमा बाधा पाउने खालको तथा धर्मको सम्बन्धमा न्यूनता (कमी) पाउने भएको र खर्च स्थानबाट केही परमार्थ पनि गर्ने खालको र अन्यान्य स्थानको सहयोगबाट केही भाग्यको उन्नति पाउने भएको तर भाग्यको लागि ढीलो-चाँडो र उल्टो-सोझोबाट बढी चातुर्य र सज्जनताले फाइदा पाउने भएको तथा खर्च र अन्यान्य स्थानको सम्पर्कबाट सुख-शान्ति पाउने भएको तथा यशमा कमी पाउनेवाला, शत्रु पक्षमा न्यूरिएर आफ्नू काम पूर्ण पार्न जान्ने खालको होला।

# कुम्भ लग्नान्तर-शनिफलम्

जुन व्यक्तिको कुम्भराशिको शनि लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस शरीरभित्र केही दुर्बलताको योग पाएर पनि दृढता राख्ने भएको तथा केही सौन्दर्य पाउने खालको तथा आफूभित्र आत्मबल र स्वाभिमान कायम राख्ने र केही ख्याति प्राप्त गर्नेवाला केही भ्रमण गर्ने भएको र अन्यान्य स्थानहरूमा निकै बढी आदर र मान-सम्मान प्राप्त गर्नेवाला, खूब शानदार खर्च गर्ने भएको र दाजु-भाइको स्थानमा हानि र कमी पाउने खालको अनि पुरुषार्थ बलमा र परिश्रमको स्थानमा कमी पाउने भएको र स्त्री एवं पिताको स्थानमा क्लेश र न्यूनता पाउने खालको तथा रोजगार र व्यापार एवं प्रतिष्ठा आदिमा केही कमी (न्यूनता) पाउने भएको अनि राज-समाजमा पनि केही न्यूनता पाउने खालको होला।

कु० नं० १३११

१२ १० १ ११श. ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मीन राशिको शनि लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस आफ्नू शरीरद्वारा सदैव धन वृद्धिको चेष्टामा लागिरहने खालको, धनस्थानमा कहिले काहीं हानिहरू पनि पाउने भएको तथा अन्यान्य स्थानको सम्पर्कबाट र खर्चको सम्बन्धमा धन स्थानमा हानि र वृद्धिको योग पाउने खालको अनि शरीरमा केही बन्धन वा बाधा-कष्ट पनि अनुभव गर्ने भएको र आमा र भूमिको सम्पर्कबाट केही फाइदा पाउने खालको र सुख प्राप्तिको बढी ध्यान राख्ने भएको तथा बढी लाभ प्राप्तिका लागि अनेक थरिका साधन उत्पन्न गर्न जान्ने खालको, जीवनको दिनचर्यामा केही गौरव मान्ने भएको, खर्चलाई रोक्न बराबर चेष्टा गर्ने र पुरातत्त्व खोजी होला।

कु० नं० १३१२

१२श. १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मेष राशिको शनि लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस बढी नै थकाई मात्रै भएको तथा गुप्त रीतिले परिश्रम गर्ने खालको र शरीरमा दुर्बलता पाउने भएको तथा पुड्को र निर्धो शरीर भएको अनि सौन्दर्यमा पनि न्यूनता पाउने खालको, बढी धन व्यय गर्ने खालको र खर्चलाई रोक्न र घटाउनको बराबर चेष्टा गर्दै रहने भएको र त्यति गर्दा पनि खर्चको वृद्धिमा योग पाउने खालको दाजु-भाइको हानि पाउने र केही उल्टो वा संकीर्ण मार्गको अनुसरण वा उल्टो रीतिको खर्च पनि गर्ने भएको अनि सन्तान पक्षमा केही हानि वा शक्ति प्राप्त गर्ने खालको, भाग्यको वृद्धि पाउनेवाला, केही धर्म-कर्मको शक्ति पाउने भएको तथा गुप्तसाहस राख्ने खालको होला।

कु० नं० १३१३

| | | |
|---|---|---|
| १२ | ११ | १० |
| १ श. | २ | ९ |
| ३ | ५ | ७ |
| ४ | ८ | ६ |

जुन व्यक्तिको वृषराशिको शनि लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस प्रभावशाली आत्मज्ञानी र उत्तम शरीरवाला तथा सुखपूर्वक शरीरको रक्षा गर्नेवाला, मातृस्थानमा केही हानि पाउने तर केही अन्य स्त्रीहरूको वेला-वेलामा मातृवत् सहयोग पाउनेवाला र सुखको वातावरणमा केही दुर्बलता पाउने खालको अनि भवन-भूमि आदिको स्थानमा पनि केही कमी पाउने खालको, कष्ट-बाधाहरूमा र शत्रु स्थानमा बढी प्रभाव राख्न जान्ने अनि स्वाभिमानको निकै बढी रक्षा गर्दै रहने भएको, खर्चको दुरुपयोग र बहिरी कारणहरूबाट शरीरमा केही बाधा-कष्ट र केही दुर्बलता पाउने खालको, अनि अन्यान्य स्थानहरूको सम्पर्कबाट मान-सम्मान र ख्याति पाउने साहसी होला।

कु० नं० १३१४

| | | |
|---|---|---|
| १२ | ११ | १० |
| १ | २श. | ९ |
| ३ | ५ | ७ |
| ४ | ८ | ६ |

जुन व्यक्तिको मिथुनराशिको शनि लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्यामा अधिकार राख्ने भएको तर विद्यामा केही कमी पाउने खालको र बुद्धिमा आत्मज्ञानको शक्ति पाउनेवाला, सन्तान पक्षमा अलि न्यूनताका साथसाथै निकै बढी शक्ति र गौरव प्राप्त गर्ने भएको, स्त्री वा धनको पक्षमा केही वैमनस्यताको संयोग पाउने खालको, व्यापारको मार्गमा अलि बाधा-कष्टहरू भएता पनि संलग्नता साथ काम गर्ने भएको, कुराकानी गर्दा केही अलिकति उल्टो-सोझो र आत्मबलका साथ बोल्नेवाला, धन खर्चका कारणहरूबाट अलिकति हानिको योग पाउने खालको, वृद्धिद्वारा शक्ति पाउने बुद्धिमान र साहसी होला।

कु० नं० १३१५

१२ १०
१ ११ ९
२ ८
३श. ५ ७
४ ६

जुन व्यक्तिको कर्कराशिको शनि लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस प्रभावशाली काम गर्नेवाला, केही परतन्त्रताको अन्तर्गत महानता पाउने भएको, सौन्दर्यको केही कमी पाउने खालको, घेराउ र कष्ट-बाधाहरूको भित्र पनि बढी धैर्य र साहसपूर्वक काम गर्ने भएको, दाजु-भाइको स्थानमा दुर्बलता पाउनेवाला र शत्रुहरूको वास्ता नगर्ने खालको अनि जीवनको दिनचर्यामा प्रभाव शक्ति र गौरव पाउने भएको, खर्चको स्थानमा कमीको प्रयत्न गर्दै रहे पनि बढी खर्च गरिरहने खालको निकै बांगा र अपठेरा युक्तिहरूलाई आत्मबलको शक्तिद्वारा प्रयोग गरेर आफ्नू प्रभावको वृद्धि गर्न जान्ने भएको तथा स्वार्थयुक्त रहनाले दयाले काम नलिने खालको होला।

कु० नं० १३१६

१२ १०
१ ११ ९
२ ८
३ ५ ७
४श. ६

जुन व्यक्तिको सिंह राशिको शनि लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस आफ्नू गृहस्थ जीवनमा कष्ट-बाधा अनुभव गर्नेवाला, स्त्री-स्थानमा

कु० नं० १३१७

१२ १० १ ११ ९ २ ८ ३ ५श. ७ ४ ६

आशक्ति र कमी तथा वैमनस्यताको योग पाउनेवाला, व्यापार भित्र पसेर काम गर्दै रहेर पनि केही हानिहरू र परेशानीहरू पाउनेवाला अनि भाग्यमानी कहिने खालको एवं धर्म-कर्मको उत्तम ध्यान राख्नेवाला तथा लोक र परलोक दुवैको कर्त्तव्य पालन गर्ने भएको अनि आफ्नू दैनिक कार्य स्थानबाट व्यक्तित्वको प्रभाव पाउने खालको र खर्चका कारणबाट कष्ट-बाधा अनुभव गर्ने खालको र आत्मबलको तागतद्वारा सुखको निकै बर्ता अनुभव गर्ने भएको तथा रसिक प्रवृत्तिको र पुड्को कदको व्यक्ति होला।

जुन व्यक्तिको सिंहराशिको शनि लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो गुप्त-शक्ति सम्पन्न होला। अनि डरलाग्दो काम गर्दै

कु० नं० १३१८

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६श.

रहनेवाला तथा शरीरमा केही कमी पाउने भएको र रोग-व्याधिले ग्रसित रहनेवाला, सौन्दर्यमा कमी पाउनाले खिन्न रहने भएको आफ्नू उन्नति र मान-सम्मान प्राप्तिका लागि ठूला-ठूला कठिन कार्य गर्ने खालको र पिता स्थानमा वैमनस्यताको सम्बन्ध पाउने खालको र सन्तान पक्षमा केही शक्ति प्राप्त गर्ने अनि बुद्धि स्थानमा ठूलो आत्मबलले काम सपार्ने, विद्या ग्रहण गर्नेवाला र कूट युक्तिहरूलाई बुद्धि र वाणी एवं कर्मद्वारा प्रयोग गर्न जान्ने तथा खर्चमा न्यूनता पाउने भएको, पुरातत्त्वको लाभ पाउने खालको होला।

जुन व्यक्तिको तुलाराशिको शनि लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस राम्रो सलक्क मिलेको शरीरवाला, भाग्यमानी कहिने र भाग्यमानी झैं देखिने खालको र धन प्राप्तिको लागि कठोर श्रम बेसरी गर्ने भएको तथा धार्मिक आचरण गर्दै रहने भएको अनि निकै सज्जनताले निवास गर्ने खालको, शत्रु स्थानमा निकै बढी प्रभाव राख्ने भएको दाजु–भाइ दिदी-बहिनीको स्थानमा केही न्यूनता पाउनेवाला, पुरुषार्थ बलमा पनि केही कमी पाउने भएको र खूब बर्ता धन खर्च गर्ने खालको, अन्यान्य स्थानहरूको बढी सम्पर्क पाउनेवाला र केही अपठेरा मार्गमा आत्मशक्ति प्रयोग गरेर वृद्धि पाउने र मस्त निडर होला।

कु० नं० १३१९

१२ १० / १ ११ ९ / २ ८ / ३ ५ ७श. / ४ ६

जुन व्यक्तिको वृश्चिक राशिको शनि लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै प्रभावशाली कर्महरू गर्ने खालको तथा विशेष प्रभाव पाउने भएको र अन्यान्य स्थानको महान् शक्ति पाएर बर्ता कष्टकर र बढी आत्मबलले शरीरद्वारा विशेष इज्जत प्राप्त गर्नेवाला र बढी धन खर्च गर्ने भएको, पिताको स्थानमा केही हानि र केही प्रभाव पाउनेवाला अनि स्त्री स्थानमा पनि न्यूनता भेट्टाउने तथा केही वैमन्यस्यता पाउनेवाला र मातृस्थानमा मित्रता वा केही दुर्बलता पाउने खालको र शरीरमा कमजोरी र हुकुम राख्ने खालको अनि दैनिक व्यापार वा मान-सम्मान आदिमा केही हानि नोक्सानी, केही कष्ट-बाधा पाउने खालको बढी उग्र कर्मेष्ठी होला।

कु० नं० १३२०

१२ १० / १ ११ ९ / २ ८श. / ३ ५ ७ / ४ ६

जुन व्यक्तिको धनुराशिको शनि लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धन कमाउनेवाला र विशेष नाम पाउने खालको अनि अन्यान्य स्थानको सम्बन्धले वा शरीरको योग तथा परिश्रम द्वारा निकै बढी उन्नति गर्ने भएको, बढी धन खर्च गर्ने भएको र खर्च रोकेर कम पार्ने चेष्टा गरिरहने भएको, बुद्धिस्थानमा बढी बल दिने तथा पुरातत्त्वको गहीरो चालबाट फाइदा पाउने र खर्च शक्तिको बलद्वारा आम्दानीमा वृद्धि पाउने भएको तथा आत्मबलको शक्तिले पनि धनको वृद्धि भेट्टाउने र सन्तान वा आयुमा पनि उन्नति र अलिकति न्यूनता पाउने खालको र आफ्नू शरीरका लागि यथार्थ लाभमा केही कमी पाउने खालको व्यक्ति होला।

कु० नं० १३२१

१२ १०
१ ११ ९श.
२ ८
३ ५ ७
४ ६

जुन व्यक्तिको मकर राशिको शनि लग्नबाट बार्हौं स्थानमा छ भने त्यो मानिस बढी धन खर्च गर्ने र शरीर भित्र दुर्बलता पाउने भएको अनि अन्य स्थानमा आत्मस्थिति हुनाले गर्दा आत्मबलमा कमजोरी पाउनेवाला तथा धन-वृद्धिको लागि बढी चेष्टा गर्ने भएको एवं भाग्यमा वृद्धि पाउनेवाला, धर्म-कर्मको पालन र विशेष ध्यान राख्ने भएको र बाहिरी स्थानहरूमा मान-सम्मान पाउनेवाला, अन्य स्थानहरूको सम्पर्क र खर्चको शक्तिबाट केही राम्रो उन्नति पाउने खालको तथा शत्रु स्थाममा प्रभाव पाउने भएको र धन-स्थानमा केही हानिहरू पनि पाउने खालको अनि कुटुम्बको सम्बन्धमा केही हानि र केही वृद्धिको योग पाउने अशान्त हृदयको होला।

कु० नं० १३२२

१२ १०श.
१ ११ ९
२ ८
३ ५ ७
४ ६

# कुम्भ लग्नान्तर-राहुफलम्

जुन व्यक्तिको कुम्भराशिको राहु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस शरीरमा केही कष्ट-बाधाको योग पाउने भएको तथा केही विपत्तिहरूको पनि योग पाउने खालको र निकै बर्ता सतर्कता र गुप्त युक्तिहरूले काम लिन जान्नेवाला र आफ्नू कीर्ति र नामको प्रभाव प्राप्त गर्नका लागि धेरै ठूलो प्रयत्न गर्ने भएको तथा आफ्नो अमर नामको इच्छा गर्ने खालको, त्यसै कारण अनेक कष्टसाध्य उपाय संकटकालमा पनि बडो धैर्य राख्नेवाला, कहिले काहीं सज्जनता र कठोरता मिसिएको काम पनि गर्नेवाला र सदैव आफ्नू स्वार्थसिद्ध गर्ने प्रयत्नहरूमा लागिरहनेवाला तथा आफ्नू बलियो (दरिलो) भित्र केही दुर्बलता वा न्यूनता अनुभव गर्ने खालको व्यक्ति होला।

कु० नं० १३२३

१२ १० १ ११रा. ९ २ ८ ३ ५ ७ ४ ६

कु० नं० १३२४

१२रा. १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मीन राशिको राहु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनस्थानमा हानि र न्यूनता पाउने भएको, कुटुम्बमा क्लेश र कमी पाउने अनि धनको सम्बन्धमा ठूला-ठूला विपत्तिहरू सहनेवाला, धनको पक्षमा अन्यसित सहारा र ऋण इत्यादिले काम चलाउने भएको, धनस्थानमा अकस्मात् कहिले काहीं गहीरो आघात सहने खालको, धनको कमीलाई पूरा गर्नको निम्ति धेरै बर्ता र बढी प्रयत्न गर्नेवाला, धनको पक्षमा निकै भलादमी वा गौरव एवं सज्जनताले काम लिन जान्ने, धनको सम्बन्धमा बाहिरी प्रदर्शनमा भित्रको दुर्बलताले केही गुप्त वेदना सहने खालको अशान्त होला।

जुन व्यक्तिको मेष राशिको राहु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै तीक्ष्ण पुरुषार्थ गर्ने भएको, दाजु-भाइको स्थानमा कष्ट वा क्लेश सहनेवाला, धेरै बढी उन्नति प्राप्तिका लागि ठूल-ठूला दौड-धूप गर्नेवाला, आफ्नू स्वार्थका लागि निकै बढी गुप्त उपायहरूले काम सिद्ध पार्न जान्ने, आफ्नू शक्ति माथि ठूला-ठूला आघात भइरहे पनि निकै साहस र सतर्कताले काम लिनेवाला, गुप्तरूपले सदैव प्रधान शक्तिको संचय गर्न लागिरहनेवाला, धेरै उच्च लाभको प्राप्तिका लागि असम्भव-सामर्थ्य भन्दा पनि बढी प्रभावशाली, पुरुषार्थी होला।

कु० नं० १३२५

१२　१०
१ रा.　११　९
२　८
३　५　७
४　६

जुन व्यक्तिको वृष राशिको राहु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृस्थानमा हानि र क्लेश वा केही छुट्टिने योग पाउनेवाला र सुखका साधनहरूमा केही कमी पाउने भएको र सुखको स्थायी तागतका लागि अनेक थरिका साना-ठूला युक्तिहरूलाई गुप्त रूपमा प्रयोग गर्न जान्ने भएको र अनेक थरिका झ्याउला टरेपछि सुख प्राप्तिको बलियो साधन फेलापार्ने भएको र भवन-भूमि आदिको व्यवस्थामा अलिकति न्यूनता पाउने खालको र कहिले काहीं सुख-शान्ति भित्र घोर सङ्कट पाउने भएको अनि अलि विशेष सुख प्राप्तिका लागि अनधिकार चेष्टा पनि गर्ने खालको होला।

कु० नं० १३२६

१२　१०
१　११　९
२रा.　८
३　५　७
४　६

जुन व्यक्तिको मिथुन राशिको राहु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस धेरै बर्ता बोल्नेवाला तथा आफ्नू मस्तिष्क भित्र धेरै ठूलो तेजी र चातुर्य राख्न सक्ने भएको, अर्कालाई मूर्ख तुल्याउने सदैव चेष्टा गर्ने भएको, विद्या ग्रहण गर्नेवाला तथा गुप्त युक्तिका शक्तिको नै धेरै ठूलो आधार मात्रै भएको अनि बुद्धिको यथार्थता नै केही न्यूनता पाउने खालको र स्वार्थको कुरा गर्दै रहनाले वेला-वेलामा सत्य-असत्यको वास्ता नगर्ने खालको र आफूलाई महान् विद्वान् सम्झनेवाला, केही सन्तानको कष्ट पाउने होला।

कु० नं० १३२७

१२ १० १ ११ ९ २ ८ ३रा. ५ ७ ४ ६

जुन व्यक्तिको कर्क राशिको राहु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस मावली पक्षमा हानि पाउनेवाला र शत्रुस्थानमा निकै प्रभाव पार्न जान्ने भएको तथा शत्रु स्थानलाई दमन गर्ने खालको तर शत्रु पक्षबाट अलिकति चिन्ता पाउने र गुप्त युक्तिहरू वा निकै घुमाउरा चातुर्यहरूका साथै साना-ठूला सफलता प्राप्त गर्नेवाला, धेरै थरि कष्ट-बाधा र विपत्तिहरूको वास्ता नगरेर आफ्नू सुरक्षाको साधन प्राप्त गर्ने भएको, मनोयोगको निकै बढी र गहीरो एवं गूढ चालहरू चल्न जान्ने तथा आफ्नू स्वार्थसिद्धिको सामुन्ने अर्काको लाभको वास्ता नगर्ने खालको, निकै सावधान र सतर्क रहने होला।

कु० नं० १३२८

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४रा. ६

जुन व्यक्तिको सिंहराशिको राहु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री-स्थानमा हानि पाउने भएको, स्त्री-पक्षबाट क्लेश सहनेवाला, स्त्रीसित सम्बन्धमा गुप्त युक्तिहरूबाट र कठिन नीतिले काम बनाउने खालको, अनि ससुराली पक्षमा र भोगादि पक्षमा दुर्बलता पाउने भएको र व्यापारमा ठूला-ठूला सङ्कट सहने भएको अनि व्यापारमा हानि सहने खालको र व्यापारकै लाइनमा अनेक गुप्त र कठिन युक्तिहरूद्वारा काम सिद्ध पार्ने खालको र बर्ता परिश्रमको काम गर्नेवाला तथा अनेक झ्याउलाहरूको समावेश पाउने भएको, गृहस्थी र व्यापारमा केही नाजायज फाइदा पाउने खालको होला।

कु० नं० १३२९

१२ ११ १०
१ ९
२ ८
३ ५रा. ७
४ ६

जुन व्यक्तिको कन्या राशिको राहु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नो जीवनको दिनचर्यामा अलि झ्याउलाहरूको साथैसाथ केही गौरव पनि अनुभव गर्ने खालको र महान् गहीरो युक्तिहरूको प्रयोग गरेर अत्यन्त गूढ फाइदा कमाउने खालको र जीवन निर्वाह गर्ने शक्तिलाई चातुर्यहरूले प्राप्त गर्ने खालको अनि पैत्रिक सम्पत्तिमा केही अनावश्यक बाधा पाउने भएको अनि पेटभित्र तल्लो भागमा केही उदर विकारको सामान्य बाधा पाउने भएको र गुप्त शक्तिको हिम्मतको धेरै बढी भरोसा मान्ने खालको तथा बर्ता साना-ठूला कुराहरू विचार गर्ने खालको होला।

कु० नं० १३३०

१२ ११ १०
१ ९
२ ८
३ ५ ७
४ ६रा.

जुन व्यक्तिको तुलाराशिको राहु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूल-ठूला युक्तिले भाग्यको वृद्धि गर्ने भएको, भाग्य स्थानमा केही बाधा र विपत्ति पनि सहन गर्नेवाला तथा सुयश प्राप्तिको स्थानमा केही कमी पाउने भएको तथा दैवी सहायताको भरोसा नगरेर सांसारिक नियमलाई धेरै बढी मान्ने भएको तथा धर्म-संग्रह गर्ने सम्बन्धमा दुर्बलता पाउने खालको तर कुनै पनि स्वार्थ पूर्ति गर्नका लागि जुनसुकै धर्मको पालन गर्न तयार हुनेवाला तथा धर्मको ठूलो आडम्बर सदैव गर्न सक्ने भएको र भाग्यको दुर्बलतालाई सदाको निम्ति पन्छाउने प्रयत्न गर्दै रहने खालको होला।

कु० नं० १३३१

१२ १०
१ ११ ९
२ ८
३ ५ ७रा.
४ ६

जुन व्यक्तिको वृश्चिक राशिको राहु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता-स्थानमा कष्ट सहने भएको र व्यापार आदिमा ठूला-ठूला बाधाहरू सहन गर्ने तथा साना-ठूला झ्याउलाबाट निस्केर काम चलाउने र समाजको काममा पनि अनेक कष्ट सहने भएको तथा मान-सम्मान र पदोन्नतिमा बाधा र कमी पाउने भएको र सबैतिरको उन्नतिका लागि अनेक थरिका गुप्त युक्तिहरूबाट महान् कठिन कर्मयोगले काम गर्नेवाला र आफ्नू इज्जत र वचनको रक्षा गर्नका लागि अनेक प्रकारका हानिहरू पनि सहने भएको, उच्च दाउ चल्ने खालको साहसी होला।

कु० नं० १३३२

१२ १०
१ ११ ९
२ ८रा.
३ ५ ७
४ ६

जुन व्यक्तिको धनुराशिको राहु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस गुप्त चालहरू र गुप्त योजनाहरूद्वारा केही धन प्राप्त गर्नेवाला, प्रत्यक्ष आमदानीमा कमी र असन्तोष पाउने भएको, केही अनुचित र अनधिकार थोरै लाभ पाउने बढी गुप्तरूपले पनि प्रयत्न गर्ने भएको, आफ्नू फाइदाको दृष्टिकोणको सामुन्ने अर्काको नोक्सान वा कष्टको अलिकति पनि वास्ता नगर्ने भएको, सदैव आफ्नै फाइदाको गुप्त चिन्तन गरिरहनेवाला, आफ्नू प्रयोगको वस्तुहरूमा वा आवश्यक पदार्थहरूमा न्यूनता अनुभव गर्ने खालको, आमदानीका लागि अनेक बाधा-कष्ट आइपर्ने काम गर्ने खालको होला।

कु० नं० १३३३

१२ १० / १ ११ ९रा. / २ ८ / ३ ५ ७ / ४ ६

जुन व्यक्तिको मकर राशिको राहु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस अनावश्यक खर्चको योजनाहरू पाउनेवाला र खर्चका कारणहरूले सुख-दुःख अनुभव गर्ने भएको, खर्चको क्रममा ठूल-ठूला युक्तिहरूद्वारा दृढतासाथ काम गर्न जान्ने र खर्चको लागि अनेकानेक किसिमका विचारद्वारा गुप्तरूपले काम पूर्ण पार्ने र अन्यान्य स्थानहरूको सम्पर्कमा झ्याउला र कष्ट-बाधाको योग पाउने भएको अनि अरूहरूको बाहिरी वातावरणको सम्बन्धमा ठूला-ठूला युक्तिहरू र उपायहरूबाट आफ्नू काम सिद्ध पार्ने र अन्यलाई देखाउन र प्रतीत पार्नलाई आफूभित्र कमी अनुभव गर्ने खालको होला।

कु० नं० १३३४

१२ १०रा. / १ ११ ९ / २ ८ / ३ ५ ७ / ४ ६

# कुम्भ लग्नान्तर-केतुफलम्

जुन व्यक्तिको कुम्भराशिको केतु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस शरीर भित्र दृढता शक्तिको योग पाउनेवाला र शरीरमा केही न्यूनता पनि अनुभव गर्ने भएको र शूरताको अभिमान राख्नेवाला, आन्तरिक शक्तिको बल बर्ता भएको अनि आफ्नू मार्गमा निर्भय हिंड्ने खालको, आफ्नू सिद्धान्तको अगाडि अर्काको लाभ-हानिको कुनै वास्ता नगर्ने भएको, अनेक सङ्कट सहेर पनि शक्ति प्राप्त गरेर छाड्ने शरीरमा कहिले काहीं आघात र गहीरो विपत्तिको खाडलमा जाकिनेवाला, आफ्नू देहले इज्जत कमाउनेवाला, दृढ सङ्कल्पी होला।

कु० नं० १३३५

१२ १० १ ११के. ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मीन राशिको केतु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन-संग्रहमा न्यूनता पाउनेवाला, धन स्थानमा हानि पाउने खालको, कुटुम्बमा विग्रह र अशान्ति भेट्टाउने भएको, धन प्राप्तिका लागि ठूल-ठूला सङ्कट सहने भएको, धनको अभावले बढी कष्ट अनुभव गर्ने भएको, धनको सम्बन्धमा निकै अपठेरा र साहसले आफ्नू काम सिद्ध पार्न जान्ने, गुप्त शक्तिका योगहरू द्वारा नै धनागम गर्नेवाला, कुनै ठूलो बन्ने पंक्तिमा अन्धविश्वास तथा दृढ सङ्कल्प शक्तिद्वारा पनि धन प्राप्त गर्न जान्ने अनि धन संग्रहका लागि महान् परिश्रम गर्दै रहने खालको होला।

कु० नं० १३३६

१२के. १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मेष राशिको केतु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस महान् पुरुषार्थ गर्ने भएको तथा निकै बढी साहसले काम बनाउन जान्ने अनि दाजु-भाइ दिदी-बहिनीको स्थानमा केही अशान्ति-क्लेश सहनेवाला, आफूभित्र बाहुबल र दगुरा-दगुर गर्ने शक्ति भएको, ठूला र कठिन कामहरूलाई अन्धविश्वास र साहसको शक्तिले पूरा गर्न लागिरहने खालको अनि आफ्नू कामहरूमा गुप्त योजनाहरूको महानता राख्ने भएको तथा गुप्त रहेको तागतले ठूला-साना असम्भव काम पनि पूर्ण पार्नेवाला तथा आफ्नू शक्तिभित्र केही कमी अनुभव गर्ने खालको होला।

कु० नं० १३३७

१२ १० १ के. ११ ९ २ ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको वृषराशिको केतु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृस्थानमा केही हानि र केही झंझट पाउने भएको र भवन-भूमि आदिको केही दुर्बलता पाउने भएको, सुख प्राप्तिका साधनहरूमा पनि केही कमी र झंझट अनुभव गर्ने खालको र सुख प्राप्तिमा वृद्धि गर्नका लागि ठूल-ठूला झ्याउला सहने भएको, गुप्तरूपमा अनेक चातुर्यहरू र योग्यताहरूले सुखको वृद्धि गर्ने भएको, सुख प्राप्तिको उन्नति वा दृढतालाई भेट्टाउनको निम्ति सङ्कल्पहरूको दृढताद्वारा बराबर परिश्रम गर्दै रहनेवाला, कुनै अन्य स्थानको जन्म-भूमिसित परिवर्तन पाउने खालको, दुःखमा धैर्यले काम स्याहार्ने खालको होला।

कु० नं० १३३८

१२ १० १ ११ ९ २के. ८ ३ ५ ७ ४ ६

जुन व्यक्तिको मिथुन राशिको केतु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस असत्यको शक्तिबाट काम सपार्न जान्ने भएको तथा विचार भित्र अनेक गुप्त योजनाहरू बनाउनेवाला र विद्यामा दुर्बलता पाउने खालको तथा बुद्धि भित्र डर मान्ने भएको तथा सन्तान पक्षबाट कष्ट अनुभव गर्ने खालको, विद्या ग्रहण गर्ने वेलामा अनेकानेक कष्ट-बाधा सहने भएको, लुकाएर कुराकानी गर्नेवाला र संकीर्ण विचार राख्ने भएको तथा चाहिने-भन्दा बर्ता आशंकाहरू मस्तिष्कमा उत्पन्न गरिरहने खालको अनि मस्तिष्कमा परेशानी र थकाई पाउने खालको तथा सम्झनामा न्यूनता पाउनेवाला, आर्त र गुप्त बुद्धिवाला होला।

कु० नं० १३३९

१२ ११ १० १ ९ २ ८ ३के. ५ ७ ४ ६

जुन व्यक्तिको कर्कराशिको केतु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस मावली पक्षमा हानि पाउने भएको तथा शत्रु स्थानमा विजय पाउने खालको, शत्रुस्थानबाट केही कष्ट-बाधा पनि अनुभव गर्नेवाला, सबै प्रकारका विघ्न-बाधाहरूलाई थिच्न सक्ने शक्ति भएको तर केही अपठेराहरूको कारणले गर्दा घेराउ र झंझट अनुभव गर्ने भएको अनि शत्रुको वास्ता नगरेर प्रतिस्पर्धामा साहसको परिचय दिन जान्ने, शत्रुलाई पराजित पार्नको लागि गुप्त शक्तिले पनि काम लिन जान्ने र शीलरहित स्वार्थयुक्त परिश्रमले कार्यसिद्ध गर्नेवाला र विवाद एवं झगड़ा भित्र उचित निर्णयसम्म पुग्न नपाउँदै रिसले गर्दा आफ्नू प्रहार शुरू गरिदिने खालको होला।

कु० नं० १३४०

१२ ११ १० १ ९ २ ८ ३ ५ ७ ४के. ६

जुन व्यक्तिको सिंहराशिको केतु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री र गृहस्थीको सम्बन्धमा अनेक साना-ठूला झ्याउला कष्ट बाधा सहेर पनि काम चलाउने र व्यापारको क्रममा अनेक थरिका महान परिश्रम र ठूला कष्टहरू द्वारा दैनिक कार्य गर्नेवाला र व्यापारको घेरामा सांघातिक हानिहरू पनि सहने खालको तथा गुप्त साहस अनि प्रभाव शक्ति द्वारा सफलता प्राप्त गर्ने भएको र इन्द्रिय भोगादिको सम्बन्धमा धेरै न्यूनता र विवाद पाउने भएको तर भोगादिको उग्र शक्ति राख्ने खालको र लौकिक कार्यक्रमको ज्ञान थोरै नै भएपनि हिम्मत र अभिमानले काम पूर्ण पार्ने खालको होला।

कु० नं० १३४१

१२ १० ९ ११ ९ २ ८ ३ ५के. ७ ४ ६

जुन व्यक्तिको कन्याराशिको केतु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस जीवनको दिनचर्यामा केही अपठेरो अनुभव गर्ने खालको र पुरातत्त्वको प्रकट शक्तिमा केही हानि पाउने भएको र गुप्त शक्तिको बल प्राप्त गर्ने खालको अनि गूढातिगूढ विषयको आन्तरिक ध्यान गर्ने भएको तथा जीवनमा अनेक कष्ट-बाधा सहेर पछि कुनै चिरस्थायी शक्तिलाई प्राप्त गरेर मात्र सन्तुष्ट हुने खालको र आयु र जीवनमा साना-ठूला कठिन संघर्ष सहेर पनि हिम्मतले काम पूरा गर्ने तथा प्रभावयुक्त होला।

कु० नं० १३४२

१२ १० ९ ११ ९ २ ८ ३ ५ ७ ४ ६के.

जुन व्यक्तिको तुलाराशिको केतु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस यशमा केही न्यूनता र भाग्य-स्थानमा केही कष्ट-बाधा सहनेवाला अनि भाग्यको वृद्धिका लागि निकै ठूलो गुप्त शक्तिको गुप्त चातुर्यहरूद्वारा काम सिद्ध पार्न जान्ने खालको तथा भाग्योन्नतिको सम्बन्धमा बर्ता सोच-विचार नगरीकन नै स्फूर्ति र साहसले काम पूरा गर्नेवाला तथा भाग्यको स्थायी दृढता प्राप्त गर्नका लागि ठूलोभन्दा पनि ठूलो विपत्तिको वास्ता नगर्ने भएको अनि धर्मको सम्बन्धमा यथार्थ रूपलाई नपाई केही तामसी धर्मको पालन निकै धैर्यसाथ गर्नेवाला र सफलता प्राप्त गर्ने खालको होला।

कु० नं० १३४३

१२ १० १ ११ ९ २ ८ ३ ५ ७के. ४ ६

जुन व्यक्तिको वृश्चिक राशिको केतु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा केही कष्ट सहन गर्नेवाला तथा पितालाई हानि पुऱ्याउने भएको, व्यापारको विषयमा अनेक कष्टबाधा सहन गर्ने एवं राज-समाजमा परेशानी अनुभव गर्ने खालको, मान-सम्मान तथा पदोन्नतिमा अनेक बाधा झ्याउला सहने भएको र आफ्नू उन्नति र इज्जत बनाउन र प्राप्त गर्नका लागि अनेकानेक बाधा सहन गर्न सक्ने खालको अनि गुप्त शक्तिको बलले बढी धैर्यको साथ आफ्नू काम गर्नेवाला, कठोर परिश्रमी कर्म गर्ने भएको र गुप्त साहस एवं हिम्मतवाला उग्र कर्मेष्ठी होला।

कु० नं० १३४४

१२ १० १ ११ ९ २ ८के. ३ ५ ७ ४ ६

जुन व्यक्तिको धनुराशिको केतु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नू गुप्त महान शक्तिको बलले खूब धन लाभ पाउने भएको र विशेष लाभ प्राप्तिको स्थानमा अधिकार र अनधिकारको केही पनि वास्ता नगर्ने खालको, आफ्नू स्वार्थ-सिद्धिको सामुन्ने कुनै पनि कुराको सोच-विचार तथा डर-भर नमान्ने खालको, सित्तैंको जस्तो अनेक लाभ प्राप्त गर्नेवाला र अन्यान्यको नाफा-हानिको ख्याल नराख्न सक्ने भएको, लाभको स्थानमा चारैतिरबाट सकेसम्म बटुल्ने खालको तथा प्रभाव शक्तिको योगबाट पनि फाइदा प्राप्त गर्ने भएको, आमदानीमा प्रसन्न र मस्त रहने खालको होला।

कु० नं० १३४५

| | | |
|---|---|---|
| १२ (१) | ११ (लग्न) | १० (९ के.) |
| २ | | ८ |
| ३ (४) | ५ | ७ (६) |

जुन व्यक्तिको मकर राशिको केतु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी खर्च गर्नेवाला तथा खर्च शक्तिको गुप्त बल राख्ने भएको र कहिले काहीं बढी खर्चको कारणहरूले केही झंझट बाधा-कष्ट र अत्यास पनि अनुभव गर्ने खालको र अन्यान्य बाहिरी सम्बन्धको विषयमा केही परेशानीको योग पाउने भएको तथा बाहिरी अन्य स्थानहरूको सम्पर्कमा निकै गुप्त वा स्थिर शक्तिद्वारा काम लिन जान्ने तथा बाहिरी सम्बन्धमा कुनै पनि बर्ता सोच-विचार नगरेर बेवास्तासित शक्तिको प्रयोग गरेर खर्चको शक्ति प्राप्त गर्दै रहने खालको तथा खर्चको सम्बन्धमा खर्चको गति वा तेजीलाई रोक्न नसक्ने खालको होला।

कु० नं० १३४६

| | | |
|---|---|---|
| १२ (१) | ११ (लग्न) | १० के. (९) |
| २ | | ८ |
| ३ (४) | ५ | ७ (६) |

# मीन लग्न हुनेहरूको-भविष्यका तारीखहरू

सन् १९९६को वर्षमा - गुरु बाह्रौं स्थानमा नीच रहने छन्, यसै निम्ति आमदानीको मार्गबाट शरीरलाई केही कष्ट-बाधा रहने छ। ता० १/१/९६ देखि समय बढी खर्चको रहने छ। ता० २८/१/९६ देखि मान-सम्मान र भाग्योदय होला। ता० १५/७/९६ देखि भाग्यको पक्षमा केही दुर्बलता प्रतीत होला। ता० २७/१०/९६ देखि भाग्यको सुख र सफलता रहने छ। ता० ५/१२/९६ देखि ता० ३१/१२/९६ सम्ममा भाग्योन्नति तल-माथि चल्दै रहने छ।

कु० नं० १३४७

१ ११ २ १२ १० ३ ९ ४ ६ ८ ५ ७

सन् १९९७ को वर्षमा- ता० १/१/९७ देखि समय प्रभावयुक्त रहने छ। ता० २१/१/९७ देखि धनको लाभ उत्तम रहने छ। ता० ९/२/९७ देखि व्यय बढी रहने छ। ता० १६/३/९७ देखि मान प्रभाव बढ्दै जाला। ता० २/८/९७ देखि केही बाधासहित सफलता रहला। ता० १२/९/९७ बाट सुख-शान्ति र सफलता रहला। ता० २६/९/९७ बाट ता० १५/११/९७ सम्म आमदानी बढ्दै जानेछ। ता० १६/११/९७ बाट ता० ३१/१२/९७ सम्ममा भाग्यको स्थिति मध्यम रहला, खर्च बढी हुनेछ।

कु० नं० १३४८

१ ११ २ १२ १० ३ ९ ४ ६ ८ ५ ७

# मीन लग्नमा सुनौला तारीखहरू

सन् १९९८ को वर्षमा - ता० १/१/९८ बाट समय प्रभावयुक्त, लाभदायक रहने छ। ता० ३१/१/९८ बाट केही कष्ट-बाधा रहला। ता० १४/४/९८ बाट समय प्रभावशाली चल्नेछ, प्रभाव बढ्‌ला। ता० १७/७/९८ बाट मस्तिष्कमा बाधा पर्नेछ। ता० ४/९/९८ बाट गृहस्थी र व्यापारमा सफलता र सुख रहने छ। ता० २५/९/९८ बाट गृहस्थी एवं भाग्यमा जाती-नजाती दुवै रहने छन्। ता० ३१/११/९८ बाट भाग्यमा केही सफलता रहने छ। ता० २९/१२/९८ सम्ममा केही कष्ट-बाधाका साथसाथै सफलता पनि मिल्दै रहला।

कु० नं० १३४९

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७

सन् १९९९ को वर्षमा - ता० १/१/९९ बाट भाग्यको उन्नतिदायक समय रहने छ। ता० १२/३/९९ देखि केही झ्याउला आउनन्। ता० १/४/९९ देखि समय लाभदायक रहला। ता० १३/५/९९ देखि भाग्यको समय केही दुर्बल रहने छ। धन केही आउने र जाने समान रहला। ता० ५ /७/९९ बाट भाग्यको सफलता रहला, सम्मान बढ्‌दै जाला। ता० १०/८/९९ बाट गृहस्थीको सुखमा कमी आउला। ता० २९/८/९९ बाट समय सप्रन्दै जानेछ। ता० २३/९/९९बाट केही कष्ट-बाधा रहने छ। ता० २२/११/९९ देखि ३१/१२/९९ सम्म भाग्यको उन्नति चल्दै रहने छ।

कु० नं० १३५०

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७

# मीन लग्नमा सुनौला तारीखहरू

सन् २००० को वर्षमा - ता० १/१/२००० बाट समय राम्रो र लाभदायक रहला। ता० २३/२/२००० देखि समय बढी खर्चको रहने छ। ता० २५/३/२००० देखि भाग्यको समय सप्रन्दै जानेछ। ता० ७/६/२००० देखि भाग्यको पक्षमा केही दुर्बलता अनुभव होला। ता० २/९/२००० बाट केही कष्ट-बाधा बढ्न सक्तछ। ता० १०/९/२००० बाट भाग्य सप्रन्दै जानेछ। ता० २६/१०/२००० बाट फेरि भाग्यमा केही कमजोरी आउला। ता० १६/११/२००० बाट ३१/१२/२००० सम्म भाग्यको सफलता र उन्नति रहने छ।

कु० नं० १३५१

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७

सन् २००१ को वर्षमा - ता० ३/१/२००१ बाट भाग्यको सफलता चल्नेछ। ता० २८/२/२००१ बाट समय बढी खर्चको रहने छ। ता० १९/३/२००१ बाट अकस्मात् धनागम र सुख प्राप्त होला। ता० १३/४/२००१ बाट भाग्यमा दुर्बलता आउला। ता० २३/५/२००१ बाट फेरि सौभाग्य फर्कला। मान-सम्मान र प्रभाव बढ्ला। ता० २९/७/२००१ बाट केही कष्ट-बाधा सहित भाग्यको सफलता देखापर्ला। ता १४/११/२००१ देखि ता० ३१/१२/२००१ सम्ममा प्रायः भाग्यको सफलता बनिरहला।

कु० नं० १३५२

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७

# मीन लग्नमा सुनौला तारीखहरू

सन् २००२ को वर्षमा - ता० १/१/२००२बाट मान प्रभाव बढ्ला। ता० २१/२/२००२ देखि बढी खर्चले कष्ट होला। ता० २६/३/२००२ बाट आमदानीमा सुख सफलता बनिरहने छ। ता० २/६/२००२ बाट परिश्रमको मार्गबाट सफलता र प्रभाव बढ्नेछ। ता० २/८/२००२ बाट केही कष्ट-बाधा सहित भाग्यको सफलता रहला। ता० १८/१०/२००२ बाट गृहस्थी र जीवनमा अनेक झ्याउला आउनन्। ता० १/१२/२००२ बाट ३१/१२/२००२ सम्ममा मान-प्रभाव बढ्ला र भाग्यद्वारा सफलता मिल्ला।

कु० नं० १३५३

१ ११ २ १२ १० ३ ९ ४ ६ ८ ५ ७

सन् २००३ को वर्षमा - ता० ६/१/२००३ देखि भाग्य र मान प्रभावको उन्नति रहला। ता० १४/२/२००३ बाट आय-व्यय राम्रो रहला। ता० २०/३/२००३ बाट भाग्य दुर्बल रहला। ता० १/५/२००३ बाट भाग्य र मान-सम्मानको प्रभाव शक्ति बढ्ने छ। ता० ८/६/२००३ बाट भाग्यद्वारा धनको सफलता रहने छ। ता० २०/७/२००३ बाट पुरुषार्थ द्वारा भाग्योन्नति हुनेछ। ता० २८/८/२००३ बाट गृहस्थीमा केही कष्ट-बाधा भए पनि भाग्यले राम्रो लाभ दिनेछ। ता० ३/१०/२००३ बाट घरेलू मार्गमा केही झ्याउलो आउला। ता० ४/१२/२००३ देखि ता० ३१/१२/२००३ सम्ममा लाभको सफलता र प्रभावको जागृति रहला।

कु० नं० १३५४

१ ११ २ १२ १० ३ ९ ४ ६ ८ ५ ७

# मीन लग्न हुनेको-सुनौला तारीखहरू

सन् २००४ को वर्षमा - ता० १/१/२००४ बाट मान प्रभाव बढ्ने छ। ता० २७/१/२००४ बाट राम्रो लाभ प्राप्त होला। ता० १२/२/२००४ देखि बढी व्यय हुनेछ। ता० १४/२/२००४बाट भाग्यको दुर्बलता प्रतीत होला। ता० १३/६/२००४ देखि परिश्रमले सफलता मिल्ला। ता० २/८/२००४ देखि गृहस्थी एवं व्यापारमा धन र भाग्यको सफलता रहला। ता० १७/९/२००४ देखि भाग्यले धोखा देला। ता० ३/१२/२००४ बाट ता० ३१/१२/२००४ सम्म सुख-शान्ति र भाग्योन्नति रहने छ।

कु० नं० १३५५

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७

सन् २००५ को वर्षमा - ता० १/१/२००५ बाट भाग्य र मान प्रभावको वृद्धि रहला। ता० २७/१/२००५ सम्म लाभ राम्रो रहने छ। ता० २८/२/२००५ देखि ता० १०/४/२००५ सम्म भाग्य दुर्बल रहला। ता० २३/४/२००५ देखि भाग्य सप्रन्दै जाला। ता० १६/५/२००५ देखि धनको पक्ष सफलतातिर लम्कने छ। मान प्रभाव बढ्ला। ता० २/८/२००५ बाट केही कष्टबाधा रहने छ। ता० ३/९/२००५ देखि व्यापारमा सपलता मिल्नेछ। ता० २१/९/२००५ देखि ता० २६/११/२००५ सम्म केही कष्ट रहे पनि भाग्यको सफलता बनिरहला। ता० २८/१२/२००५ सम्म भाग्योन्नति उत्तम रहने छ।

कु० नं० १३५६

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७

# मीन लग्न हुनेको-सुनौलो तारीखहरू

सन् २००६ को वर्षमा - ता० १/१/२००६ मा धनलाभ रहने छ। ता० ११/३/२००६ देखि समय केही दुर्बल रहला। ता० २०/४/२००६ देखि भाग्योन्नति र धनागम प्रबल रहला। ता० २६/८/२००६ देखि गृहस्थी र व्यापारमा विशेष सफलता रहने छ। ता० ११/९/२००६ बाट गृहस्थी र व्यापारमा बाधा-कष्ट र हानि रहला। ता० ४/११/२००६ देखि भाग्यको सफलता रहने छ। ता० ३१/१२/२००६ सम्ममा राम्रो धनागम हुनेछ।

कु० नं० १३५७

१ ११ २ १२ १० ३ ९ ४ ६ ८ ५ ७

सन् २००७ को वर्षमा - ता० १/१/२००७ देखि समय सुखदायक, लाभदायक रहने छ। ता० ८/२/२००७ देखि धनको पक्ष केही कमजोर रहन सक्तछ। ता० १९/३/२००७ देखि भाग्यको पक्ष उन्नतितर्फ लम्कने छ। ता० ९/६/२००७ देखि पुरुषार्थ कर्मबाट भाग्य र प्रभाव मान-सम्मानको उन्नति रहला। ता० १९/८/२००७ देखि ता० २६/१०/२००७ सम्ममा गृहस्थी र व्यापारमा सफलता रहला। त्यसपछि केही कष्ट-बाधा आउन सक्दछ। ता० ११/११/२००७ बाट ३१/१२/२००७ सम्ममा भाग्यको सफलता बनिरहला।

कु० नं० १३५८

१ ११ २ १२ १० ३ ९ ४ ६ ८ ५ ७

# कार्यसिद्धिको विषय

मीन लग्न हुने व्यक्तिहरूको निम्ति धनको आयको सम्बन्धमा शनि सदैव कष्ट-बाधाका सूचक छन्, भाइ-बहिनी र पुरुषार्थको सम्बन्धमा शुक्र केही कष्ट-बाधाका सूचक छन् र शत्रु, झगडा एवं प्रभावको सम्बन्धमा सूर्य सदैव कष्टका सूचक छन्। अतः प्रत्येक शनिवार कालीगाईलाई शक्कर रोटी आफूले खानुभन्दा अगाडि खान दिनु र शुक्रवार दूध हालेको भांग र सेतो फूल शिवजीलाई चढाउनु, अनि बिहान स्नान गरेर गुलाबको फूल र जल सूर्यलाई चढाई नमस्कार गर्नु। राहु-केतु स्वभावैले दुःखदाता हुन्। अतः पक्षीहरूलाई अन्न र माछालाई पीठोको साना-साना गोली खान दिनु।

कु० नं० १३५९

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७

मीन लग्न हुनेहरूलाई धन र भाग्योन्नतिको सम्बन्धमा मङ्गल धेरै श्रेष्ठ कहिन्छ र व्यापारको सम्बन्धमा गुरु र बुध उत्तम मानिन्छ, यसै निम्ति पञ्चाङ्ग भित्र मङ्गल जब-जब मकर, मीन, मेष, वृष, मिथुन, कन्या, वृश्चिक र धन राशिहरूमा आउँछन् अथवा जब-जब गुरु, धन, मीन, मेष, कर्क, वृश्चिकमा आउँछन् या बुध जब-जब मकर, मेष, वृष, मिथुन, कर्क, कन्या, वृश्चिक, धन राशिहरूमा आउँछन्, तब-तब ती वर्ष तथा महीनाहरूमा धन-मान र भाग्य तथा व्यापारको उन्नति हुनेछ।

कु० नं० १३६०

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७

# मीन लग्न हुनेहरूको-प्रतिकूल समय ज्ञान

कु० नं० १३६१

| | | | |
|---|---|---|---|
| २ | १ | ११ | १० |
| | १२ | | |
| | ३ | ९ | |
| ४ | ६ | | ८ |
| | ५ | ७ | |

(सदैव कालको लागि)

तल लेखिएका ग्रहहरू जब-जब यी राशिहरूमा पञ्चाङ्गमा आउने छन् तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिनमा प्रतिकूल फल प्रदान गर्नेछन्।

सू० - तुला र कुम्भ।
चं० - सिंह, तुला, वृश्चिक र कुम्भ।
मं० - कर्क, तुला, कुम्भ र सिंह।
बु० - सिंह, तुला, कुम्भ र मीन।
गु० - सिंह, तुला, कुम्भ र मकर।
शु० - सिंह, कन्या, तुला र कुम्भ।
श० - मेष, सिंह, तुला र धन।
रा० - मीन, मेष, कर्क, कन्या, तुला र धन।
के० - मीन, मेष, मिथुन, कर्क, कन्या र तुला।

*नोट-* सालानाको फलादेश जान्नका लागि गु० शु० रा० के० यी चार ग्रहहरूबाट हेर्नुपर्दछ। अनि महीनाको फलादेश जान्नका लागि सू० बु० शु० म० यी चार ग्रहहरूबाट हेर्नुपर्दछ। फेरि दैनिक फलादेश जान्नका लागि चन्द्रमाबाट हेर्नुपर्दछ। जब-जब कुनै ग्रह सूर्यबाट अस्त हुन्छ, तब-तब त्यो दुर्बल फल दिने मानिन्छ।

# मीन लग्न हुनेहरूको-अनुकूल समय ज्ञान

कु० नं० १३६२

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७

(सदैव कालका लागि)

तल लेखिएका ग्रह जब-जब यी राशिहरूमा पञ्चाङ्ग भित्र आउँछन् तब-तब ती वर्षमा, महीनामा र दिनहरूमा अनुकूल समय रहने छ।

**सू०-** सिंह, कन्या, वृश्चिक, धन, मकर, मीन, मेष, वृष, मिथुन र कर्क।

**चं०-** कन्या, धन, मकर, मीन, मेष, वृष, मिथुन र कर्क।

**मं०-** कन्या, वृश्चिक, धन, मकर, मीन, मेष, वृष र मिथुन।

**बु०-** कन्या, वृश्चिक, धन, मकर, मेष, वृष, मिथुन र कर्क।

**गु०-** कन्या, वृश्चिक, धन, मकर, मीन, मेष, वृष, मिथुन र कर्क।

**शु०-** वृश्चिक, धन, मकर, मीन, मेष, वृष, मिथुन र कर्क।

**श०-** वृश्चिक, मकर, मीन, वृष, मिथुन, कर्क र कन्या।

**रा०-** मकर, कुम्भ, वृष, मिथुन, सिंह, वृश्चिक र कुम्भ।

**के०-** मकर, कुम्भ, वृष, सिंह, वृश्चिक, धन र मीन।

***नोट-*** सालानाको फलादेश जान्नका लागि गु०, शु०, रा०, के० यी चार ग्रहहरूबाट हेर्नुपर्दछ। अनि महीनाको फलादेश जान्नका लागि सू०, बु०, शु०, मं० यी चार ग्रहहरूबाट हेर्नुपर्दछ। फेरि दैनिक फलादेश जान्नकालागि चन्द्रमाबाट हेर्नुपर्दछ।

# मीन लग्नान्तर-सूर्यफलम्

जुन व्यक्तिको मीन राशिको सूर्य लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस बढी प्रभाव राख्ने भएको तथा शत्रुस्थानमा आदर्श युक्तिहरू र दैनिक तेज, बलद्वारा विजय पाउने खालको, मावलीको बढी सहयोग पाउनेवाला तथा शरीरमा केही रोग र केही झञ्झट वा अशान्ति पाउने भएको र केही घेराउ र केही बन्धन अनुभव गर्ने खालको, मनमा बर्ता क्रोध राख्नेवाला अनि कुनै पनि प्रकारको बाधा होस्, त्यस बाधालाई बुद्धिबलले दमन गर्ने शक्ति भएको र हठ्योगको शक्ति राख्ने खालको अनि स्त्री स्थानमा झगडा-विवाद पाउने भएको र भोगादि पक्षमा केही न्यूनता पाउने खालको र व्यापारको पक्षमा केही झ्याउला र बाधा सहने भए पनि प्रतापी होला।

कु० नं० १३६३

| | | | |
|---|---|---|---|
| | १ | ११ | |
| २ | १२सू. | | १० |
| | ३ | ९ | |
| ४ | ६ | | ८ |
| | ५ | ७ | |

जुन व्यक्तिको मेषराशिको सूर्य लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस महान् परिश्रमले धेरै धन प्राप्त गर्ने भएको र धनको तागतबाट ठूलो प्रभाव पाउनेवाला र कुनै धनाढ्यको झैं योग पाउने भएको तथा कुटुम्बस्थानमा प्रभाव र विग्रह पाउनेवाला र शत्रुपक्षलाई वशमा राख्नको निम्ति निकै ठूलो युक्तिहरूको ढुकुटी राख्ने भएको, जीवनको दिनचर्यामा केही अशान्ति पाउनेवाला, पुरातत्त्व शक्तिको केही हानि पाउने भएको र धनको वृद्धिका लागि धेरै ठूला युक्तिहरूको ढुकुटीबाट काम चलाउनेवाला र झगडा-विवाद, झ्याउलाहरूबाट फाइदा प्राप्त गर्ने खालको होला।

कु० नं० १३६४

| | | | |
|---|---|---|---|
| | १सू. | ११ | |
| २ | १२ | | १० |
| | ३ | ९ | |
| ४ | ६ | | ८ |
| | ५ | ७ | |

जुन व्यक्तिको वृषराशिको सूर्य लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस पुरुषार्थद्वारा ठूलो परिश्रम गर्ने भएको, निकै दगुरा-दगुर गर्ने खालको, भाग्य-वृद्धि गर्ने भएको र धर्मको इज्जत गर्ने भएको तथा दाजु-भाइ दिदी-बहिनीबाट विरोधको योग पाउनेवाला, परिश्रमले केही थकाई र दुर्बलता अनुभव गर्ने खालको र बलियो हिम्मतले काम सपार्ने भएको, शत्रुपक्षमा प्रभाव पार्नेवाला अनि प्रभावशाली घुमाउरा युक्तिहरूले सफलता पाउने भएको, परिश्रमबाट यश प्राप्त गर्ने खालको, मावली पक्षको प्रभाव पाउनेवाला, निकै बाठो प्रतापी होला।

कु० नं० १३६५

१ ११
२सू. १२ १०
३ ९
४ ६ ८
५ ७

जुन व्यक्तिको मिथुन राशिको सूर्य लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस पिता र मातृस्थानमा केही झञ्झट र झगड़ा पाउनेवाला, रहन-सहन र भूमि-भवनादिको केही गडबडी पाउने खालको तथा सुख र आराममा केही न्यूनता पाउने भएको, अनि शत्रुपक्षमा बढी शान्तिपूर्वक सफलता पाउने भएको, सुखको प्रदर्शनको प्रभाव राख्ने खालको, मावली पक्षबाट सुख प्राप्त गर्ने भएको अनि ठूलो परिश्रमले सुखको वृद्धि गर्नेवाला र प्रभावशाली शान्त युक्तिहरूको बलले अनि परिश्रमको माध्यमबाट मान-प्रतिष्ठाको वृद्धि पाउने भएको तथा राज समाजमा सम्मान र इज्जत पाउने खालको, उग्रकर्म गर्ने प्रभावशाली र साहसी होला।

कु० नं० १३६६

१ ११
२ १२ १०
३सू. ९
४ ६ ८
५ ७

जुन व्यक्तिको कर्कराशिको सूर्य लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धिभित्र ठूलो प्रभावले काम लिन जान्ने अनि बढी घुमाउरा चातुर्यहरूबाट अभिमानपूर्वक कुराकानी गर्ने भएको, विद्यामा केही न्यूनता पाउनेवाला, सन्तान पक्षमा केही बाधा-कष्ट अनुभव गर्नेवाला मस्तिष्क भित्र केही तर्क-वितर्कको योग पाउने भएको, आमदानीका लागि बुद्धिद्वारा खूब परिश्रम गर्ने भएको र शत्रुपक्षलाई बुद्धिको युक्तिले पराजित पार्नेवाला, कष्ट-बाधा र झ्याउलाहरू हटाउने साधन बुद्धिमै प्राप्त गर्ने भएको अनि केवल धाक देखाएर लाभ प्राप्त गर्ने खालको होला।

कु० नं० १३६७

१ ११
२ १२ १०
३ ९
४सू. ६ ८
५ ७

जुन व्यक्तिको सिंहराशिको सूर्य लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस आफूसित निकै ठूलो, महान् प्रभाव शक्ति राख्ने भएको र सङ्कल्प मात्रले शत्रुको दाम गर्ने खालको अनि संसारको कुनै पनि तागतसित नडराउने खालको, मावली पक्षबाट निकै ठूलो प्रभाव पाउने भएको, खर्चको स्थानमा केही अरुचिहरू र नीरसताको योग पाउने भएको, फेरि अन्यान्य स्थानहरूको सम्पर्कमा वैमनस्यता पाउने खालको, झ्याउलो र कष्ट-बाधा एवं विपत्तिहरूलाई हटाउने महत्व शक्ति राख्ने भएको र विपक्षीहरूमा आफ्नू प्रभाव धाक सदैव कायम राख्नको लागि निकै बढी प्रयत्न र धेरै ठूलो ध्यान हमेशा राख्ने खालको होला।

कु० नं० १३६८

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५सू. ७

जुन व्यक्तिको कन्याराशिको सूर्य लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री–स्थानमा विरोध पाउने भएको, गृहस्थीमा केही झञ्झट सहने खालको, व्यापारको क्रममा केही कष्ट-बाधा र रोकावट पाउने भएको, केही परिश्रम र अपठेराहरू हटाउने प्रकाश दिएर काम सिद्ध पार्ने खालको तथा निकै बढी प्रभाव र परिश्रमबाट व्यापार गर्न जान्ने भएको, इन्द्रिय भोगादिको पक्षमा केही न्यूनता पाउनेवाला तथा मावली पक्षबाट केही सहायक शक्ति पाउने भएको तथा दैनिक व्यापारको पंक्तिमा केही कठोरताको व्यवहार गर्न जान्नेवाला र शरीरमा केही बढी परिश्रम पाउने होला।

कु० नं० १३६९

१ ११ २ १२ १० ३ ९ ४ ६सू. ८ ५ ७

जुन व्यक्तिको तुला राशिको सूर्य लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस पुरातत्त्व र प्रभावमा धेरै बर्ता न्यूनता पाउने भएको, मावली पक्षमा धेरै ठूलो हानि पाउने खालको र जीवनमा बर्ता अशान्ति र कष्ट-बाधाहरू सहने भएको, पेटभित्र नाभिभन्दा तल केही उदरविकारको शिकायत पाउने र शत्रुपक्षमा निकै बढी कूट युक्तिहरूले तथा महान घुमाउरा बांगा गुप्त चालहरूद्वारा काम सिद्ध पार्न जान्ने, धनको वृद्धिका लागि बढी परिश्रम र बर्ता अशान्ति तथा अनेक गुप्त कार्यबाट आफ्नू काम बनाउनेवाला आयु माथि कहिले काहीं ठूलै सङ्कट सहने खालको होला।

कु० नं० १३७०

१ ११ २ १२ १० ३ ९ ४ ६ ८ ५ ७सू.

जुन व्यक्तिको मकर राशिको बुध लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस व्यापारको माध्यमबाट सुखपूर्वक बढी लाभ र आमदानी पाउने भएको र भवन-भूमिको पनि लाभ पाउने खालको, स्त्री-सुखको राम्रो लाभ पाउने भएको, नित्य प्रतिको कार्यक्रममा उत्तम विवेक र शान्तिद्वारा उत्तम फाइदा पाउने भएको तथा भोग-विलासको सुख र लाभ प्राप्त गर्ने भएको, आमाको लाभ पाउनेवाला तथा सन्तान पक्षको सुख प्राप्त गर्ने भएको, विवेक शक्तिले विद्यामा सफलता पाउने भएको तथा मीठो बोल्ने र सुख आराम पाउनका लागि राम्रो ढङ्ग र माध्यम तयार पार्न जान्ने भएको, निकै चातुर्य र नरम कुरा-कानीले विशेष फाइदा पाउने खालको होला।

कु० नं० १४०९

१, ११, १२, १० बु., २, ३, ९, ४, ६, ८, ५, ७

जुन व्यक्तिको कुम्भराशिको बुध लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस मातृस्थानमा केही हानि पाउने भएको, स्त्री-स्थानमा पनि आंशिक हानि पाउने खालको, व्यापारमा पनि केही हानि पाउने भएको, सुख र आराममा पनि केही पाउनेवाला, भोगादि पक्षमा केही न्यूनता पाउने भएको, बढी धन खर्च गर्ने बानी भएको तथा अन्यान्य स्थानबाट सुखको प्राप्ति गर्ने भएको, अन्य बाहिरी स्थानको सम्पर्कबाट विवेक योगद्वारा व्यापारको शक्ति पाउने भएको तथा अन्य स्थानको सम्बन्धबाट र खर्चको तागतले सुख भोग प्राप्त गर्ने खालको र शत्रुस्थानमा नरम बनेर आफ्नू काम सिद्ध पार्न जान्ने भएको तथा लौकिक गार्हस्थ्य सुखलाई बढी ढीलो प्राप्त गर्ने खालको धार्मिक व्यक्ति होला।

कु० नं० १४१०

१, ११ बु., १२, २, १०, ३, ९, ४, ६, ८, ५, ७

# मीन लग्नान्तर–गुरुफलम्

जुन व्यक्तिको मीन राशिको गुरु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस महान् गौरव प्राप्त गर्ने भएको र मस्तिष्क भित्र आदर्श कर्मको शक्ति राख्ने खालको र आत्माको लौकिक गुणहरूको ढुकुटी राख्नेवाला र शरीरको प्रभुता पाउने भएको एवं पिताको शक्तिबाट उच्च भर-थेग पाउने भएको तथा विद्या भित्र विशेष चमत्कार उत्पन्न गर्न जान्ने अनि सन्तान शक्तिको विशेष महत्व प्राप्त गर्ने भएको र राज-समाजमा मान-सम्मान पाउने खालको एवं धर्म-कर्मको पालन गर्नेवाला तथा कुरा-कानीमा चमत्कारिक वाणी भन्नेवाला अनि स्त्री-स्थानमा मान-यश पाउनेवाला, भलादमी झैं रहन-सहन भएको निकै स्वाभिमानी होला।

कु० नं० १४११

१ ११ २ १२गु. १० ३ ९ ४ ६ ८ ५ ७

जुन व्यक्तिको मेष राशिको गुरु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस पिताको धन-शक्तिलाई प्राप्त गर्ने भएको अनि आफ्नू भलादमी हुने कर्मयोगमा धेरै धन कमाउने खालको, धेरै ठूलो कारबार वा व्यापार आफ्नू हृदय र शरीरको बलद्वारा संचालित गर्ने र राज-समाजमा बढी इज्जत कमाउने र धन एवं कुटुम्बहरूको भित्र बर्ता गौरव पाउने भएको, मावली पक्षमा पनि ठूलो इज्जत कमाउनेवाला र शत्रु स्थानमा निकै बढी प्रभाव राख्ने, अनि झ्याउलाहरूमा विजय पाउने भएको तथा केही भलादमीपनको घुमाउरा कुराहरूबाट सम्मान पाउने र आफ्नू शरीर एवं आत्माभन्दा पनि बढी महत्व धनलाई दिएर धन जोर्नेवाला र बढी प्रभावशाली होला।

कु० नं० १४१२

१गु. ११ २ १२ १० ३ ९ ४ ६ ८ ५ ७

जुन व्यक्तिको वृषराशिको गुरु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस धेरै बढी परिश्रम र पैत्रिक कर्मद्वारा उन्नति गर्ने भएको, राज-

कु० नं० १४१३

१ ११
२गु. १२ १०
३ ९
४ ६ ८
५ ७

समाजबाट सहयोग पाउने अनि दाजु-भाइसित केही विरोध मान्नेवाला र आमदानीमा कमी अनुभव गर्ने भएको र आमदानीको स्थान मार्गमा केही अनुचित लाभ पनि पाउने भएको, धर्म-कर्मको पालन गर्ने तथा आफ्नू कर्म गर्दै रहने, व्यापारको पंक्तिमा बढी पड़प्पन पाउनेवाला र स्त्रीको मनमा महानता पाउनेवाला, गृहस्थी भित्र भोग तथा प्रभाव पाउने खालको र जिद्दी स्वभावको प्रभावशाली होला।

जुन व्यक्तिको मिथुन राशिको गुरु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस सुखपूर्वक आरामले रहने भएको, भूमि-भवनको शक्ति राख्ने

कु० नं० १४१४

१ ११
२ १२ १०
३गु. ९
४ ६ ८
५ ७

खालको, घरभित्र निकै बर्ता प्रभाव तथा वैभव पाउने भएको, माता-पिताको सुख प्राप्त गर्नेवाला, सुखपूर्वक हृदय-बलले कारबार गर्नेवाला, आफ्नू हुकूम दिने किसिमले निवास गर्ने भएको र पुरातत्त्वको लाभ भेट्टाउने र आयुमा वृद्धि पाउने खालको, खर्च स्थानमा केही वैमनस्यता पाउनेवाला र आफ्नू कर्मभित्र अभिमान तथा महानता पाउने भएको तथा अन्यान्य स्थानमा आमोद-प्रमोद पाउने खालको होला।

जुन व्यक्तिको कर्कराशिको गुरु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस आफ्नू बुद्धिभित्र महान् शक्ति पाउने खालको र हृदय तथा आत्माभित्र ठूलो महानता पाउने भएको, बढी विद्या पढेको, धेरै प्रभावशाली भाषण दिनजान्ने, पिता-पुत्रको शक्ति पाउने खालको शरीरमा सौन्दर्य र राम्रो डिलडाल पाउनेवाला आचार्यको पदवी पाउने भएको, धर्म-कर्मको राम्रो पालन गर्ने भएको, सबैको भाग्यमानी कहिने खालको अनि आमदानीमा आंशिक न्यूनता अनुभव गर्ने भएको तथा आमदानीको स्थानमा केही अलिकति अनुचित लाभ पाउने खालको र बडो स्वाभिमानी तथा निकै प्रभावशाली, दूरदर्शी एवं प्रख्यात व्यक्ति होला।

कु० नं० १४१५

१ ११
२ १२ १०
३ ९
४गु. ६ ८
५ ७

जुन व्यक्तिको सिंहराशिको गुरु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस अलि परतन्त्रता युक्त प्रभावशाली कर्म गर्नेवाला, पिता स्थानबाट केही विरोध पाउने भएको र अलि बडप्पनको परिश्रमी कर्मले बड़प्पनमा वृद्धि पाउने खालको र परिश्रमको आदर्श युक्तिहरूबाट धनको वृद्धि गर्ने भएको र आफ्नू परिश्रमको माध्यमले राज-समाजबाट फाइदा प्राप्त गर्ने भएको, तथा मान-सम्मान पाउने खालको, अलि विचित्र किसिमको स्वतन्त्रता वा परतन्त्रताको सम्मिलित रूप पाउने भएको अनि आफ्नू इज्जतको पूरा-पूरा ध्यान राख्ने खालको र कष्ट-बाधा एवं झ्याउलाहरूको भित्र रहेर पनि ती सबैलाई पर हटाउने दावी गर्ने खालको अनि मावली पक्षबाट इज्जत र मान पाउने खालको साहसी व्यक्ति होला।

कु० नं० १४१६

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५गु. ७

जुन व्यक्तिको कन्याराशिको गुरु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस राम्रो शरीर भएको र हृदय अनि कर्मको शक्ति तथा शरीरको परिश्रमबाट व्यापारमा बढी उन्नति गर्ने भएको र व्यापारकै पंक्तिबाट निकै बढी इज्जत मान पाउने खालको र महानताको साथ काम गर्न जान्ने, स्त्री–स्थानमा राम्रो सौन्दर्य र महानता पाउने भएको, ससुरालीबाट पनि सम्मान पाउने भएको तथा भोग-विलासको शक्ति पाउने खालको, गृहस्थीभित्र गौरव अनुभव गर्ने किसिमको, पिता स्थानबाट व्यापारको क्रममा निकै फाइदा प्राप्त गर्ने भएको र आमदानीको स्थानमा आंशिक न्यूनता अनुभव गर्नेवाला तथा केही अनुचित काइदाले लाभ पाउनेवाला, दाजु-भाइसित केही वैमनस्यताका साथै राम्रो सम्बन्ध राख्ने र धर्म-कर्म मान्ने खालको होला।

कु० नं० १४१७

१ ११
२ १२ १०
३ ९
४ ६गु. ८
५ ७

जुन व्यक्तिको तुलाराशिको गुरु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस परिश्रम कर्मलाई उत्तम काइदाले गर्दै रहेर इज्जत कमाउनेवाला, निकै ठूला र गहीरा गुप्त युक्तिहरूद्वारा कर्म गर्ने तथा पितास्थानबाट केही कमी र कष्टको योग पाउने भएको तथा शरीरमा केही दुर्बलता पाउने र उन्नतिमा बाधाहरू पाउने खालको, राज-समाजबाट केही असन्तोष पाउनेवाला, खर्च स्थानमा केही कष्ट-बाधाका साथ काम गर्दै रहने भएको, सुख प्राप्तिका साधनहरूको संग्रह गर्ने र जीवनको दिनचर्यामा केही बड़प्पन (महानता) पाउनेवाला तथा हृदयमा आंशिक अशान्तिको अनुभव गर्ने भएको, केही धनको वृद्धि गर्ने खालको अनि पुरातत्त्वको लाभ प्राप्त गर्ने खालको होला।

कु० नं० १४१८

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७गु.

जुन व्यक्तिको वृश्चिक राशिको गुरु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस निकै भाग्यशाली, बढी धर्मात्मा, न्यान-प्रिय अनि राज-समाज वा पिताको शक्तिबाट उत्तम लाभ पाउनेवाला, शरीरमा सुन्दरता भएको तथा आत्मबल र दैव-बलको शक्ति पाउने खालको अनि भाग्यको बलले र कर्म-बलबाट निकै ख्याति एवं उन्नति पाउने भएको, हृदयभित्र पवित्रता, उदारता तथा आत्मीयता राख्नेवाला, निकै ठूलो विद्याको सत्वगुणी शक्ति पाउने भएको, सन्तानको लाभ पाउने र निकै सुन्दर ओजस्वी वाणी बोल्ने अनि स्वाभिमानको बढी ध्यान राख्ने, दाजु-भाइ र पुरुषार्थलाई कम महत्व दिने, प्रभावशाली होला।

कु० नं० १४१९

| | |
|---|---|
| १ | ११ |
| २ | १० |
| १२ | |
| ३ | ९ |
| ४ | ८गु. |
| ६ | |
| ५ | ७ |

जुन व्यक्तिको धनुराशिको गुरु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस आफ्नू मनभित्र ठूलो भलादमी-भाव राख्ने र पिताबाट सुन्दर समानताको सम्बन्ध राख्नेवाला र ठूलो व्यापार गर्ने भएको अनि राज-समाजमा बढी प्रतिष्ठा पाउने भएको र धनको निकै वृद्धि गर्नेवाला, मातृ-सम्बन्ध र भवन-भूमिको सुख प्राप्त गर्ने खालको तथा शत्रु स्थानमा ओजस्वी प्रभाव राख्नेवाला र मावलीमा इज्जतको वृद्धि पाउने भएको वा आत्मबल र कर्मबलबाट कुनै महान कार्य सम्पन्न पार्नेवाला, झ्याउलाहरूमा विजय पाउने खालको, बढी साहसी तथा प्रभावशाली राजसी वृत्ति पाउने स्वाभिमानी होला।

कु० नं० १४२०

| | |
|---|---|
| १ | ११ |
| २ | १० |
| १२ | |
| ३ | ९गु. |
| ४ | ८ |
| ६ | |
| ५ | ७ |

जुन व्यक्तिको मकरराशिको गुरु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस शरीरमा लखतरान पर्ने र आमदानीको स्थानमा केही न्यूनता तथा क्लेशको योग पाउने खालको तथा आमदानी वा लाभ प्राप्तिका लागि केही बन्धन या परतन्त्रताको झैं योग पाउनेवाला, पिता स्थानको लाभ-सम्बन्धमा केही दुर्बलता पाउने भएको, बुद्धि स्थानमा विशेष जागृति पाउने भएको, सन्तानको उत्तम शक्ति पाउने भएको, दैनिक व्यापारमा चमत्कारिक उन्नति र इज्जत पाउनेवाला, स्त्री तथा ससुरालीबाट मान-सम्मान र प्रसन्नता पाउनेवाला, गृहस्थी तथा लौकिक काममा प्रवीणता राख्ने निकै वाचाल व्यक्ति होला।

कु० नं० १४२१

१ ११
२ १२ १० गु.
३ ९
४ ६ ८
५ ७

जुन व्यक्तिको कुम्भ राशिको गुरु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस पिता स्थानबाट हानि पाउने र देहमा कष्ट-बाधा पाउने भएको, आत्मामा अशान्ति पाउने र राज-समाजको कार्यहरूमा बढी हानिका साथै कार्य संचालन गर्नेवाला, व्यापार आदिको सम्बन्धमा दुर्बलता पाउनेवाला, खर्चको स्थानमा न्यूनता तथा फालतू खर्च अर्थात् हानिको योग पाउनेवाला, सुख प्राप्तिका साधनहरूको विशेष ध्यान राख्ने भएको, उत्तम कर्मको मार्गमा अल्छी मात्रै खालको र गूढ एवं गुप्त तथा घुमाउरा कामहरू गर्ने भएको, शत्रु-स्थानमा प्रभाव देखाउने भएको र आफ्नू जीवनको दिनचर्यामा प्रसन्नता मात्रैवाला, अन्य स्थानको कटु सम्पर्कमा रहने खालको होला।

कु० नं० १४२२

१ ११गु.
२ १२ १०
३ ९
४ ६ ८
५ ७

# मीन लग्नान्तर-शुक्रफलम्

जुन व्यक्तिको मीन राशिको शुक्र लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस अग्लो कदको निकै ठूलो पुरुषार्थ कर्म र परिश्रम गर्ने भएको दाजु-भाइको महानता पाउने र आयुको वृद्धि पाउने तथा प्रभावशाली जीवन व्यतीत गर्ने भएको, निकै बढी कूटनीतिलाई आदर्श रूपमा व्यवहारमा ल्याउने र पुरातत्त्वको महान लाभ पनि पाउने भएको, दिनचर्याको बसोवासमा मस्ती तथा निस्फिक्री पाउनेवाला, स्त्री-स्थानमा केही न्यूनताको योग पाउने भएको तथा स्त्री-स्थानमा केही अनुचित रीतिले आफ्नू शक्तिको प्रयोग गर्ने खालको तथा दैनिक व्यापारमा केही न्यूनताको योग पाउनेवाला, महान् बाठो र निकै बढी साहस भएको होला।

कु० नं० १४२३

१　११
२　१२शु.　१०
३　९
४　६　८
५　७

जुन व्यक्तिको मेष राशिको शुक्र लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस पुरातत्त्व धनको बढी शक्ति पाउने भएको, दाजु-भाइको सम्बन्धमा केही बन्धन पाउने खालको, जीवनको दिनचर्यामा धनाढ्य झैं गर्न खोज्ने भएको, आयुको वृद्धि पाउनेवाला र उपस्थित धनमा केही हानि पाउने खालको अनि निकै ठूलो कूट युक्तिहरूबाट धनको वृद्धि गर्न जान्ने भएको तथा जीवनको समय शक्ति धन संग्रह गर्नमै व्यतीत गर्ने भएको अनि धनवान्मा गनिनेवाला तथा पुरुषार्थ बलमा केही न्यूनता पाउने भएको, जीवनको निस्फिक्रीले पनि केही धनको हानि पाउने खालको साहसी व्यक्ति होला।

कु० नं० १४२४

१शु.　११
२　१२　१०
३　९
४　६　८
५　७

जुन व्यक्तिको वृषराशिको शुक्र लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस पुरुषार्थ शक्तिले तथा गहीरो युक्तिहरूद्वारा कर्म गर्नेवाला, बाहुबलको शक्ति राख्ने भएको, दाजु-भाइ दिदी-बहिनीको केही कष्टदायक राम्रो शक्ति पाउने भएको, जीवनको दिनचर्यामा बढी शान-अभिमान राख्ने भएको र लामू आयु पाउने भएको तथा पुरातत्त्व शक्तिको फाइदा प्राप्त गर्ने खालको र भाग्यको वृद्धिका लागि निकै बढी परिश्रम गर्नेवाला, धर्मको स्थानमा केही हानि पुऱ्याउने भएको तथा गुप्त शक्तिको बलबाट तथा बढी साहसको बलले तथा बढी चातुर्यहरूको बलले, ठूला-ठूला कार्य गर्ने भएको डर नभएको र प्रभावशाली होला।

कु० नं० १४२५

१, ११, २शु., १२, १०, ३, ९, ४, ६, ८, ५, ७

जुन व्यक्तिको मिथुन राशिको शुक्र लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृस्थानमा केही हानि पाउने र पुरातत्त्व शक्तिको सुख प्राप्त गर्ने तथा दाजु-भाइ दिदी-बहिनीको केही सुख पाउने अनि आयुको राम्रो सुख भोग्ने खालको, जीवनको दिनचर्यामा आनन्द मात्रै भए पनि सुखका साधनहरूमा केही कमी पाउने तथा पिता स्थानमा अलि-अलि वैमनस्यता र कण्टक सहनेवाला, पुरुषार्थ द्वारा सुखपूर्वक र केही परिश्रमयुक्त काम गर्ने भएको अनि सुख प्राप्तिको सम्बन्धमा अनेक थरिका गुप्त युक्तिहरू र चातुर्यहरूद्वारा आफ्नू काम सिद्ध पार्ने, अलिकति विदेशबाट पनि सुख प्राप्त गर्ने भएको, निकै बाठो मानयुक्त होला।

कु० नं० १४२६

१, ११, २, १२, १०, ३शु., ९, ४, ६, ८, ५, ७

जुन व्यक्तिको कर्कराशिको शुक्र लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस आफ्नू मस्तिष्क भित्र महान् कूटनीतिको शक्ति धारण गर्ने भएको, निकै बढ्याइँ युक्त बुद्धि र वाणीका घुमाउरा चालहरूले काम सपार्न जान्ने सन्तान पक्षमा कष्टको योग पाउने भएको, विद्यामा केही पुरातत्त्वको शक्ति-ज्ञान राख्ने भएको, जीवनको दिनचर्याको आनन्द बुद्धिका युक्तिहरूबाट प्राप्त गर्ने खालको, लामू आयु भएको र निकै धन कमाउने खालको, दाजु-भाइ र दिदी-बहिनीको केही न्यूनताका साथै पुत्रवत् स्नेह गर्ने भएको तथा बुद्धि-बलको शक्तिको बढी भर मात्र भएको तथा पुरुषार्थ बलमा केही दुर्बलता पाउने खालको तथा पुरातत्त्वको शक्तिबाट लाभ कमाउने खालको होला।

कु० नं० १४२७

१ ११
२ १२ १०
३ ९
४शु. ६ ८
५ ७

जुन व्यक्तिको सिंहराशिको शुक्र लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस जीवनमा अशान्ति अनुभव गर्ने भएको, दाजु-भाइसित विरोध पाउने खालको, जीवनमा केही परतन्त्रता अनुभव गर्ने, गूढातिगूढ कर्मलाई निकै बढी परिश्रम र चातुर्यले पूरा गर्ने तथा केही उदर विकार पाउने र पुरुषार्थ बलमा केही दुर्बलता पाउने र निकै बढी धन खर्च गर्ने, पुरातत्त्वको केही हानि पाउने र बढी ढीलो र कष्टले मात्र प्रभाव पाउने भएको, पुरुषार्थद्वारा जीवनाधार शक्तिलाई पाउने भएको तथा अपठेरा र शत्रुमाथि घुमाउरा युक्तिहरूले सफलता पाउने खालको साहसी होला।

कु० नं० १४२८

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५शु. ७

जुन व्यक्तिको कन्याराशिको शुक्र लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस गृहस्थी र स्त्रीको कारणले गर्दा जीवनको दिनचर्यामा बढी कष्ट-बाधा पाउनेवाला र स्त्रीपक्षबाट केही हानि पाउने खालको, व्यापारको स्थानमा महान् झ्याउलो र अनेक थरिका दुःख पाउने भएको, दाजु-भाइ दिदी-बहिनीको हानि पाउने खालको र पुरुषार्थ बलको दुर्बलता पाउने भए पनि शरीरमा तेजको वृद्धि पाउनेवाला र आयुस्थानबाट सामान्यतः राम्रो नै पाउने भएको, पुरातत्त्व लाभको न्यूनता पाउने खालको भोगादि पक्षको प्रकट रूपमा कमी र अप्रत्यक्ष रूपमा केही लाभ पाउने भएको, केही परतन्त्रता-युक्त कर्म गर्ने भएको गुप्त बाठो र गुप्त साहसी होला।

कु० नं० १४२९

१ ११ २ १२ १० ३ ९ ४ ६शु. ८ ५ ७

जुन व्यक्तिको तुलाराशिको शुक्र लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस गुप्त बलको महान शक्ति राख्ने भएको र पुरातत्त्व शक्तिको स्थिर लाभ पाउने भएको र जीवनको दिनचर्यामा निकै बढी आनन्दको योग पाउनेवाला, पुरुषार्थ बलको केही हानि र दाजु-भाइ दिदी-बहिनीको पनि हानि पाउने भएको, धन स्थानको वृद्धिका लागि निकै बढी प्रयत्न गर्दै रहने खालको तथा अदृश्य एवं गहीरो चातुर्यहरूमा मास्टर कहिने भएको, केही मान-सम्मान र प्रसिद्धि पाउनेवाला, कठिन परिश्रमको बलद्वारा जीवनी-शक्ति पाउने र दूरदर्शी होला।

कु० नं० १४३०

१ ११ २ १२ १० ३ ९ ४ ६ ८ ५ ७शु.

जुन व्यक्तिको वृश्चिक राशिको शुक्र लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यको तागतद्वारा दिनचर्याको जीवन शक्तिमा निकै बढी आनन्द पाउने खालको र पुरातत्त्व शक्तिको संचित लाभ प्राप्त गर्नेवाला, लामू आयु पाउने भएको अनि पुरुषार्थ बलको सफलतामा अपूर्व गौरव पाउने खालको तथा सुयशमा केही न्यूनता पाउने भएको, भाग्यको सम्बन्धमा आंशिक दुर्बलता पाउनेवाला अर्थात् भाग्योदय कालमा केही बाधा-कष्ट सहने भएको, धर्म-पालन गर्दै रहँदा पनि यथार्थ धर्ममा दुर्बलता पाउने भएको र धर्म तथा सज्जनताको तरीकाले महान गुप्त युक्तिहरूद्वारा शक्ति र हिम्मत प्राप्त गर्ने खालको, निकै ठूलो चातुर्यहरूले आफ्नू काम सिद्ध पार्न जान्ने खालको होला।

कु० नं० १४३१

१ ११
२ १२ १०
३ ९
४ ६ ८शु.
५ ७

जुन व्यक्तिको धनुराशिको शुक्र लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा हानि पाउने र दाजु-भाइ दिदी-बहिनीको केही शक्ति पाउने भएको, आयुमा वृद्धि भेट्टाउनेवाला, पुरातत्त्वको पैत्रिक लाभ पाउने खालको प्रभावपूर्ण दिनचर्या व्यतीत गर्नेवाला, गूढ युक्तिहरू र महान् चातुर्यहरूद्वारा ठूलो काम गर्ने भएको, सुख स्थान तथा भवन-भूमिको वृद्धि गर्ने बढी प्रयत्न गर्दै रहने खालको, मान प्रतिष्ठा आदिको वृद्धिका लागि पनि निकै गहीरा उपायले काम बनाउन जान्ने, राज-समाज भित्र ठूला-ठूला परिश्रमी कार्यहरूलाई अनेक चातुर्यहरूद्वारा गरेर मान-सम्मान पाउने खालको निकै साहसी होला।

कु० नं० १४३२

१ ११
२ १२ १०
३ ९शु.
४ ६ ८
५ ७

जुन व्यक्तिको मकर राशिको शुक्र लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस पुरातत्त्व शक्तिको निकै बढी लाभ पाउने भएको र आयुको वृद्धि पाउने खालको, दाजु-भाइ दिदी-बहिनीबाट लाभ पाउनेवाला, जीवनको दिनचर्यामा निकै आमोद-प्रमोद पाउनेवाला, कूटनीति र गुप्त कामको बलले खूब लाभ पाउने भएको, पुरुषार्थ बलको वृद्धि पाउने खालको र बुद्धिभित्र बर्ता गुप्त कष्ट सहन सक्ने तथा विद्यामा केही न्यूनता पाउनेवाला, आमदानीको पक्षमा केही बाधा अल्झो र कष्ट सहने खालको, आफ्नू परिश्रममा बढी विश्वास राख्ने भएको, प्रसस्त साहस र हिम्मतले काम गर्ने खालको होला।

कु० नं० १४३३

१ ११ २ १२ १० शु. ३ ९ ४ ६ ८ ५ ७

जुन व्यक्तिको कुम्भ राशिको शुक्र लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस पुरातत्त्व शक्तिको केही हानि पाउने भएको र जीवनमा अलिकति अशान्तिको योग पाउनेवाला, आयुमाथि कहिले काहीं केही हानिहरूको प्रभाव बेहोर्नु पर्ने खालको, दाजु-भाइ दिदी-बहिनीको तर्फबाट केही अशान्ति अनुभव गर्ने भएको र बढी धन खर्च गर्ने भएको तथा अन्यान्य स्थानहरूको सम्बन्धमा जीवनदायिनी शक्तिको ठूलो बल प्राप्त गर्ने खालको, शत्रु र अन्य कष्ट झ्याउलो टार्नका लागि कूट-युक्तिहरूको प्रयोग गर्न जान्ने भएको, धेरै परको गूढ शक्तिको भरमा रहने खालको होला।

कु० नं० १४३४

१ ११शु. २ १२ १० ३ ९ ४ ६ ८ ५ ७

# मीन लग्नान्तर–शनिफलम्

जुन व्यक्तिको मीनराशिको शनि लग्नको प्रथम स्थानमा छ भने त्यो मानिस शरीरमा केही दुर्बलताको योग पाउने खालको र शरीरद्वारा वृद्धिको योग प्राप्त गर्ने भएको, शरीरद्वारा नै लाभ-हानिको बराबर शक्ति पाउनेवाला, पिता स्थानबाट आंशिक विरोधको वातावरण पाउने भएको, दाजु-भाइसित केही मित्रता र केही दुर्बलता पाउने भएको, ठूलो पुरुषार्थ गर्ने खालको, स्त्रीस्थानमा केही हानि र लाभको योग पाउने भएको, व्यापारमा केही परिश्रम सहनेवाला, बाहिरी अन्य स्थानको सम्पर्क पाउने भएको, राज-समाजको उन्नतिमा केही बाधा पाउने भए पनि धर्म-कर्म मात्रै होला।

कु० नं० १४३५

१　११
२　१२श.　१०
३　९
४　६　८
५　७

जुन व्यक्तिको मेष राशिको शनि लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन संग्रह गर्ने सम्बन्धमा दुर्बलता पाउने भएको र कहिले काहीं धनको स्थानमा हानिहरू पनि पाउने खालको र अन्यान्य स्थानको सम्पर्कबाट धनागम गर्ने तथा सदैव प्राप्त हुने आमदानीको माध्यमबाट लाभ पाउँदै रहनेवाला, मातृ-स्थानमा केही हानि पाउने र पुरातत्त्वको लाभ भेट्टाउने भएको, जीवनको दिनचर्यामा आनन्दको योग पाउने खालको, कुटुम्ब स्थानमा केही कमी, क्लेशको योग पाउनेवाला र धनको सम्बन्धमा कुनै अनुचित रीतिको प्रयोग गर्ने खालको साहसी व्यक्ति होला।

कु० नं० १४३६

१श.　११
२　१२　१०
३　९
४　६　८
५　७

जुन व्यक्तिको वृषराशिको शनि लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै पुरुषार्थ गर्ने र बढी हिम्मतले काम गर्न जान्ने भएको,

कु० नं० १४३७

| | | | | |
|---|---|---|---|---|
| | १ | | ११ | |
| २श. | | १२ | | १० |
| | ३ | | ९ | |
| ४ | | ६ | | ८ |
| | ५ | | ७ | |

आमदानीको मुकाबलामा बढी खर्च गर्नेवाला, अन्यान्य स्थानहरूको सम्पर्कबाट धेरै शक्तिबल पाउने भएको, दाजु-भाइको केही हानि र लाभ पुऱ्याउने र पाउने भएको, विद्यामा केही कमी पाउने भएको, सन्तान पक्षमा केही हानि र लाभ पाउनेवाला, धर्म स्थानमा केही हानि पाउने भएको र सुयशमा केही न्यूनता पाउनेवाला, प्रभावमा केही वृद्धि पाउनेवाला, मस्तिष्कमा केही कष्ट-बाधा र बाहुबलमा केही सामान्य दुर्बलता पाउनेवाला, भए पनि साहसी होला।

जुन व्यक्तिको मिथुन राशिको शनि लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृस्थानमा केही दुर्बलता र केही हानि-लाभको योग पाउने

कु० नं० १४३८

| | | | | |
|---|---|---|---|---|
| | १ | | ११ | |
| २ | | १२ | | १० |
| | ३श. | | ९ | |
| ४ | | ६ | | ८ |
| | ५ | | ७ | |

खालको, आमदानी र खर्चको व्यवस्थामा समान सुख पाउने भएको, सुख-शान्तिको र निवास स्थानमा कुनै दुर्बलता पाउने र शरीर भित्र केही दुर्बलता पाउनेवाला, मावली पक्षमा केही हानिको योग पाउने खालको, शत्रुस्थानमा प्रभाव पार्न जान्ने भएको, पिता स्थानमा केही बाधा सहने भएको, प्रपंचको विषयमा नजाति ठानेर थोरै बोल्नेवाला र भूमि-भवन र अन्य स्थानको सम्बन्धमा केही हानि र आंशिक लाभको योग पाउने साहसी होला।

जुन व्यक्तिको कर्कराशिको शनि लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षमा केही हानि पाउने, सन्तान पक्षमै केही लाभ पनि भेट्टाउने भएको, विद्या स्थानमा केही हानि र लाभको साथसाथै बाहिरी अन्य स्थानको सम्बन्धबाट लाभ पाउने भएको, धर्मको संग्रह स्थानमा दुर्बलता वा हानि पाउने भएको र आमदानी-खर्चको स्थानमा समानताको योग पाउनेवाला, कुटुम्ब स्थानमा अलि-अलि विग्रह पाउने तथा मस्तिष्कमा केही कष्ट-बाधा पाउने भएको, व्यापारमा केही लाभ-हानिको योग पाउनेवाला स्त्री-स्थानमा केही हानि-लाभ र केही दुर्बलता पाउनेवाला तथा स्वार्थका कुरा गर्ने खालको होला।

कु० नं० १४३९

१ ११
२ १२ १०
३ ९
४श. ६ ८
५ ७

जुन व्यक्तिको सिंहराशिको शनि लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस केही प्रभाव र परतन्त्रताको योगबाट लाभ-हानिको शक्ति पाउनेवाला र मावली पक्षमा हानि पाउने खालको तथा लाभ र खर्चको लागि केही कष्ट-बाधा सहने भएको तथा केही चातुर्य र भित्री साहसले काम सपार्न जान्ने र जीवनको दिनचर्यामा निकै बढी प्रभाव पाउने खालको अनि अन्यान्य स्थानहरूको शक्तिले र लाभ-खर्चको तागतद्वारा शत्रुमा प्रभाव पार्ने भएको, दाजु-भाइसित केही दुर्बल तथा केही लाभको सम्बन्ध पाउने खालको होला।

कु० नं० १४४०

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५श. ७

जुन व्यक्तिको कन्याराशिको शनि लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस व्यापारको पंक्तिबाट हानि-लाभ तथा आमदानी र खर्चको बराबर योग पाउने भएको र अन्य स्थानको सम्पर्कबाट फाइदा प्राप्त गर्ने र स्त्री-स्थानमा पनि लगातार लाभको योग पाउने खालको र भाग्य-स्थानमा केही चिन्ता मात्रै भएको, धर्म-स्थानमा केही न्यूनता पाउने खालको अनि शरीरमा केही कष्ट-बाधा र दुर्बलताको योग आय-व्ययको माध्यमले पाउनेवाला, मातृस्थानमा पनि केही सामान्य हानि-लाभको योग पाउने भएको, आमदानी-खर्चको कारणले आफ्नू सुख र आराममा अलिकति न्यूनता पाउने खालको होला।

कु० नं० १४४१

१ ११
२ १२ १०
३ ९
४ ६श. ८
५ ७

जुन व्यक्तिको तुलाराशिको शनि लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस अन्य स्थानको सम्पर्क शक्तिको योगबाट र पुरातत्त्वको महान् लाभ पाउने भएको, जीवनमा निकै बढी आनन्दको योग पाउनेवाला, आमदानी र खर्चको माध्यम एवं ढङ्ग कुनै धनाढ्य व्यक्तिको झैं गर्ने तथा आयुमा वृद्धि पाउने भएको, गूढ र गुप्त विषयको सम्बन्धहरूबाट लाभ र उन्नति भेट्टाउने खालको र धन संग्रहको स्थानमा केही कमी वा हानिको योग पाउने भएको, पिता स्थानमा केही शत्रुताको योग पाउने भएको, उन्नतिको मार्गमा ठूला-ठूला विचित्र कर्म गर्न जान्ने भएको तथा सन्तान पक्षमा हानि-लाभको समान योग पाउने खालको होला।

कु० नं० १४४२

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७श.

जुन व्यक्तिको वृश्चिक राशिको शनि लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस अन्य स्थानको सम्पर्क र भाग्यको तागतले खूब आमदानी पाउनेवाला तथा प्रत्येक थरिका लाभ र आवश्यकताहरूको पूर्ति सदैव पाउँदै रहने भएको, भाग्यमानीमा गनिने भए पनि भाग्यमा केही कमी पाउने खालको, धर्मको स्थानमा केही दुर्बलता पाउने भएको तथा पुरुषार्थको वृद्धि गर्ने भएको, दौडा-दौडको शक्ति राख्ने खालको र शत्रुस्थानमा बढी प्रभाव राख्नेवाला तथा कुनै पनि कष्ट-बाधा अथवा विपत्तिहरू टार्नका लागि युक्ति निकाल्न जान्ने खालको अनि बढी सावधानी र चातुर्य राख्ने एवं आफ्नू आयको सबैतिरबाट सुरक्षा गर्ने खालको स्वार्थयुक्त होला।

कु० नं० १४४३

१ ११
२ १२ १०
३ ९
४ ६ ८श.
५ ७

जुन व्यक्तिको धनुराशिको शनि लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिताको स्थानमा हानि पाउने भएको र धेरै बढी धन खर्च गर्ने खालको अनि खर्चको अधिकताको कारणले इज्जत थामेर राख्न बढी अपठेरो पाउने भएको, राज-समाजको सम्बन्धमा दुर्बलता पाउने खालको र उन्नतिको शिखरमा पुग्न-का लागि अनेक थरि कर्महरू गर्ने भएको, व्यापारमा बढी हानि पाउने खालको, सुख र मातृस्थानमा आंशिक हानि र लाभ पनि भेट्टाउने भएको अनि स्त्री-स्थानमा पनि केही हानि-लाभ दुवै पाउने खालको, दैनिक व्यापारमा केही समभाव पाउने भएको तथा अन्य स्थानको सम्बन्ध र ज्याउलाहरूबाट नै इज्जत कमाउने भएको र साहसी होला।

कु० नं० १४४४

१ ११
२ १२ १०
३ ९श.
४ ६ ८
५ ७

जुन व्यक्तिको मकर राशिको शनि लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस अन्यान्य स्थानको सम्पर्कबाट खूब धन लाभ पाउनेवाला र खर्चको तागतले बढी फाइदा प्राप्त गर्ने भएको तर आफ्नू निम्ति प्रयोग हुने लाभमा कमी पाउनेवाला, शरीरमा केही दुर्बलता पाउने, जीवनको दिनचर्यामा आनन्द अनुभव गर्ने खालको, पुरातत्त्वको लाभ पाउने भएको, खर्च र आमदानीको कारणहरूले शरीरमा केही कष्ट-बाधाको योग पाउनेवाला तथा सन्तान पक्षमा केही अल्झो वा झ्याउलो पाउने खालको अनि विद्यामा केही न्यूनता भेट्टाउने तथा गूढ युक्तिहरूले फाइदा प्राप्त गर्ने, स्वार्थयुक्त होला।

कु० नं० १४४५

जुन व्यक्तिको कुम्भ राशिको शनि लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस आयभन्दा धेरै बढी खर्च गर्ने खालको, खर्चकै तागतले र अन्य स्थानको सम्पर्कबाट लाभ पाउनेवाला र धनको सम्बन्धमा दुर्बलता पाउने भएको तथा धन संग्रहको निम्ति केही अनुचित व्यवहार पनि गर्ने भएको र कुटुम्ब स्थानमा केही अशान्ति पाउने खालको र भाग्यको सम्बन्धमा केही चिन्ता पाउने भएको र यशमा केही न्यूनता पाउने र धर्ममा केही हानि पाउने भएको, शत्रु स्थानमा प्रभाव राख्ने खालको, कष्ट-बाधालाई थिच्न सक्ने भएको र केही मावली पक्षमा हानि पाउनेवाला तथा अन्यान्य स्थानमा लाभको विषयमा सोच-विचार गरिरहने खालको होला।

कु० नं० १४४६

# मीन लग्नान्तर–राहुफलम्

जुन व्यक्तिको मीन राशिको राहु लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस शरीरको स्थानमा चिन्ता-फिक्री मात्रै खालको र देहमा केही कमी अनुभव गर्ने र शरीरमा कहिले काहीं कुनै आघात सहने तथा केही दुर्बल र बन्धनको पनि कहिले काहीं योग प्राप्त गर्ने भएको, आदर्श चातुर्य र बठ्याइँले काम सपार्न जान्ने र शरीरको वृद्धि एवं स्वच्छन्दताका लागि ठूल-ठूला कष्टसाध्य कठिन कर्म गर्ने भएको, मान-प्रतिष्ठाको प्राप्तिका लागि तथा सदैव नाम कायम राख्नको निम्ति निकै बढी खतरा र विपत्ति सहेर शक्ति प्राप्त गर्ने खालको तथा गुप्त युक्तिहरूको बलमा वृद्धि पाउने खालको होला।

कु० नं० १४४७

१ ११
२ १२रा. १०
३ ९
४ ६ ८
५ ७

जुन व्यक्तिको मेष राशिको राहु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनको हानि पाउनेवाला तथा धनको सम्बन्धबाट कष्ट-बाधा अनुभव गर्ने खालको तथा कुटुम्ब स्थानमा हानि, क्लेश पाउने भएको तथा धनको संग्रह शक्तिलाई प्राप्त गर्नको लागि निकै बढी हिम्मतले काम सिद्ध पार्ने तथा खतरा बोकेर मुश्किलले उन्नति पाउने, तथा धनको निम्ति गुप्त शक्तिको प्रयोग गर्ने खालको, धनको सम्बन्धमा कहिले काहीं अर्काको सहायता वा मद्दत लिने तथा धन स्थानमा कहिले काहीं अकस्मात् गहीरो धक्का पाउनाले कष्ट-बाधा पाउने र परिश्रमले काम गर्ने खालको होला।

कु० नं० १४४८

१रा. ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७

जुन व्यक्तिको वृषराशिको राहु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू पुरुषार्थमा बढी सफलता पाउने भएको र बढी परिश्रम गर्ने

कु० नं० १४४९

१ ११ २रा. १२ १० ३ ९ ४ ६ ८ ५ ७

अनि दाजु-भाइको स्थानमा केही कष्ट-बाधा पाउने भएको र घुमाउरा उपायहरूले चाहिने भन्दा बर्ता सतर्कता र होशियारी राख्ने भएको र केही नाजायज फाइदाले इज्जत र प्रभावको वृद्धि पनि गर्न जान्ने खालको तथा आफ्नू सफलताको आनन्द अनुभव गर्नेवाला, बढी बाठो र सबै प्रकारको काम जान्ने र निस्फिक्री खालको होला।

जुन व्यक्तिको मिथुन राशिको राहु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस सुख स्थानमा महान् वृद्धि पाउनको लागि महान् परिश्रम र

कु० नं० १४५०

१ ११ २ १२ १० ३रा. ९ ४ ६ ८ ५ ७

सङ्कट सहन गर्नेवाला एवं धेरै ठूलो प्रपंचका योगहरूबाट सुखका साधनहरू पाउने भएको, भूमि-भवन आदिको योग पाउने खालको, मातृस्थानमा निकै बढी आडम्बरको शक्तिबाट फाइदा प्राप्त गर्ने, सुखको सम्बन्धको निकै ठूलो धाक देखाउने भएको तथा सुख प्राप्तिका साधनहरूको र सुख सम्बन्धित प्रत्येक वस्तुहरूको केही-बढी र नाजायज लाभ प्राप्त गर्ने खालको तर मनको वास्तविक शान्तिमा अनेक विघ्न पाउने खालको व्यक्ति होला।

जुन व्यक्तिको कर्कराशिको राहु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षमा कष्टको योग पाउने भएको तथा विद्या स्थानमा

कु० नं० १४५१

१ ११
२ १२ १०
३ ९
४रा. ६ ८
५ ७

कमीको योग भेट्ने खालको, बुद्धि र मस्तिष्क भित्र अलि-अलि कष्ट-बाधा पाउने भएको तथा विद्यास्थानमा विद्या ग्रहण गर्ने वेलामा मानसिक चिन्तामा गाडिने भएको, बुद्धिभित्र अनेक झ्याउला सहेर निकै बढी चातुर्य र सतर्कताको बाटो पैल्याउने भएको तथा बुद्धि र मनद्वारा अनेकानेक कठिन विषयलाई सहजै सपार्ने भएको, सदैव मानसिक चिन्ताहरूमा रहेर कुराकानी गर्ने र दुःखी मनवाला होला।

जुन व्यक्तिको सिंहराशिको राहु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस शत्रु-स्थानबाट केही कष्ट-बाधाको योग पाउनेवाला र शत्रुलाई

कु० नं० १४५२

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५रा. ७

बर्बाद पार्ने खालको तथा शत्रुस्थानमा आफ्नू प्रभाव पार्ने भएको र मावली पक्षको पनि निकै हानिको योग पाउने भएको अनि अपठेरो र विपत्ति भित्र पनि धैर्य र चातुर्यहरूद्वारा काम गरेर विजय पाउने भएको र आफ्नू कष्ट-बाधाहरूलाई लुकाएर बाहिरी वातावरणमा निकै बढी प्रभावले काम सिद्ध पार्ने खालको र निकै बढी घुमाउरा प्रयत्नहरूलाई पनि प्रभाव शक्तिकैद्वारा प्रयोग गर्न जान्ने भएको, बढी कटु स्वार्थ-परायण साहसी होला। रोगादि र अनेक बीमारीहरूको पनि वास्ता नराख्ने खालको होला।

जुन व्यक्तिको कन्याराशिको राहु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस व्यापारको उन्नतिका लागि निकै बढी परिश्रम गर्ने भएको तथा निकै ठूलो चातुर्यहरूले र अनेक गुप्त-शक्तिहरूबाट फाइदा कमाउने खालको तथा स्त्री-स्थानमा केही बाधाहरू सहने भएको, गृहस्थी भित्र अनेक झ्याउलाहरू सहेपछि केही दृढताको स्थायी सुख शक्ति प्राप्त गर्ने खालको अनि दैनिक व्यापारको क्रममा कहिले काहीं गहीरो विपत्ति सहनु पर्ने खालको, तर व्यापारको उन्नतिको मार्गमा बराबर लागिरहने भएको र इन्द्रिय भोगादिक पक्षमा केही न्यूनताको साथसाथै बढी रुचि राख्ने खालको होला।

कु० नं० १४५३

१ ११ २ १२ १० ३ ९ ४ ६रा. ८ ५ ७

जुन व्यक्तिको तुलाराशिको राहु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनको दिनचर्यामा केही कष्ट-बाधा अनुभव गर्ने भएको तथा पेटको अलि तल भित्रतिर केही रोगको सम्भावना पाउने खालको तथा जीवनमा अनेक थरि झ्याउला र कष्ट सहिसकेपछि फेरि दिनचर्याको दृढता पाउने भएको र जीविकाको राम्रो साधन पाउने भएको, पुरातत्त्वको केही हानि पाउनेवाला र आयुस्थानमा कहिले काहीं ठूला आघात सहने भएको तथा महान् गूढ ज्ञानका शक्तिको गुप्त भण्डार राख्ने खालको र विदेश आदिको आउने जानेमा केही व्यवधान अनुभव गर्ने र केही चिन्ताग्रस्त रहने खालको होला।

कु० नं० १४५४

१ ११ २ १२ १० ३ ९ ४ ६ ८ ५ ७रा.

जुन व्यक्तिको वृश्चिक राशिको राहु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यस्थानमा अनेक झ्याउला सहने भएको र धर्मको स्थानमा हानि पाउनेवाला, शील र दयाको पालन गर्नमा अपठेरो ठान्ने खालको तथा भाग्यको स्थानमा कहिले काहीं डरलाग्दो आघातको योग पाउने भएको र ठूल-ठूला बटारिएका र कष्ट-बाधाका गुप्त युक्तिहरूबाट भाग्यको उन्नति गर्ने खालको र यशको कमी पाउने भएको तथा ईश्वरको शक्तिमा थोरै विश्वास राख्ने भएको तथा आफ्नू स्वार्थसिद्धिको पूरा-पूरा ध्यान राख्न जान्ने भएको तथा धर्म-कर्मको अथवा झारफुके धर्मको पालन गर्ने होला।

कु० नं० १४५५

१ ११ २ १२ १० ३ ९ ४ ६ ८रा. ५ ७

जुन व्यक्तिको धनुराशिको राहु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा हानि पाउने भएको र राज-समाजका कार्यहरूमा हानि र अशान्तिको योग पाउने तथा अवनतिको मार्गमा अनुसरण गर्ने खालको अनि इज्जत सम्मानको स्थानमा कहिले काहीं निकै गहीरो मार्मिक आघात सहने खालको र महान् गुप्त भेदपूर्ण काम गर्ने भएको, प्रशंसाको हानि पाउनेवाला, उन्नतिमा पुग्नका लागि अनधिकार कर्मको चेष्टा गर्ने भएको, अनि पिता स्थानको सम्पर्कबाट बढी अशान्ति पाउने खालको तथा केही परतन्त्रतायुक्त कष्ट-बाधाहरूको कर्म गर्ने खालको होला।

कु० नं० १४५६

१ ११ २ १२ १० ३ ९रा. ४ ६ ८ ५ ७

जुन व्यक्तिको मकरराशिको राहु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नू वित्तद्वारा बढी लाभ प्राप्त गर्ने प्रयत्न गर्नेवाला तथा अधिक धन प्राप्त पनि गर्नेवाला र सित्तैको जस्तो धन सधैं खोजिरहने तथा लाभ प्राप्तिको स्थानमा ठूल-ठूला गुप्त चालाले दृढताका साथ लाभ प्राप्त गर्न जान्नेवाला, आफ्नू लाभ र स्वार्थको सामुन्ने अर्काको नाफा नोक्सानको अलिकति पनि वास्ता नगर्ने खालको तथा लाभको स्थानमा केही बाधा-कष्ट र परिश्रमको पनि योग पाउने भएको, लाभ प्राप्तिको सामुन्ने कस्तै ठूलो झ्याउलोको पनि वास्ता नगर्ने खालको होला।

कु० नं० १४५७

१ ११ २ १२ १० रा. ३ ९ ४ ६ ८ ५ ७

जुन व्यक्तिको कुम्भ राशिको राहु लग्नबाट बाहौं स्थानमा छ भने त्यो मानिस बढी र वेवास्ताको धन व्यय गर्ने तथा खर्चको स्थानमा केही परिश्रम र कष्ट-बाधाको योग पनि सहनेवाला र खर्चको सम्बन्धमा अनेक बाधाहरूपछि दृढताको पनि योग पाउनेवाला र अन्यान्य स्थानको सम्पर्कमा केही प्रपंच र झ्याउलाहरूको योग पाउने खालको अनि खर्चको श्रेणीमा ठूल-ठूला गुप्त उपायहरू र चातुर्यहरू द्वारा आफ्नू काम पूरा गर्ने भएको तथा परका सम्बन्धी व्यक्तिहरूसित निकै बर्ता घुमाउरा र गुप्त उपायहरूले काम सिद्ध पार्न जान्ने र खर्च-स्थानमा परतन्त्रता र निराशाको पनि योग कहिले काहीं पाउने होला।

कु० नं० १४५८

१ ११रा. २ १२ १० ३ ९ ४ ६ ८ ५ ७

# मीन लग्नान्तर–केतुफलम्

जुन व्यक्तिको मीन राशिको केतु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस शरीरमाथि कहिले काहीं मार्मिक आघात सहने भएको र केही खतराहरूबाट पनि हिंड्ने एवं शरीरको सौन्दर्यमा न्यूनता पाउनेवाला तथा केही बन्धन वा परतन्त्रताको पनि योग पाउने भएको र हृदय भित्र महान् दृढताले काम गर्न जान्ने भएको, आफूभित्र महान् शक्ति संचार पाउनेवाला, गुप्त रीतिले आफ्नू शक्तिको प्रयोग गर्ने भएको अनि कष्टहरूको भित्र महान् धैर्यले काम गर्न जान्ने तथा बडप्पनका साथै तामसी शक्तिको प्रयोग गर्ने खालको होला।

कु० नं० १४५९

१ ११
२ १२के. १०
३ ९
४ ६ ८
५ ७

जुन व्यक्तिको मेष राशिको केतु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनको पक्षमा धेरै अपठेराहरू सहनेवाला एवं अकस्मात् कहिले काहीं धनको हानिहरू पनि पाउनेवाला र धनको अभावले कहिले काहीं धार्मिक वेदना सहने भएको र कुटुम्ब-स्थानमा निकै कमी र क्लेश सहनेवाला, धन प्राप्तिको लागि र धनको वृद्धिका लागि अनेकानेक कठोर परिश्रम र प्रयत्न गर्ने खालको र धनका लागि धेरै ठूलो गुप्त शक्तिको प्रयोग गर्न जान्ने र अन्त्यमा धनको तर्फबाट कुनै एक बलियो शक्ति प्राप्त गर्ने भएको, केही अशान्तयुक्त होला।

कु० नं० १४६०

१के. ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७

जुन व्यक्तिको वृषराशिको केतु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै पराक्रमी तथा बढी दगुरा-दगुर गरेर काम बनाउने अनि दाजु-भाइको स्थानमा केही अशान्ति वा क्लेशको योग पाउने खालको, बाहुबलको बढी शक्ति राख्ने भएको, गुप्त साहसको पनि शक्तिको महान् संचार राख्न जान्नेवाला, कहिले काहीं पुरुषार्थ र हिम्मतको स्थानमा अनेक संकटहरूको योग पाउने खालको, तर महान् धैर्यले काम सिद्ध पार्न जान्ने र उन्नतिमा पुग्नका लागि अन्धविश्वास भित्र रहेर पनि सकेसम्म बर्ता शक्तिको प्रयोग गर्ने खालको अनि कुनै पनि कुरालाई असम्भव नठान्ने खालको होला।

कु० नं० १४६१

१ ११
२के. १२ १०
३ ९
४ ६ ८
५ ७

जुन व्यक्तिको मिथुन राशिको केतु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस माताको हानि पाउने भएको, मातृस्थानबाट वियोग पाउने खालको, घर-गृहस्थीमा सुख-शान्तिको अभाव पाउनेवाला, संकीर्ण स्थानमा निवास गर्ने भएको, छिमेकी तथा सहयोगीहरूसित पनि कष्टको अनुभव गर्ने भएको, महान अशांतप्रद परिश्रम आदिको झ्याउलोमा गाडिनेवाला, सानो जातका मानिसहरूसित सम्पर्क पाउने भएको, लघु रीतिले नै अन्त्यमा सुखका साधन पाउने भएको, भवन-भूमिको महान् हानि भेट्टाउने खालको, सुख प्राप्तिका लागि केही अनुचित र गुप्त शक्तिको प्रयोग गर्ने खालको साहसी होला।

कु० नं० १४६२

१ ११
२ १२ १०
३के. ९
४ ६ ८
५ ७

जुन व्यक्तिको कर्कराशिको केतु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षबाट निकै कष्ट सहने भएको, बुद्धिमा बाधा-कष्टको योग पाउने खालको, विद्यामा न्यूनता पाउने भएको र विद्याध्ययनको समयमा पनि मानसिक चिन्ताहरूको विशेष योग पाउनेवाला, अनेक विघ्न-बाधाहरू पाइरहेर पनि अन्त्यमा विद्यासित सम्बन्धित कुनै बलियो शक्ति प्राप्त गर्नेवाला, विद्या, सन्तान र मस्तिष्क यी तीन वस्तुमा कहिले काहीं निकै बढी आघात सहने भएको, चाल-ढाल र कुराकानी भित्र केही झर्को-फर्को र दुर्बलताको योग तथा आफ्नू मन्तव्य बुझाउन नसक्ने खालको व्यक्ति होला।

कु० नं० १४६३

१ ११
२ १२ १०
३ ९
४के. ६ ८
५ ७

जुन व्यक्तिको सिंहराशिको केतु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस शत्रु स्थानको नाश गर्ने खालको र मावली पक्षबाट हानि पाउने भएको तथा आफ्नू प्रभावको वृद्धि गर्ने खालको, महान परिश्रम गर्ने भएको र शत्रु एवं विपक्षीहरूसित बर्ता अशान्तिको वातावरण पाइरहेर पनि महान् धैर्य र साहसले काम पूर्ण पार्ने भएको अनि अपठेराहरू र विपत्तिहरूमा विजय पाउने खालको तथा धेरै ठूला र कठिन कष्ट-बाधाहरूलाई काट्न सक्ने किसिमको गुप्त शक्ति राख्ने भएको अनि गुप्त युक्तिहरूद्वारा र गुप्त साहसले ठूला-ठूला इच्छित काम पूरा पार्ने भएको, शीलको वास्ता नराख्ने र बढी स्वार्थयुक्त हठयोगी खालको व्यक्ति होला।

कु० नं० १४६४

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५के. ७

जुन व्यक्तिको कन्याराशिको केतु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री-स्थानमा केही अशान्तिको योग पाउने खालको र विशेष भोग प्राप्त गर्ने भएको अनि दैनिक व्यापारमा निकै बढी परिश्रम गरेर आंशिक लाभ पाउनेवाला र केही अशान्ति वा अपठेराहरूपछि आफ्नू व्यापारमा बढी ठूलो भित्री दृढता पाउने खालको र गुप्त शक्तिहरूको बलबाट तथा निरन्तर मिहिनेतको बलले व्यापारमा उन्नति गर्ने भएको तथा स्त्री-सम्बन्धमा भोगादिक पक्षमा केही गुप्त युक्तिहरूबाट शक्ति लाभ पाउने भएको र केही अनधिकार चालाबाट पनि व्यापारमा केही शक्ति पाउने खालको र अन्धविश्वासको साथसाथै खूब परिश्रम गर्नेवाला होला।

कु० नं० १४६५

१ ११ २ १२ १० ३ ९ ४ ६के. ८ ५ ७

जुन व्यक्तिको तुला राशिको केतु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस जीवनको दिनचर्यामा केही अशान्ति पाउनेवाला तथा पुरातत्त्वबाट प्रकटमा केही हानि पाउने खालको र आन्तरिक गुप्त एवं गहीरो पुरातत्त्वको शक्तिलाई कठिन परिश्रमको बलले प्राप्त गर्ने भएको तथा केही उदर सम्बन्धी विकार पाउने भएको र आयुको सम्बन्धमा कहिले काहीं निराशाजनक आघात सहने भएको र गूढातिगूढ शक्तिको बलबाट गुप्त हिम्मतको आनन्द अनुभव गर्ने खालको र प्रकटमा जीवन-निर्वाहको सम्बन्धमा कहिले काहीं चिन्ताहरू पाउने भएको तथा दृढ सिद्धान्तवाला र हठयोगी होला।

कु० नं० १४६६

१ ११ २ १२ १० ३ ९ ४ ६ ८ ५ ७के.

जुन व्यक्तिको वृश्चिकराशिको केतु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यस्थानमा निकै चिन्ताहरू पाउने भएको र धर्मको स्थानमा हानिको योग पाउने खालको तथा भाग्यको उन्नति हुने मार्गमा ठूला-ठूला बाधाहरू पाउने भएको तर भाग्यको उन्नतिका लागि महान् परिश्रम र विशेष धैर्यले काम सिद्ध पार्न जान्ने भएको अनि बढी गुप्त योजनाहरूको बलबाट उन्नतिको शिखरमा पुग्नेवाला तथा सुयशमा न्यूनता पाउनेवाला र स्वार्थसिद्धिको सम्मुख धर्म अधर्मको वास्ता नराख्ने भएको तथा ईश्वरमा आस्था र विश्वासमा केही कमी पाउने खालको होला।

कु० नं० १४६७

१ ११
२ १२ १०
३ ९
४ ६ ८के.
५ ७

जुन व्यक्तिको धनुराशिको केतु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस राज-समाजका कार्यहरूमा निकै दगुरा-दगुर र परिश्रम गरेर उन्नति प्राप्त गर्ने तथा पिता-स्थानमा निकै बर्ता हठधर्मीले फाइदा प्राप्त गर्नेवाला र निर्वाध गतिले निःशंक आफ्नू काम गर्नेवाला, गुप्त शक्तिको महानताद्वारा तथा पुरुषार्थको महानताले महान् कार्य गर्ने खालको र बढी प्रपंचको शक्ति राख्ने भएको र अनधिकार रूपले विशेष अधिकार पाउन प्रयत्न गर्दै रहनेवाला र मान-प्रतिष्ठाको उन्नतिका लागि तथा व्यापारको उन्नतिका निम्ति महान् उग्र कर्म गर्नेवाला, केही पिताको विरोधी होला।

कु० नं० १४६८

१ ११
२ १२ १०
३ ९के.
४ ६ ८
५ ७

जुन व्यक्तिको मकरराशिको केतु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धन प्राप्तिका लागि निकै महान् उद्योग गर्ने भएको तथा अधिक धन प्राप्त पनि गर्ने खालको र धन प्राप्तिको स्थान सम्बन्धमा धेरै बढी हिम्मत तथा साहसले काम बनाउन जान्नेवाला, गुप्त शक्तिको बलले प्रसस्त लाभ पाउने खालको, सित्तैं को झैं धन पाउने योजनाहरू बनाउने र आफ्नू स्वार्थसिद्धिको लागि अर्काको लाभ-हानिको कुनै वास्ता नगर्ने खालको तथा आमदानीमा केही बाधा सहने र आमदानीमा केही कमी अनुभव गर्ने खालको व्यक्ति होला।

कु० नं० १४६९

| | | |
|---|---|---|
| १ | १२ | ११ |
| २ | ३ | १० के. |
| ४ | ९ | ८ |
| ५ | ६ | ७ |

जुन व्यक्तिको कुम्भराशिको केतु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस खर्चको स्थानमा केही बाधा सहने भएको, खर्चको संचालन शक्तिलाई निकै कष्ट-बाधा र परिश्रमको बलले चलाउने भएको र स्थिर एवं धेरै बढी शक्तिको प्रयोगबाट अन्यान्य स्थानको सम्पर्क शक्तिको फाइदा प्राप्त गरेर खर्च गर्ने भएको र अन्य दोस्रो स्थानको सम्पर्कमा केही अशान्ति पाउने खालको, खर्चको विषयमा कहिले काहीं निकै कष्ट-बाधा पाएपछि केही यस्तो दृढता पाउनेवाला जसले निस्फिक्री हुन सकोस् र गुप्त-शक्तिले अन्य स्थानमा सफलता पाउने खालको होला।

कु० नं० १४७०

| | | |
|---|---|---|
| १ | १२ | ११ के. |
| २ | ३ | १० |
| ४ | ९ | ८ |
| ५ | ६ | ७ |

# कार्य सिद्धिको विषय

मेष लग्न हुने व्यक्तिहरूको देहको सम्बन्धमा मङ्गल सदैव केही चिन्ता वा कष्ट-बाधाको सूचक कहिन्छ र भाग्यको सम्बन्धमा बृहस्पति सदैव केही दुर्बलता उत्पन्न गर्ने सूचक मानिन्छ र दाजु-भाइ दिदी-बहिनी वा पुरुषार्थको सम्बन्धमा बुध सदैव केही झ्याउलाहरूको सूचक हुन्छ। यसै निम्ति मंगलवार तथा गुरुवारको दिन पहेंली गाईलाई भोजन गर्नुभन्दा पहिले शक्कर र रोटी खान दिनुपर्दछ अनि बुधवारको दिन हरियो फल गाईलाई खान दिनु उत्तम छ र राहु एवं केतु स्वभावले नै कष्ट-बाधा गर्ने ग्रह हुन्, यसैनिम्ति पक्षीहरूलाई अन्न र माछा, कछुवा आदिलाई पीठोको स-साना गोली खान दिंदै रहे कल्याण हुनेछ।

कु० नं० १४७१



मेष लग्न हुने व्यक्तिहरूको लागि धन लाभको सम्बन्धहरूमा शनि, शुक्र दुवै ग्रह सर्व श्रेष्ठ मानिन्छन्, यसै निम्ति पंचांग भित्र जुन-जुन वर्षमा तथा जुन-जुन महीनाहरूमा ती दुवै ग्रह कन्या, वृश्चिक र मीन यी तीन राशिहरूलाई छाडेर तथा शनिको लागि मेष राशि पनि छोडेर अन्य सबै राशिहरूमा जब-जब यी दुवै ग्रह आउँछन् र राहु जब-जब धन राशिमा आउँछ, धन र व्यापारको बृद्धि गर्नेछन्।

कु० नं० १४७२

# कार्य सिद्धिको विषय

वृषभ लग्न हुने व्यक्तिहरूको- स्त्री तथा व्यापारको सम्बन्धमा मङ्गल हानि अथवा कष्ट-बाधाको सूचक छ र आमदानीको सम्बन्धहरूमा बृहस्पति केही झ्याउलाहरूको सूचक छ र देहको सम्बन्धमा शुक्र केही रोग वा कष्ट-बाधाहरूको सूचक छ, यसनिम्ति मंगलवार र गुरुवारको दिन भोजनभन्दा पहिले पहेंली गाईलाई शक्कर र रोटी खान दिनु र शुक्रवारको दिन सेतो मिठाई गाई र ब्राह्मणलाई आफूले खानुभन्दा पहिले दिनु पर्दछ र राहु केतु स्वभावले नै कष्ट-बाधा दिने हुन्, यसै निम्ति पक्षिहरूलाई अन्न र मत्स्य-कच्छप आदिलाई पीठोका स-साना गोली बनाएर दिंदै रहनु कल्याणकारक हुनेछ।

कु० नं० १४७३

३ १ ४ २ १२ ५ ११ ६ ८ १० ७ ९

वृषभ लग्न हुनेहरूको - धन र लाभको सम्बन्धमा बुध र गुरु तथा भाग्योन्नतिको पक्षमा शनि सर्वश्रेष्ठ ग्रह मानिन्छ, यसैनिम्ति पञ्चाङ्ग भित्र जुन-जुन वर्षमा, महीनामा शनि तुला, धन, मीन र मेष यी चार राशि बाहेक अर्थात् इनलाई छाडेर बुध, तुला, धन र मीन मेष यी चार राशिहरू छाडेर जब-जब अन्य राशिहरूमा आउँछन् र गुरु जब-जब कर्क, कन्या, वृश्चिक र मीन राशिहरूमा आउँछन्, तब-तब भाग्योन्नति तथा धनोन्नति गर्दछन् र राहु धन तथा मीन राशिमा श्रेष्ठ रहन्छन्।

कु० नं० १४७४

३ १ ४ २ १२ ५ ११ ६ ८ १० ७ ९

# कार्य सिद्धिको विषय

मिथुन लग्न हुने व्यक्तिहरूको सन्तान र बुद्धिको सम्बन्धमा शुक्र सदैव कुनै न कुनै फिक्री वा कष्ट-बाधाको सूचक छ र शनि सदैव भाग्यको सम्बन्धमा केही चिन्ता उत्पन्न गर्ने सूचक छ र मङ्गल सदैव आमदानीको बाटोमा केही अपठेरोको सूचक छ। अतः प्रत्येक शनिवारको दिन काली गाईलाई शक्कर-रोटी खान दिनुपर्दछ। शुक्रवारको दिन सेतो मिठाई गोरो ब्राह्मणलाई खानदिनु र मङ्गलवारको दिन शक्कर रोटी राती गाईलाई ख्वाउनु उत्तम छ। यी सबै काम आफूले खानुभन्दा पहिल्यै गरे राम्रो हुनेछ र राहु-केतु स्वभावैले कष्ट दिने हुन्, अतः पक्षिहरूलाई अन्न र मालालाई पीठोको गोली दिंदै रहे कल्याण हुनेछ।

कु० नं० १४७५

४　२
५　३　१
६　१२
७　९　११
८　१०

कु० नं० १४७६

४　२
५　३　१
६　१२
७　९　११
८　१०

मिथुन लग्न हुने व्यक्तिहरूको धनलाभ र व्यापारादिको उन्नतिको सम्बन्धमा चन्द्र, गुरु र मङ्गल तीन ग्रह श्रेष्ठ छन्, यसै निम्ति पंचांग भित्र जब-जब चन्द्रमा वृश्चिक, मकर र वृषभ राशिहरूलाई छाडेर अन्य राशिहरूमा आउँछन् र गुरु - मकर, वृषभ यी दुइ राशि छोडेर अन्य राशिहरूमा आउँछन् र मङ्गल-वृषभ, कर्क, वृश्चिक र मकर राशिहरू बाहेर अन्य राशिहरूमा आउँछन्, तब-तब धन र मान सम्मानमा उन्नति भइरहने छ।

# कार्य सिद्धिको विषय

कर्क लग्न हुने व्यक्तिहरूको - स्त्री तथा व्यापारको सम्बन्धमा शनि सदैव केही कष्ट-बाधा गर्दछ र भाग्यका सम्बन्धहरूमा गुरु केही झ्याउलो ल्याउँछ र दाजु-भाइ; दिदी-बहिनी र पुरुषार्थको विषयमा बुध सदैव केही कष्ट-बाधा दिंदै रहन्छ। यसै निम्ति शनिवार काली गाईलाई शक्कर रोटी खान दिनु अनि पीपलको वृक्षमा जल चढाउनु र गुरुवार पहेंली गाईलाई शक्कर र बुधवार हरिया फल बिहानै गाईलाई खान दिनु। राहु केतु स्वभावैले कष्टदाता हुन्, अतः पक्षिहरूलाई अन्नका दाना र माछा कछुआ आदिलाई पीठोको स-साना गोली बनाएर खान दिए राम्रो हुनेछ।

कु० नं० १४७७

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११

कर्क लग्न हुने व्यक्तिहरूको लागि- धन र मान, बुद्धि र सन्तानको सम्बन्धमा शुक्र, मंगल, सूर्य तीन ग्रह उत्तम छन्, अतः पंचागमा जब-जब शुक्र- मिथुन, कन्या, धन, कुम्भ यी चार राशिहरूलाई छाडेर तथा मङ्गल-मिथुन, कर्क, धन, कुम्भ- यी चार राशिलाई छाडेर तथा सूर्य-मिथुन, तुला, धन, कुम्भ यी चार राशिहरूलाई छाडेर शेष रहेका आठैमा जब-जब धनलाभ र मान-प्रतिष्ठा, विद्या, सन्तान आदिको उन्नति गर्दछन् र राहु जब-जब वृषभ र मिथुनमा आउँछन् तब-तब उत्तम फल दिनेछन्।

कु० नं० १४७८

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११

# कार्य सिद्धिको विषय

सिंह लग्न हुने व्यक्तिहरूको- खर्चको सम्बन्धमा र अन्यान्य स्थानको सम्बन्धमा चन्द्रमा सदैव मनलाई चिन्तित पार्ने खालका हुन् र बृहस्पति विद्या, बुद्धि एवं सन्तानको सम्बन्धमा केही कष्ट-बाधाका सूचक हुन् र शनि स्त्री, गृहस्थी तथा व्यापारको सम्बन्धमा केही दुःख कष्टका सूचक हुन्। अतः प्रत्येक सोमवार दहीको दान बिहानै गर्नुपर्दछ र प्रत्येक गुरुवार पहेंली गाईलाई आफूले खानुभन्दा पहिल्यै प्रत्येक शनिवार काली गाईलाई शक्कर तथा रोटी खानदिनु उत्तम होला। राहु, केतु स्वभावले नै कष्टका सूचक हुन्, यसैनिम्ति प्रतिदिन पक्षिहरूलाई अन्नका दाना र माछा-कछुवा आदिलाई पीठोको स-साना गोली बनाएर दिंदै रहनु।

कु० नं० १४७९

६ ४
७ ५ ३
८ २
९ ११ १
१० १२

सिंह लग्न हुने व्यक्तिहरूलाई नगद, धन र आमदानीको सम्बन्धमा बुध श्रेष्ठ छ र भाग्यको सम्बन्धमा मङ्गल र शुक्र दुवै ग्रह निकै श्रेष्ठ छन्। यसै निम्ति पञ्चाङ्ग भित्र जब-जब कहिले मङ्गल- मेष, वृष, मिथुन, सिंह, कन्या, तुला, वृश्चिक र कुम्भ इत्यादि राशिहरूमा आउँछन् र शुक्र, मेष, वृष, मिथुन, सिंह, तुला, वृश्चिक, धन र कुम्भ इत्यादि राशिहरूमा जब-जब आउँछन् र राहु जब-जब मिथुनमा आउँछ तब-तब ती वर्षहरूमा र महीनाहरूमा लाभ र भाग्योन्नति हुनेछ।

कु० नं० १४८०

६ ४
७ ५ ३
८ २
९ ११ १
१० १२

# कार्य सिद्धिको विषय

कन्या लग्न हुने व्यक्तिहरूको- खर्च र अन्यान्य स्थानहरूको सम्बन्धमा तेजी र अभिमानका कारणहरूले सूर्य सदैव केही बाङ्गा रहन्छन् र विद्या, बुद्धि तथा सन्तानको सम्बन्धहरूमा शनि सदैव केही कष्ट-बाधा दिने सूचक हुन् र दाजु-भाइ दिदी-बहिनी तथा पुरुषार्थ धर्मको सम्बन्धमा मङ्गल सदैव केही बाधा दिने खालका हुन्। यसै निम्ति प्रतिदिन प्रातः शुद्ध जल र फूल सूर्यलाई चढाएर नमस्कार गर्नुपर्दछ र शनिवार काली गाईलाई शक्कर रोटी र मङ्गलवार राती गाईलाई पनि शक्कर रोटी दिनुपर्दछ। राहु-केतु स्वभावैले कष्ट-दातामा गनिने हुनाले दिनहुँ पक्षिहरूलाई अन्न र माछा कछुवालाई पीठोको गोली दिदै रहे उत्तम हुनेछ।

कु० नं० १४८१

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १

कन्या लग्न हुने व्यक्तिहरूको निम्ति धन र भाग्यको सम्बन्धमा शुक्र श्रेष्ठ ग्रह हो र व्यापार गृहस्थीको सम्बन्धमा गुरु उत्तम हो तथा मान-प्रतिष्ठा आदिको सम्बन्धमा बुध श्रेष्ठ छ र लाभको विषयमा चन्द्रमा उत्तम छ। यसनिम्ति पंचांग भित्र जब-जब शुक्र-वृष, मिथुन, कर्क, तुला, वृश्चिक, धन, मकर, मीन राशिहरूमा आउँछन् र गुरु जब-जब मिथुन, कर्क, कन्या, तुला, वृश्चिक, धन र मीन राशिहरूमा आउँछन् र चन्द्रमा जब-जब वृष, मिथुन, कर्क, कन्या, तुला, धन, मकर र मीन राशिहरूमा आउँछन्, तब-तब ती वर्षहरूमा, महीनाहरूमा धन-मान र भाग्यको वृद्धि हुनेछ।

कु० नं० १४८२

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १

# कार्य सिद्धिको विषय

तुला लग्न हुने व्यक्तिहरूको- भाग्यको सम्बन्धमा बुध सदैव दुर्बलता र चिन्ताको सूचक हो, शरीरको सम्बन्धमा शुक्र केही कष्ट-बाधा वा

कु० नं० १४८३

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

झ्याउलो ल्याउने खालका हुन् र दाजु-भाइ दिदी बहिनी र पुरुषार्थ कर्मको सम्बन्धमा बृहस्पति सदैव केही कष्ट-चिन्ताका सूचक हुन्। यसै निम्ति बुधवारको दिन प्रातः हरिया फल गाईलाई खान दिनुपर्दछ र शुक्रवार काँचो दूधमा भाँग घोटेर गुलियो मिसाई शिवजीलाई चढाउनुपर्दछ र गुरुवारको दिन पहेंली गाईलाई शक्कर खान् दिंदै रहनुपर्दछ अनि राहु-केतु स्वभावले नै कष्ट-बाधा उपस्थित गर्ने हुन्, यसै कारण दिनहुँ पक्षिहरूलाई अन्नका दाना र माछा-कछुवालाई पीठोका स-साना गोली बनाएर खान दिए उत्तम हुनेछ।

कु० नं० १४८४

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

तुला लग्न हुने व्यक्तिहरूलाई- धनको सम्बन्धमा मङ्गल र सूर्य श्रेष्ठ छन्- यस निम्ति मङ्गल जब-जब सिंह राशिमा वा तुलामा कि वृश्चिकमा वा मेषमा अथवा मिथुनमा आउँछन्, र बुध तथा चन्द्र जब-जब मिथुनमा, कर्कमा, सिंहमा, तुलामा, धनमा, मकरमा, कुम्भमा वा मेषमा कि बुध वृश्चिक राशिमा आउँछन् र राहु जब-जब मिथुन राशिमा आउँछन् तब-तब भाग्योन्नतिको राम्रो योग बन्दछ।

# कार्य सिद्धिको विषय

वृश्चिक लग्न हुने व्यक्तिहरूका लागि - स्त्री, गृहस्थी र व्यापारको सम्वन्धमा शुक्र सदैव नै कष्ट-बाधाको सूचक हो र धनागम, आमदानीको सम्वन्धमा बुध सदैव केही तगारो तेर्स्याउने खालको हो र शरीरको सम्वन्धमा मङ्गल सदैव केही कष्ट दिने खालको हो। यसै निम्ति शुक्रवारको दिन दूधमा बनाएको भांग शिवजीमा चढाउनुपर्दछ र बुधवारको दिन हरिया फल गाईलाई र मङ्गलवारको दिन पूरी र शक्कर राती गाईलाई भोजन भन्दा पहिल्यै खान दिए उत्तम होला। फेरि राहु-केतु स्वभावले नै कष्ट-बाधाका सूचक हुन्। यसको लागि पक्षीहरूलाई अन्न र माछालाई पीठोको स-साना गोली खान दिनु।

कु० नं० १४८५

९ ७ १० ८ ६ ११ ५ १२ २ ४ १ ३

वृश्चिक लग्न हुने व्यक्तिहरूको लागि- धनको सम्वन्धमा बृहस्पति श्रेष्ठ मानिन्छन् र भाग्यको सम्वन्धमा सूर्य, चन्द्र उत्तम हुन् र लाभको सम्वन्धमा बुध श्रेष्ठ हुन्। यसैनिम्ति बृहस्पति जब-जब कर्कमा, सिंहमा, वृषभमा आउँछन् र सूर्य- चन्द्र जब-जब कर्कमा, सिंहमा, कन्यामा, धन, मकर, कुम्भ, मीन, वृषभमा आउँछन् तथा बुध जब-जब कर्क, सिंह, कन्यामा, वृश्चिक, धन, मकर, कुम्भ, वृषभमा आउँछन्, तब-तब ती महीनाहरूमा, वर्षहरूमा धन र भाग्यको उन्नति हुने योग उत्तम बन्दछ।

कु० नं० १४८६

९ ७ १० ८ ६ ११ ५ १२ २ ४ १ ३

# मेष लग्न हुनेहरूको लागि भाग्य-वृद्धिको अमूल्य समय

हाम्रो ज्योतिष शास्त्रको परम्परामा विंशोत्तरी दशाहरूको जुन मान्यता चल्दै आइरहेको छ, त्यो सर्वथा निर्मूल र निस्सार छ र आकाशमार्गी ग्रह-गोचर पञ्चाङ्ग गतिको आधारबाट भाग्यमा राम्रो र नराम्रो फल अकाट्य रूपले आउँदै-जाँदै रहन्छ। यसमा कुनै पनि विवादलाई स्थान छैन। भाग्यको स्वामी बुध र राज्य तथा लाभको स्वामी शनि र धन तथा व्यापारको स्वामी शुक्र- यी ग्रहहरूको गतिमा नै भाग्यको जाति-नजाति समय प्रायः मान्य रहने छ। अतः जुन-जुन वर्षहरूमा गुरू धनराशिमा वा मेष राशिमा अथवा मिथुन राशिमा वा कर्कराशिमा अथवा सिंहराशिमा आउँछन्, तब-तब भाग्यको समय उत्तम रहने छ। अनि वृषभ राशि वा तुला राशिमा अथवा कुम्भ राशिमा आउँछन्, तब-तब समय सामान्य राम्रो रहने छ। फेरि गुरु जुन-जुन वर्षमा मकर राशिमा वा मीन राशिमा या कन्या राशिमा वा वृश्चिक राशिमा आउँछन्, तब-तब भाग्यको समय नजाति रहने छ। यसै प्रकारले शनि जब-जब धन राशिमा वा मकर राशिमा अथवा कुम्भ राशिमा वा कर्कराशि वा वृषभ राशिमा वा मिथुन राशिमा या सिंहराशिमा वा तुला राशिमा आउँछन्, तब-तब भाग्यको समय उन्नतिदायक रहने छ र शनि जब-जब मीन, वृश्चिक, मीन र कन्या इत्यादि

कु० नं० १४८७

| | | | |
|---|---|---|---|
| | २ | १२ | |
| ३ | १ | | ११ |
| | ४ | १० | |
| ५ | ७ | | ९ |
| | ६ | ८ | |

उपरोक्त राशिहरूमा आउँछन्, तब-तब भाग्यको समय न्यून वा दुर्बल रहने छ। यसै प्रकार शुक्र जब-जब कन्या, वृश्चिक र मीन इत्यादि उपरोक्त राशिहरूमा आउँछन्, तब-तब भाग्यको समय न्यून वा कमजोर रहने छ र शेष सबै राशिहरूमा शुक्र जब-जब आउँछ, तब-तब समय उत्तम रहने छ। शरीरको स्वामी तथा आयुको स्वामी मङ्गल मानिन्छ। यो जुन-जुन महीनामा- मीन वा कर्क अथवा वृश्चिक राशिमा आउँछ, तब-तब कष्ट-बाधा रहने छ। तर शेष नौ राशिहरू- मेष, वृषभ, मिथुन, सिंह, कन्या, तुला, धन, मकर र कुम्भमा जब-जब आउँछन्, तब-तब प्रभावमा वृद्धि सफलता रहने छ र जुन-जुन वर्षहरूमा राहु-मिथुन, कन्या, कुम्भ राशिहरूमा आउँछ, अथवा केतु धन वा कुम्भ अथवा कन्या राशिहरूमा आउँछ, अथवा केतु धन वा कुम्भ अथवा कन्या राशिमा आउँछ- तब-तब यी राहु-केतु राम्रो फलदाता रहनन्। अस्तु गुरु, शनि, शुक्र, मङ्गल राहु-केतु- यी सबै ग्रह जब-जब उपरोक्त उत्तम स्थितिमा आउँछन्, तब-तब विशेष भाग्योन्नति रहने छ। अनि जब-जब नजाति स्थितिमा आउँछन्, तब-तब भाग्योदयमा हानि रहने छ। जब-जब कुनै ग्रह सूर्यबाट अस्त हुन्छ, तब-तब त्यो ग्रह दुर्बल मानिन्छ र जन्मको समयमा जन्म-कुण्डलीमा नवग्रह जस्तो-जस्तो राम्रो वा नराम्रो प्रभाव लिएर बसेका हुन्छन्, त्यसैको अन्तर्गत यो पञ्चाङ्ग गोचरका नवग्रह त्यति नै तागतले जाति-नजाति फल दिंदै रहन्छन्। पञ्चाङ्ग गोचरमा जब संगसंगै सबै ग्रह उत्तम आउँछन्, तब त्यो समय बढी उन्नतिदायक रहने छ।



# वृषभ लग्न हुनेहरूको लागि भाग्य-वृद्धिको अमूल्य समय

हाम्रो ज्योतिष शास्त्रको परम्परामा विंशोत्तरी दशाहरूको जुन मान्यता चल्दै आइरहेको छ, त्यो सर्वथा निर्मूल र निस्सार छ र आकाशमार्गी ग्रहगोचर पञ्चाङ्ग गतिको आधारबाट भाग्यमा राम्रो र नराम्रो फल अकाट्य रूपले आउँदै जाँदै रहन्छ। यसमा कुनै पनि विबादलाई स्थान छैन।

कु० नं० १४८८

३ १ ४ २ १२ ५ ११ ६ ८ १० ७ ९

वृषभ लग्न हुने व्यक्तिहरूको भाग्य स्थानको स्वामी र राज्य स्थानको स्वामी शनि हो र लाभ स्थानको स्वामी गुरु हो अनि धनस्थानको स्वामी तथा बुद्धि र सन्तान स्थानको स्वामी बुध हो। यी ग्रहहरूको चाल (गति) मा नै भाग्यको जाति र नजाति समय निर्भर गर्दछ। अतः शनि जुन-जुन वर्षहरूमा मकर, कुम्भ, मीन, वृषभ, मिथुन, कर्क, कन्या, तुला, र वृश्चिक इत्यादि उपरोक्त राशिहरूमा आउँछन्, तब-तब भाग्योन्नति बनिरहने छ र शनि जब-जब मेष वा धन राशिमा आउँछन् तब-तब भाग्यमा नजाति देखिएला। गुरु जब-जब मीन, कर्क, कन्या, वृश्चिक, वृषभ र सिंह राशिमा आउनेछन्, तब-तब भाग्यको समय उत्तम रहला र गुरु जब-जब मेष, तुला, धन राशिमा आउनन्, तब-तब भाग्यमा विपरीतता आउला। बुध जब-जब मकर, कुम्भ, वृषभ, मिथुन, कर्क, सिंह, कन्या, वृश्चिक राशिमा आउने छन्, तब-तब धनको र भाग्यको सफलता

रहने छ। बुध जब-जब मीन, मेष, तुला र धन राशिमा आउने छन्, तब-तब भाग्यमा दुर्बलता देखिने छ। शरीरको स्वामी एवं शत्रु विवाद, झ्याउलाको स्वामी शुक्र हो। यो जुन-जुन महीनाहरूमा मेष, धन र कन्या राशिमा आउला तब-तब कष्ट-बाधा रहला, तर शेष नौ राशिहरू- मकर, कुम्भ, मीन, वृषभ, मिथुन, कर्क, सिंह, तुला, वृश्चिक राशिमा जब-जब आउने छन्, तब-तब सम्मान र प्रभाव बढ्दै रहने छ र राहु जब-जब मिथुन, कर्क, तुला र मीन राशिमा आउनेछन् अथवा केतु जब-जब धन, मीन, कर्क, तुला राशिमा आउने छन्. तब-तब उन्नतिदायक समय रहने छ।

अतः उपरोक्त सबैग्रह जुन-जुन वर्षहरूमा अनुकूल रहने छन् तब-तब भाग्यको सफलताको उत्तम समय रहने छ, अनि यिनै सब ग्रह विपरीत स्थानहरूबाट जब-जब आउनन् तब-तब भाग्यको समय खोटो (नजाति) रहने छ र जन्मको वेलामा जन्म-कुण्डली भित्र जुन-जुन ग्रह जस्तो-जस्तो अर्थात् राम्रो वा नराम्रो प्रभाव लिएर बसेका छन्, ती नवग्रह जुन वेला पञ्चाङ्ग गोचर गतिले राम्रो-नराम्रो प्रभाव लिएर बसेका छन्- ती नवग्रह जुन वेला पञ्चाङ्ग गोचर गतिले राम्रो-नराम्रो आउने छन्, तब आफ्नू जन्मकालीन स्थितिको अन्तरगत राम्रो-नराम्रो फल त्यही अनुपातमा, थोरै-धेरै गर्दै रहन्छन्। अतः जन्मकालीन ग्रहहरूको फल र आकाश-मार्गी ग्रहहरूको फल-जीवनमा दुवै प्रकारले नै घटित भइरहन्छ। तर पञ्चाङ्ग गोचरबाट जब-जब सबै ग्रह प्रायः एउटै समयमा राम्रो आउने छन्, तब-तब विशेष उन्नति प्राप्त भइरहने छ।



# मिथुन राशि हुनेहरूको लागि भाग्य वृद्धिको अमूल्य समय

हाम्रो ज्योतिष शास्त्रको परम्परामा विशोत्तरी दशाहरूको जुन मान्यता चल्दै आइरहेको छ, त्यो सर्वथा निर्मूल र निस्सार छ र आकाशमार्गी ग्रह-गोचर पञ्चाङ्ग गतिको आधारबाट भाग्यमा राम्रो र नराम्रो फल अकाट्य रूपमा आउँदै-जाँदै रहन्छन्। यसमा कुनै पनि विवादलाई स्थान छैन।

कु० नं० १४८९

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०

मिथुन लग्न हुने व्यक्तिहरूको - राज्य र व्यापार आदिका स्वामी गुरु हुन् र लाभ तथा प्रभावका स्वामी मङ्गल हुन् र भाग्य तथा आयुस्थानका स्वामी शनिश्चर हुन्, अनि शरीर तथा सुख, भवन-भूमिका स्वामी बुध हुन्। अतः जुन-जुन वर्षहरूमा गुरु मीन, मेष, मिथुन, कर्क, सिंह, कन्या, तुला र धन राशिमा जब-जब आउँछन्, तब-तब भाग्योन्नति रहने छ र गुरु जुन-जुन वर्षहरूमा मकर, वृषभ, वृश्चिक राशिमा आउँछन्, त्यो-त्यो समय भाग्य दुर्बल रहने छ र शनि जुन-जुन वर्षहरूमा कुम्भ, मीन, मिथुन, सिंह, कन्या, तुला, वृश्चिक र धन इत्यादि उपरोक्त राशिहरूमा जब-जब आउँछन्, तब-तब समय उत्तम रहने छ र जुन-जुन वर्षहरूमा वृषभ, मकर, मेष, कर्क राशिमा आउँछन्, तब-तब समय दुर्बल रहने छ। अनि मङ्गल जुन-जुन महीनामा मीन, मेष,

मिथुन, सिंह, कन्या, तुला र धन इत्यादि उपरोक्त राशिहरूमा आउने छन्, तब-तब समय उत्तम रहने छ, अनि मङ्गल जब-जब वृषभ, कर्क र वृश्चिक राशिमा आउँछन्, तब-तब समय अलि दुर्बल चल्नेछ। अनि बुध जुन-जुन महीनाहरूमा मेष, मिथुन, कर्क, सिंह, कन्या, तुला, धन र कुम्भ इत्यादि उपरोक्त राशिमा जब-जब आउँछन्, तब-तब समय उत्तम रहनेछ, भाग्योदय बनिरहला। अनि बुध जब-जब मीन, वृषभ, वृश्चिक र मकर इत्यादि उपरोक्त राशिहरूमा आउँछन्, तब-तब समय न्यून (कमजोर) रहने छ। अनि राहु-मेष, मिथुन, सिंह, वृश्चिक र मकर इत्यादि राशिमा आउँछ या केतु-मेष, सिंह, वृश्चिक, धन राशिमा आउँछ, तब-तब सफलता मिल्नेछ र प्रभाव वृद्धि हुँदै रहने छ।

अतः उपरोक्त सबै ग्रह जब-जब राम्रो राशिहरूमा संगसंगै आउने छन्, तब-तब नै भाग्योदयको विशेष उत्तम समय रहने छ। जब-जब कहिल्यै कुनै ग्रह सूर्यबाट अस्त हुन्छ, त्यस समय त्यो ग्रह दुर्बल मानिन्छ। फेरि जन्म-कुण्डलीमा जन्मको समयमा जुन-जुन ग्रह जस्तो-जस्तो राम्रो वा नराम्रो स्वभाव लिएर बसेको हुन्छ, त्यसैको अनुसार पञ्चाङ्ग गोचरमा आएका जाति नजाति ग्रह शुभ र अशुभ फल धेरै र थोरै रूपमा अवश्य दिंदै रहन्छन्। अतः जन्मकालीन नवग्रह र पञ्चाङ्ग गोचर नवग्रह - दुवैको फल सम्पूर्ण जीवनमा अवश्य घटित हुन्छ, यो निर्विवाद छ।



# कर्क लग्न हुनेहरूको लागि भाग्य वृद्धिको अमूल्य समय

हाम्रो ज्योतिष शास्त्रको परम्परामा विंशोत्तरी दशाहरूको जुन मान्यता चल्दै आइरहेको छ, त्यो सर्वथा निर्मूल र निस्सार छ र आकाशमार्गी ग्रह-गोचर पञ्चाङ्ग गतिको आधारबाट भाग्यमा राम्रो र नराम्रो फल अकाट्य रूपमा आउँदै जाँदै रहन्छन्। यसमा कुनै पनि विवादलाई स्थान छैन।

कु० नं० १४९०

५ ३ ६ ४ २ ७ १ ८ १० १२ ९ ११

कर्क लग्न हुने व्यक्तिहरूको- भाग्य र मान प्रभाव स्थानको स्वामी गुरू हो तथा राज्य स्थान र बुद्धि स्थानको स्वामी मङ्गल हो। अनि लाभ स्थानको र सुख स्थानको स्वामी शुक्र हो। अतः गुरु जुन-जुन वर्षहरूमा- मीन, मेष, वृषभ, कर्क, कन्या, तुला, वृश्चिक र धन इत्यादि उपरोक्त राशिहरूमा आउने छन्, तब-तब भाग्यको समय उत्तम रहने छ। अनि त्यसको विपरीत गुरु जुन-जुन वर्षहरूमा- मकर, धन, कुम्भ, मिथुन राशिमा आउनेछन्, तब-तब भाग्य दुर्बल रहने छ। अनि मङ्गल जुन-जुन महीनाहरूमा मकर, मीन, मेष, वृषभ, सिंह, कन्या, तुला र वृश्चिक इत्यादि उपरोक्त राशिहरूमा आउने छन्, तब-तब ती महीनाहरूमा भाग्योन्नति रहने छ र यसको विपरीत मङ्गल जब-जब कुम्भ, मिथुन, कर्क र धन राशिमा आउँछन्, तब-तब भाग्य स्थानमा कष्ट-बाधाहरू रहने छन्, र शुक्र जब-जब मीन, मेष, वृषभ, कर्क, सिंह, तुला,

वृश्चिक र मकर इत्यादि उपरोक्त राशिहरूमा आउने छन्, तब-तब ती महीनाहरूमा लाभ र सुख सौभाग्यको प्राप्ति हुनेछ, किन्तु यसको विपरीत शुक्र जब-जब मिथुन, कन्या, धन र कुम्भ राशिमा आउने छन्, त्यस बेला अनेक कष्ट-बाधा आउनन्। अनि शनि जुन-जुन वर्षहरूमा कुम्भ, मेष, मिथुन र धनराशिमा आउने छ, तब-तब त्यो समय गृहस्थी र व्यापारमा अनेक झ्याउलाको रहने छ, तर शेष आठ राशिहरूमा जब-जब शनि आउने छ, तव-तब गृहस्थीमा राम्रो सफलता मिल्नेछ। यसको अतिरिक्त राहु जुन-जुन वर्षहरूमा वृषभ, मिथुन र कन्या राशिमा आउने छ, तब-तब ती वर्षहरूमा अनुकूल समय रहने छ। अनि केतु जुन-जुन वर्षहरूमा वृषभ, कन्या र धन राशिमा आउने छ तब-तब ती वर्षहरूमा प्रसस्त सफलता प्राप्त हुनेछ।

माथि कहिएका सबै ग्रहहरूको अनुकूलता जुन-जुन वर्षहरूमा साथै आउला, तब-तब ती वर्षहरूमा विशेष प्रकारले भाग्योदय रहने छ। तर जुन-जुन महीनाहरूमा कुनै ग्रह सूर्यबाट अस्त हुन्छ भने, ती महीनाहरूको समय दुर्बल मात्रै चलन छ। आफ्नू जन्मको समय जन्म-कुण्डलीमा नवग्रह जस्तो-जस्तो स्वभाव लिएर बसेका हुन्छन्, त्यसैको अन्तरगत जाति - नजाति समयमा पनि, राम्रो-नराम्रोलाई त्यसै अनुपातमा धेरै र थोरै गर्दै रहन्छन्। यो निर्विवाद छ।



# सिंह लग्न हुनेहरूको लागि भाग्य वृद्धिको अमूल्य समय

हाम्रो ज्योतिष शास्त्रको परम्परामा विंशोत्तरी दशाहरूको जुन मान्यता चल्दै आइरहेको छ, त्यो सर्वथा निर्मूल र निस्सार छ र आकाशमार्गी ग्रह-गोचर पञ्चाङ्ग गतिको आधारबाट भाग्यमा राम्रो र नराम्रो फल अकाट्य रूपमा आउँदै- जाँदै रहन्छ। यसमा कुनै पनि विवादलाई स्थान छैन।

कु० नं० १४९१

सिंह लग्न हुने व्यक्तिहरूको- भाग्य स्थान-पति, सुख स्थानको स्वामी मङ्गल हो र राज्य स्थानपति, पराक्रम स्थान-पति शुक्र मानिन्छ र लाभ स्थान-पति वा धनस्थान-पति बुध हो। अतः जब-जब कहिले मङ्गल- मेष, वृष, मिथुन, सिंह, कन्या, तुला, वृश्चिक, धन, मकर र कुम्भ इत्यादि उपरोक्त राशिहरूमा आउने छन्, शुक्र जब-जब मेष, वृषभ, मिथुन, सिंह, कन्या, तुला, वृश्चिक, धन र कुम्भ इत्यादि उपरोक्त राशिहरूमा आउने छन् र राहु जब-जब मिथुन, तुला, मकर राशिमा आउने छन् तथा केतु जुन-जुन वर्षहरूमा तुला, धन र मकर राशिमा आउने छन् अनि माथि लेखिएका सबै ग्रह- लेखिए अनुसारका राशिहरूमा एकै समयमा जम्मा भएर जुन-जुन वर्षहरूमा आउने छन्, तब-तब भाग्योदयको विशेष लाभ र सुखमा सफलता रहने छ र उपरोक्त सबै

ग्रह माथि लेखिएका राशिहरू छाडेर शेष राशिहरूमा जब-जब आउने छन्, तब-तब भाग्यको दुर्बलताको समय चल्नेछ। अनि गुरु जुन-जुन वर्षहरूमा मकर कुम्भ, कर्क, कन्या र मीन राशिमा आउने छन्, तब-तब नजाति फल देखापर्नेछ। अनि शेष सात राशिहरूमा जब-जब गुरु आउने छन्, तब-तब सन्तान पक्षमा उत्तम रहने छ। शनि जुन-जुन वर्षहरूमा मेष, कर्क, मकर, मीन राशिमा आउने छ, ती-ती वर्षहरूमा गृहस्थी र व्यापार दुवैमा कष्ट-बाधा रहला र शेष आठ राशिहरूमा शनि जब-जब आउने छ, तब-तब ती वर्षहरूमा घर-गृहस्थीको सफलता रहने छ। शरीरको स्वामी सूर्य जुन-जुन महीनाहरूमा कर्क, तुला, मकर र मीन राशिमा आउने छन्, तब-तब अनेक बाधा आइलाग्नन्। शेष आठ राशिहरूमा जब-जब सूर्य आउने छ, तब-तब आत्मबल बढ्ने छ र जब-जब कहिले कुनै ग्रह सूर्यबाट अस्त हुनेछ, तब-तब त्यो ग्रह निर्बल मानिने छ। जन्म कुण्डलीमा जन्मको समयमा जसरी-जसरी नवग्रह राम्रो वा नराम्रो स्वभाव लिएर बसेका हुन्छन्, त्यसैको अनुसार पञ्चाङ्ग गोचरका नवग्रह जाति र नजतिको फल त्यही अनुसार कहिले धेरै कहिले थोरै गर्दै रहन्छन्। अनि पञ्चाङ्गमा जब-जब राम्रा ग्रहहरूको गति प्रायः एउटै समयमा आउने छ, तब-तब व्यक्तिलाई विशेष भाग्योन्नतिको समय प्राप्त हुनेछ। यसमा शंका छैन।



# कन्या लग्न हुनेहरूको लागि भाग्य वृद्धिको अमूल्य समय

हाम्रो ज्योतिष शास्त्रको परम्परमा विंशोत्तरी दशाहरूको जुन मान्यता चल्दै आइरहेको छ, त्यो सर्वथा निर्मूल र निस्सार छ र आकाशमार्गी ग्रह-गोचर पञ्चाङ्ग गतिको आधारबाट भाग्यमा राम्रो र नराम्रो फल अकाट्य रूपमा आउँदै जाँदै रहन्छ। यसमा कुनै पनि विवादलाई स्थान छैन।

कु० नं० १४९२

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १

कन्या लग्न हुने व्यक्तिहरूको भाग्य स्थान तथा धन स्थानका स्वामी शुक्र हुन्। यी पञ्चाङ्गमा जब-जब सिंह, कन्या, कुम्भ र मेष इत्यादि उपरोक्त राशिमा आउने छन्, तब-तब भाग्य र धनको तर्फबाट कष्ट-बाधा रहने छ र शेष आठ राशिहरू- वृषभ, मिथुन, कर्क, तुला, वृश्चिक, धन, मकर र मीनमा जब-जब आउने छन्, तब-तब भाग्य र धनको उत्तम सफलता प्राप्त हुनेछ। अनि राज्य स्थानपति एवं देह स्थानपति बुध- जब-जब सिंह, कुम्भ, मीन, मेष इत्यादि उपरोक्त राशिमा आउँछन्, तब-तब उन्नतिमा अनेक बाधा रहने छ र शरीरमा अशान्ति बढ्ने छ। अनि शेष आठ राशिहरू - वृषभ, मिथुन, कर्क, कन्या, तुला, वृश्चिक, धन र मकरमा जब-जब आउने छन्, तब-तब भाग्यको राम्रो उन्नति रहने छ र स्त्री, गृहस्थी एवं व्यापार स्थानपति गुरु हुन्। अतः गुरु जुन-जुन

वर्षहरूमा - सिंह, मकर, कुम्भ र मेष इत्यादि उपरोक्त राशिमा जब-जब आउने छन्, तब-तब गृहस्थीको सुख र व्यापारमा कष्ट-बाधा रहने छ। शेष आठ राशि- मिथुन, कर्क, कन्या, तुला, वृश्चिक, धन, मीन र वृषभमा जब-जब आउने छन्, तब-तब गृहस्थीमा सुख र सफलता एवं लाभ रहने छ। सन्तान स्थानपति एवं शत्रु स्थानपति शनि जुन-जुन वर्षहरूमा मेष, सिंह र कुम्भ राशिमा आउनेछन्, तब-तब बुद्धि र सन्तानमा कष्ट-बाधा रहला, शेष आठ राशिहरू- वृषभ, मिथुन, कर्क, कन्या, तुला, वृश्चिक, धन, मकर र मीन आउने छन् तब मान प्रभाव रहने छ। अनि राहु जुन-जुन वर्षहरूमा - कर्क, वृश्चिक, कुम्भ र मिथुन राशि आउने छ, तब-तब सफलता र प्रभाव बढ्ने छ। शेष आठ राशि - कन्या, तुला, धन, मीन, मेष र मकरमा जब-जब आउने छन्, तब-तब समय केही अपठेरोको रहने छ, अनि केतु जुन-जुन वर्षहरूमा कर्क, वृश्चिक, कुम्भ र धन राशिमा आउने छ, तब-तब ती वर्षहरूमा सफलताको प्रभाव बढ्ने छ। शेष छ राशिहरू - मिथुन, कन्या, तुला, मकर, मीन र मेषमा जब आउँछ अनि अनेक झ्याउला आइलाग्नन् र पराक्रम स्थानपति र आयु स्थानपति मङ्गल- जुन-जुन महीनाहरूमा तुला, कर्क, सिंह, कुम्भ र मेष राशिमा आउने छ, तब-तब कष्ट-बाधा रहला। शेष राशि- वृषभ, मिथुन, कन्या, वृश्चिक, धन, मकर र मीनमा जब-जब आउने छ, तब-तब शक्तिको अनुभव हुनेछ। अनि जब-जब कहिले कुनै ग्रह सूर्यबाट अस्त भएर जान्छ - त्यस समय त्यो ग्रह दुर्बल मानिन्छ। जुन-जुन वर्षहरूमा राम्रा ग्रहहरू एकै साथ आउने छन्, ती वर्षहरूमा बढी उन्नति र सुख सफलता रहने छ।



# तुला लग्न हुनेहरूका लागि भाग्य वृद्धिको अमूल्य समय

हाम्रो ज्योतिष शास्त्रको परम्परामा विंशोत्तरी दशाहरूको जुन मान्यता चल्दै आइरहेको छ, त्यो सर्वथा निर्मूल र निस्सार छ र आकाशमार्गी ग्रहगोचर पञ्चाङ्ग गतिको आधारबाट भाग्यमा राम्रो र नराम्रो फल अकाट्य रूपमा आउँदै जाँदै रहन्छ। यसमा कुनै पनि विवादलाई स्थान छैन।

कु० नं० १४९३

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

तुला लग्न हुने व्यक्तिहरूको भाग्यका स्वामी बुध जब-जब पञ्चाङ्गमा कन्या, मीन र वृषभ राशिमा आउँछन्, तब-तब ती महीनाहरूमा भाग्यमा हानि रहने छ। अनि शेष नौ राशिहरू - मिथुन, कर्क, सिंह, तुला, वृश्चिक, धन, मकर, कुम्भ र मेषमा बुध जब-जब आउने छन्, तब-तब भाग्यको समय केही राम्रो रहने छ र लाभको स्वामी सूर्य- जुन-जुन महीनाहरूमा- कन्या, तुला, मीन, वृषभ राशिमा आउने छन्, तब-तब ती महीनाहरूमा समय दुर्बल रहने छ। अनि शेष आठ राशिहरू - कर्क, सिंह, कन्या, वृश्चिक, धन, मकर, कुम्भ, मीन, मेष र वृषभमा जब-जब सूर्य आउने छन्, तब-तब ती महीनाहरूमा गृहस्थी र धनको पक्ष निकै दुर्बल रहला किन्तु शेष आठ राशिहरू - मिथुन, सिंह, तुला, वृश्चिक, धन, मकर, कुम्भ र मेषमा मङ्गल जब-जब आउने छ, तब-तब गृहस्थीको र धनको

सफलता रहने छ। अनि शनि जुन-जुन वर्षहरूमा- कन्या, मीन, मेष र वृषभ राशिमा आउँछन्, तब-तब ती वर्षहरूमा अशान्ति र सन्तान पक्षमा कष्ट-बाधा रहने छ। शेष आठ राशिहरू - मिथुन, कर्क, सिंह, तुला, वृश्चिक, धन, मकर र कुम्भमा जब-जब शनि आउँछन्, तब-तब वर्षमा सुख र सफलता, सन्तान लाभ होला। गुरु जुन-जुन वर्षहरूमा - वृषभ, कन्या, मकर राशिमा आउने छन्, तब-तब ती वर्षहरूमा प्रभाव शक्ति कमजोर रहने छ र शेष नौ राशिहरू- मिथुन, कर्क, सिंह, तुला, वृश्चिक, धन, कुम्भ, मीन र मेषमा जब गुरु आउने छन्, तब ती वर्षमा मान-प्रभाव बढ्ला र सफलता रहला। शुक्र जुन-जुन महीनामा - वृषभ र कन्या राशिमा आउँछ, तब-तब ती महीनाहरूमा शारीरिक चिन्ता, कष्ट-बाधा रहने छ। शेष दस राशिहरू- मिथुन, कर्क, सिंह, तुला, वृश्चिक, धन, मकर, कुम्भ, मीन र मेषमा जब-जब आउने छ, तब-तब शरीर स्वस्थ र धनको सफलता रहला र राहु जुन-जुन वर्षमा मिथुन, सिंह र मीन राशिमा आउँछ, तब-तब धनागम र प्रभाव बढ्ला। अनि शेष आठ राशिहरू- कर्क, तुला, वृश्चिक, धन, मकर, कुम्भ, मेष र वृषभमा जब-जब आउँछ, तब-तब कष्ट-झ्याउलो आउला। यसै प्रकार केतु जुन-जुन वर्षहरूमा धन, मीन, सिंह राशिमा आउँछ, तब-तब सफलता शक्ति बढ्ने छ। त्यसपछि शेष आठ राशिहरू - कर्क, कन्या, तुला, वृश्चिक, मकर, कुम्भ, मेष र वृषभमा जब-जब केतु आउला तब-तब कष्ट पनि आउने छ। किन्तु जुन-जुन महीनाहरूमा कुनै ग्रह सूर्यबाट अस्त हुन्छ भने त्यस समय त्यो ग्रह न्यून (थोरै) फल दिनेछ।



# वृश्चिक लग्न हुनेहरूका लागि भाग्य वृद्धिको अमूल्य समय

भारतीय ज्योतिष शास्त्रको परम्परामा विंशोत्तरी दशाहरूको जुन मान्यता चल्दै आइरहेको छ, त्यो सर्वथा निर्मूल र निस्सार छ र आकाशमार्गी ग्रह-गोचर पञ्चाङ्ग गतिको आधारबाट भाग्यमा राम्रो र नराम्रो फल अकाट्य रूपमा आउँदै जाँदै रहन्छ। यसमा कुनै पनि विवादलाई स्थान छैन।

कु० नं० १४९४

९ ७ १० ८ ६ ११ ५ १२ २ ४ १ ३

वृश्चिक लग्न हुने व्यक्तिहरूको - राज्य स्थानको स्वामी सूर्य हो। यो पञ्चाङ्गमा जब-जब कहिल्यै तुला वा मिथुन राशिमा आउँछन्, तब-तब ती महीनाहरूमा व्यापारमा, उन्नतिमा बाधा रहला र शेष दस राशिहरू- कर्क, सिंह, कन्या, वृश्चिक, धनु, मकर, कुम्भ, मीन, मेष र वृषभमा जब-जब सूर्य आउँछन् तब-तव उन्नति, सफलता रहने छ। अनि लाभस्थान एवं आयुस्थानको स्वामी बुध हुन्। जब-जब यी तुला, मेष, मीन र मिथुन राशिमा आउने छन्, तब-तब ती महीनाहरूमा आमदानीमा केही बाधा वा अपठेरो रहने छ। अनि शेष आठ राशिहरू- कर्क, सिंह, कन्या, वृश्चिक, धनु, मकर, कुम्भ र वृषभ राशिमा जब-जब आउने छन्, तब-तब धन लाभको सफलता रहने छ। अनि धनु-स्थानपति एवं सन्तान स्थानपति गुरु हुन्। यी जब-जब पञ्चाङ्गमा- तुला, मकर, मेष र मिथुन राशिमा आउने छन्, तब-तब सन्तान तर्फबाट केही कष्ट-बाधा रहने छ र

अन्यान्य शेष आठ राशिहरू- कर्क, सिंह, कन्या, वृश्चिक, धनु, कुम्भ, मीन र वृषभमा गुरु जब-जब आउने छन्, तब-तब ती वर्षहरूमा धन सन्तानको सफलता र सुख-शान्ति रहने छ र पराक्रम-स्थानपति एवं सुख स्थानपति शनि - जब-जब पञ्चाङ्गमा मेष, मिथुन, तुला राशिमा आउने छ, तब-तब ती वर्षहरूमा कष्ट-बाधा अनि दुर्बलता रहने छ। किन्तु शेष नौ राशिहरू - कर्क, सिंह, कन्या, वृश्चिक, धनु, मकर, कुम्भ, मीन र वृषभमा शनि जब-जब आउनन् तब-तब ती वर्षहरूमा सफलता शक्ति र सुख-शान्ति रहने छ। अनि देहाधीश मङ्गल जब-जब तुला, मिथुन र कर्क राशिमा आउँछ, तब-तब शरीरमा अनेक कष्ट रहला र शेष नौ राशिहरू - सिंह, कन्या, वृश्चिक, मकर, कुम्भ, मीन, वृषभ तथा मेषमा जब-जब आउँछन् तब-तब प्रभावयुक्त समय रहने छ। अनि जुन-जुन वर्षहरूमा राहु- कन्या, मकर, मेष र मिथुन राशिमा आउने छ, तब-तब समय उत्तम रहने छ। अनि शेष आठ राशिहरू- सिंह, वृश्चिक, धनु, कुम्भ, वृषभ, कर्क, तुला र मीनमा जब-जब आउला तब-तब ती वर्षहरूमा कष्ट-बाधा रहला। केतु जुन-जुन वर्षहरूमा - कन्या, मकर, मेष र धनुराशिमा आउँने छन्, तब-तब उत्तम शक्तिशाली फल प्राप्त हुनेछ, तर शेष छ राशिहरू- कर्क, सिंह, वृश्चिक, कुम्भ मीन र वृषभमा जब-जब आउने छन्, तब-तब ती वर्षहरूमा केही कष्ट-बाधा रहने छ। तर जुन-जुन महीनामा कुनै ग्रह सूर्यबाट अस्त हुन्छ भने त्यो ग्रह त्यस वेला निकै दुर्बल मानिन्छ। जुन-जुन वर्षहरूमा र महीनाहरूमा राम्रा लाभकारी ग्रह अनेक संख्यामा यौटै स्थानमा आउँछन्, तब-तब ती समयहरूमा बढी सफलता शक्ति रहने छ।



# धनु लग्न हुनेहरूको लागि भाग्य वृद्धिको अमूल्य समय

हाम्रो ज्योतिष शास्त्रको आधारमा विंशोत्तरी दशाहरूको जुन मान्यता चल्दै आइरहेको छ, त्यो सर्वथा निर्मूल र निस्सार छ र आकाशमार्गी ग्रहगोचर पञ्चाङ्ग गतिको आधारबाट भाग्यमा राम्रो र नराम्रो फल अकाट्यरूपमा आउँदै जाँदै रहन्छ। यस विषयमा कुनै पनि विवादलाई स्थान छैन।

कु० नं० १४९५

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

धनु लग्न हुने व्यक्तिहरूको - भाग्य स्थानपति सूर्य हो। यो जुन-जुन महीनाहरूमा - वृश्चिक, तुला, वृषभ र कर्क राशिमा आउने छ, तब-तब ती महीनाहरूमा भाग्यको दुर्बलता रहने छ। किन्तु शेष आठ राशिहरू- सिंह, कन्या, धनु, मकर, कुम्भ, मीन, मेष र मिथुनमा जब-जब सूर्य आउने छ, तब-तब भाग्यको सफलता उत्तम रहला र राज्य स्थानपति एवं ग्रह स्थानपति बुध हो। यो जब-जब पञ्चाङ्गमा वृश्चिक, मीन, वृषभ र कर्क राशिमा आउने छ, तब-तब ती महीनाहरूमा कष्ट-बाधा एवं उन्नतिमा झ्याउलो आइलाग्ला, तर शेष आठ राशिहरू- सिंह, कन्या, तुला, धनु, मकर, कुम्भ, मेष र मिथुनमा जब-जब बुध आउने छ तब-तव ती महीनाहरूमा गृहस्थी र व्यापारको सफलता शक्ति रहने छ। अनि लाभ स्थानपति एवं प्रभाव स्थानपति शुक्र हो। यो जब-जब पञ्चाङ्गमा - वृश्चिक, वृषभ, कर्क, कन्या राशिहरूमा आउने छ, तब-तव ती महीनामा

समय कष्ट-बाधाको रहने छ र यसको विपरीत जब शेष आठ राशिहरू - सिंह, तुला, धनु, मकर, कुम्भ, मीन, मेष र मिथुनमा जब-जब शुक्र आउने छ, तब-तब ती महीनाहरूमा लाभ र प्रभावको शक्ति बर्ता रहने छ। अनि देहस्थानपति एवं सुख स्थानपति गुरु जुन-जुन वर्षहरूमा वृष, मकर, वृश्चिक र कर्क राशिमा आउने छन् तब-तब ती वर्षहरूमा बाधा-कष्ट रहने छ र शेष आठ राशिहरू सिंह, कन्या, तुला, धनु, कुम्भ, मीन, मेष र मिथुनमा जब-जब गुरु आउने छन्, तब-तब सुख सफलता र लाभ रहला। अनि धनस्थान एवं पराक्रम स्थानपति शनि जब-जब पञ्चाङ्गमा वृश्चिक, मेष, वृषभ र कर्क राशिमा आउँछन्, तब-तब ती वर्षहरूमा धनको शक्तिमा दुर्बलता आउने छ, किन्तु शेष आठ राशिहरू - सिंह, कन्या, तुला, धनु, मकर, कुम्भ, मीन र मिथुनमा जब-जब आउने छ, तब-तब धन र भाग्यको सफलता रहने छ। अनि राहु जुन-जुन वर्षहरूमा तुला, कुम्भ, वृषभ, र मिथुन राशिमा आउने छ, तब-तब ती वर्षहरूमा सफलता शक्ति र प्रभाव रहने छ। किन्तु शेष आठ राशिहरूमा - कर्क, कन्या, धनु, मकर, मीन र मेषादिमा जब-जब राहु आउने छ, तब-तब कष्ट-बाधा रहने छ। अनि केतु जुन-जुन वर्षहरूमा तुला, धनु, कुम्भ र वृषभ राशिमा आउने छ, तब-तब ती वर्षहरूमा सफलता शक्ति तथा प्रभाव बढ्दै जानेछ, तर शेष आठ राशिहरूमा - कर्क, कन्या, मकर, मीन, मेष र मिथुनादिमा जब-जब आउने छ, तब-तब अनेक झ्याउला आइलाग्नन्। जुन-जुन समयमा कुनै ग्रह सूर्यबाट अस्त हुन्छ भने त्यो ग्रह दुर्बल मानिन्छ।



# मकर लग्न हुनेहरूको लागि भाग्य वृद्धिको अमूल्य समय

हाम्रो ज्योतिष शास्त्रको आधारमा विंशोत्तरी दशाहरूको जुन मान्यता चल्दै आइरहेको छ, त्यो सर्वथा निर्मूल र निस्सार छ र आकाशमार्गी ग्रह गोचर पञ्चाङ्ग गतिको आधारबाट भाग्यमा राम्रो र नराम्रो फल अकाट्य रूपमा आउँदै जाँदै रहन्छ। यस विषयमा कुनै पनि विवादलाई स्थान छैन।

कु० नं० १४९६

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५

मकर लग्न हुने व्यक्तिहरूको - भाग्य स्थानपति एवं प्रभावस्थानपति बुध जुन-जुन महीनाहरूमा धनु, मीन, मिथुन तथा सिंह राशिमा जब-जब आउने छ, तब-तब भाग्यको समय राम्रो रहने छैन, किन्तु शेष आठ राशिहरू - कन्या, तुला, वृश्चिक, मकर, कुम्भ, मेष, वृष र कर्क राशिमा बुध जब-जब आउने छ, तब-तब भाग्यको सफलता र प्रभाव वृद्धि होला। अनि राज्य स्थानपति एवं सन्तान स्थानपति शुक्र पञ्चाङ्गमा जब-जब कन्या, धनु, मिथुन र सिंह राशिमा आउने छ, तब-तब ती महीनाहरूमा भाग्य तथा सन्तान पक्षमा दुर्बलता रहने छ। किन्तु शेष आठ राशिहरू - तुला, वृश्चिक, मकर, कुम्भ, मीन, मेष, वृषभ र कर्कमा शुक्र जब-जब आउने छ, तब-तब भाग्यको उन्नति र सन्तानको सफलता मिल्दै रहने छ। अनि लाभ स्थानपति एवं सुख स्थानपति मङ्गल जुन-जुन महीनाहरूमा धनु, मिथुन, कर्क र सिंह राशिमा

आउने छ, तब-तब ती महीनाहरूमा धन लाभको र सुख शान्तिको दुर्बलता रहने छ, तर शेष आठ राशिहरू कन्या, तुला, वृश्चिक, मकर, कुम्भ, मीन, मेष र वृषभमा मङ्गल जब-जब पञ्चाङ्गमा आउने छ, तब-तब धनको लाभ र सुख सफलता उत्तम रहने छ। अनि देहस्थानपति एवं धनस्थानपति शनि जुन-जुन वर्षहरूमा धनु, मेष, मिथुन र सिंह राशिमा आउने छ, तब-तब ती वर्षहरूमा धन र स्वास्थ्यको तर्फबाट न्यूनता (कमी) रहने छ, किन्तु शेष आठ राशिहरू- कन्या,तुला, वृश्चिक, मकर, कुम्भ, मीन, वृषभ र कर्कमा जब-जब शनि आउने छ, तब-तब ती वर्षहरूमा धनको सफलता र शरीर स्वास्थ्य राम्रो रहला। अनि पराक्रम स्थानपति तथा व्यय स्थानपति गुरु जुन-जुन वर्षहरूमा धनु, मकर, कुम्भ, मिथुन र सिंह राशिमा आउने छ, तब-तब ती वर्षहरूमा कष्ट, झ्याउलो रहला र शेष सात राशिहरू- कन्या, तुला, वृश्चिक, मीन, मेष, वृषभ र कर्क राशिमा जब-जब गुरु आउने छ, तब-तब हिम्मत र साहस बढ्ने छ। अनि जुन-जुन वर्षहरूमा राहु-वृश्चिक, मीन र मिथुन, राशिहरूमा आउने छ, तब-तब ती वर्षहरूमा सफलता शक्ति र प्रभाव वृद्धि होला। अनि शेष नौ राशिहरू - सिंह, कन्या, वृश्चिक, धनु, कुम्भ, मीन, वृषभादिमा राहु जब-जब आउने छ, तब-तब ती वर्षहरूमा कष्ट-बाधा रहला र केतु जुन-जुन वर्षहरूमा धनु, वृश्चिक र मीन राशिमा आउला, तब-तब ती वर्षहरूमा सफलता शक्ति र प्रभाव बढ्ने छ किन्तु शेष नौ राशिहरू- सिंह, कन्या, वृश्चिक, कुम्भ, मीन, वृषभ र मिथुनमा जब-जब केतु आउला, तब-तब केही कष्ट-झ्याउलो रहला। जब-जब कहिले कुनै ग्रह सूर्यबाट अस्त हुन्छ, तब-तब त्यो ग्रह कमजोर मानिन्छ।



# कुम्भ राशि हुनेहरूका लागि भाग्य वृद्धिको अमूल्य समय

हाम्रो ज्योतिष शास्त्रको आधारमा विंशोत्तरी दशाहरूको जुन मान्यता चल्दै आइरहेको छ, त्यो सर्वथा निर्मूल र निस्सार छ र आकाशमार्गी ग्रह गोचर पञ्चाङ्ग गतिको आधारबाट भाग्यमा राम्रो र नराम्रो फल अकाट्य रूपमा आउँदै जाँदै रहन्छ। यस विषयमा कुनै पनि विवादलाई स्थान छैन।

कु० नं० १४९७

१२ १० १ ११ ९ २ ८ ३ ५ ७ ४ ६

कुम्भ लग्न हुने व्यक्तिहरूको- भाग्य स्थानपति एवं सुख स्थानपति शुक्र जुन-जुन महीनाहरूमा मकर, कर्क र कन्या राशिमा आउने छन्, तब-तब ती महीनाहरूमा भाग्य विपरीत रहने छ। किन्तु जुन-जुन महीनाहरूमा शुक्र शेष नौ राशिहरू - तुला, वृश्चिक, धनु, कुम्भ, मीन, मेष, वृषभ, मिथुन र सिंहमा पञ्चाङ्गमा आउने छन्, तब-तब ती महीनाहरूमा भाग्यको सुख अनुकूल रहने छ। अनि राज्य स्थानपति एवं पराक्रम स्थानपति मङ्गल जुन-जुन महीनामा - कन्या, कर्क, मकर राशिहरूमा आउने छन्, तब-तब भाग्य र उन्नतिको स्थानमा दुर्बलताहरू आउनन्, तर शेष नौ राशिहरू - सिंह, तुला, वृश्चिक, धनु, कुम्भ, मीन, मेष, वृषभ र मिथुनमा मङ्गल जब-जब पञ्चाङ्गमा आउनन्, तब-तब भाग्य र पुरुषार्थ कर्मको सफलता रहने छ। अनि धन स्थानपति एवं लाभ

स्थानपति गुरु - जुन-जुन वर्षहरूमा मकर वा कन्या राशिमा आउनन्, ती वर्षहरूमा, धनको पक्ष न्यून वा दुर्बल रहने छ। अनि गुरु शेष दस राशिहरू - वृश्चिक, धनु, कुम्भ, मीन, मेष, वृषभ, मिथुन र कर्क राशिमा जब-जब पञ्चाङ्गमा आउने छन् तब-तब ती वर्षहरूमा धन लाभको सफलता रहने छ र देहाधीश एवं व्यय स्थानपति शनि जुन-जुन वर्षहरूमा- मकर, मेष र कन्या राशिमा आउने छ, तब-तब ती वर्षहरूमा अनेक झ्याउला आइलाग्नन् र शेष नौ राशिहरू - सिंह, तुला, वृश्चिक, धनु, कुम्भ, मीन, मेष, वृषभ र मिथुनमा शनि जुन-जुन वर्षहरूमा आउने छ, ती वर्षहरूमा शरीर सुख र आत्मविश्वास बलियो रहने छ र प्रसन्नता होला, अनि गृहस्थी र व्यापार स्थानपति सूर्य जुन-जुन महीनाहरूमा तुला, मकर कर्क र कन्या राशिमा आउनन्, तब-तब ती मासहरूमा गृहस्थीमा कष्ट-बाधा रहला, तर शेष आठ राशि- सिंह, वृश्चिक, धनु, कुम्भ, मीन, मेष, वृषभ र मिथुनमा जब-जब सूर्य आउने छन्, तब-तब ती महीनाहरूमा गृहस्थीको सुख सफलता रहने छ। अनि राहु जुन-जुन वर्षहरूमा मेष, मिथुन र कर्क राशिमा आउने छ, तब-तब ती वर्षहरूमा सफलता र शक्ति प्राप्त हुनेछ। अनि शेष नौ राशिहरू - कन्या, वृश्चिक, धनु, कुम्भ, मीन, वृषभ र सिंह राशिमा राहु जब-जब आउने छन्, तब-तब ती वर्षहरूमा केही कष्ट-बाधा रहला। अनि केतु जुन-जुन वर्षहरूमा धनु, मेष र कर्क राशिमा आउने छ, तब-तब ती वर्षहरूमा प्रभाव र सफलताको शक्ति बढ्ने छ। अनि शेष नौ राशिहरू- सिंह, कन्या, वृश्चिक, कुम्भ, मीन, वृषभ र मिथुन राशिहरूमा केतु जब-जब आउने छ, तब-तब ती वर्षहरूमा केही चिन्ता-कष्ट रहने छ। तर कुनै पनि ग्रह जब सूर्यबाट अस्त हुनेछ, त्यस बेला त्यो ग्रह दुर्बल मानिने छ।



# मीन लग्न हुनेहरूको लागि भाग्य वृद्धिको अमूल्य समय

हाम्रो ज्योतिष शास्त्रको परम्परामा विंशोत्तरी दशाहरूको जुन मान्यता चल्दै आइरहेको छ, त्यो सर्वथा निर्मूल र निस्सार छ र आकाशमार्गी ग्रह गोचर पञ्चाङ्ग गतिको आधारबाट भाग्यमा राम्रो र नराम्रो फल अकाट्य रूपमा आउँदै जाँदै रहन्छ। यसमा कुनै पनि विवादलाई स्थान छैन।

कु० नं० १४९८

१ ११
२ १२ १०
३ ९
४ ६ ८
५ ७

मीन लग्न हुने व्यक्तिहरूलाई- राज्य स्थानपति एवं देह स्थानपति गुरु- जुन-जुन वर्षहरूमा कुम्भ, तुला, मकर र सिंह राशिमा आउने छ, तब-तब ती वर्षहरूमा भाग्यको उन्नतिमा अनेक बाधा रहला तथा शरीर अस्वस्थ रहने छ, अनेक झ्याउला आइलाग्नन्, तर शेष सात राशिहरू- वृश्चिक, धनु, मीन, मेष, वृषभ, मिथुन, कर्क र कन्यामा जब-जब गुरु आउने छ, तब-तब ती वर्षहरूमा भाग्यको सफलता र सामाजिक सम्मान प्राप्त हुनेछ। अनि भाग्य स्थानपति एवं धन स्थानपति मङ्गल जुन-जुन महीनाहरूमा कुम्भ, तुला र सिंह राशिमा आउने छ, तब-तब ती महीनाहरूमा भाग्य र धनमा न्यूनता बनिरहने छ। अनि शेष आठ राशिहरू- कन्या, वृश्चिक, धन, मकर, मीन, मेष, वृषभ र मिथुन राशिमा मङ्गल जब-जब आउने छ, तब-तब ती महीनाहरूमा भाग्यको उन्नति हुनेछ। अनि लाभ स्थानपति एवं व्यय स्थानपति शनि जुन-जुन वर्षहरूमा

- कुम्भ, मेष, सिंह, तुला, राशिमा जब-जब आउने छ, तब-तब ती वर्षहरूमा धन लाभको दुर्बलता रहने छ। अनेक झ्याउला आइलाग्नन्, किन्तु शेष आठ राशिहरू- वृश्चिक, धनु, मकर, मीन, वृषभ, मिथुन, कर्क र कन्यामा शनि जब-जब आउँछ, तब-तब ती वर्षहरूमा लाभ र खर्चको राम्रो संचालन रहने छ। अनि भूमि स्थानपति एवं गार्हस्थ्य स्थानपति बुध-जुन-जुन महीनाहरूमा कुम्भ, सिंह, तुला र मीन राशिमा आउने छ, तब-तब ती महीनाहरूमा गृहस्थीको सुखमा बाधा पर्नेछ। अनि शेष आठ राशिहरूमा- कन्या, वृश्चिक, धनु, मकर, मेष, वृषभ, मिथुन र कर्कमा बुध जब-जब आउने छ, तब-तब ती महीनाहरूमा गृहस्थीको उत्तम सुख र व्यापारमा आय होला। अनि पराक्रम स्थानपति एवं आयु स्थानपति शुक्र जुन-जुन महीनाहरूमा कुम्भ, सिंह, कन्या, र तुला राशिमा आउने छ तब-तब ती महीनाहरूमा पुरुषार्थ शक्ति घट्ने छ। अनि शेष आठ राशिहरू - वृश्चिक, धन, मकर, मीन, मेष, वृषभ, मिथुन र कर्कमा जब-जब शुक्र आउने छ तब-तब ती महीनाहरूमा पुरुषार्थ कर्मको राम्रो सफलता रहने छ। अनि राहु जुन-जुन वर्षहरूमा मकर, वृषभ, मिथुन र सिंह राशिमा आउने छ तब-तब ती वर्षमा समय प्रभावशाली रहने छ। अनि राहु शेष छ राशिहरू- कन्या, तुला, धनु, मीन, मेष र कर्कमा जब-जब आउने छ तब-तब ती वर्षमा अनेक झ्याउला आइलाग्नन्। केतु जुन-जुन वर्षहरूमा मकर, वृषभ, धन र सिंह राशिमा आउने छ तब-तब ती वर्षमा समय प्रभावयुक्त राम्रो रहने छ, अनि केतु शेष छ राशिहरू- कन्या, तुला, मीन, मेष, मिथुन र कर्कमा जब-जब आउने छ तब-तब ती वर्षहरूमा अनेक चिन्ता कष्ट-बाधा रहला। तर जुन वेला कुनै ग्रह सूर्यबाट अस्त भएको छ भने त्यस समय त्यो ग्रह न्यून फलदाता रहने छ।



# फलादेशको गहीरो विचार

विज्ञ पाठकगण !

यो वृहद् भृगुसंहिता पद्धतिमा जुन नवग्रहहरूको फलादेश प्रत्येक जन्म कुण्डलीका लागि भिन्न-भिन्न रूपमा र प्रत्येक लग्नहरूमा विस्तारपूर्वक लेखिएको छ। यो फलादेश प्रत्येक व्यक्तिको समस्त जीवनमा आउँदै जाँदै गरिरहने फलादेश हो अर्थात् भाग्यको प्रत्येक सम्बन्धहरूमा, जस्तै- धन, सन्तान, स्त्री, शरीर, भवन, भूमि, विद्या, गृहस्थी, आयु, पराक्रम, भाग्य, धर्म, राज्य, माता-पिता, धन-वैभव, व्यापार, उन्नति, आमदानी, खर्च, स्वास्थ्य, सौन्दर्य, कीर्ति, यश, भोग, सुख-दुःख इत्यादि सबै विषयहरूमा जीवन र भाग्यको प्रकार वा किसिम कति-कति राम्रो र कति-कति नराम्रो रहने छ तथा सफलता र असफलताहरू कुन-कुन किसिमले रहने छन्- यो समस्त जीवनमा प्रयोग हुने मुख्य चित्रण मानिन्छ, किन्तु जन्म कुण्डलीको समय पूर्णरूपेण शुद्ध वा सही छ अथवा छैन। यसको ज्ञान गर्नका लागि यही ग्रन्थको आरम्भमा नै गलत कुण्डलीलाई सही तुल्याउने विधि पनि लेखिएको छ।



# फलादेशको गहीरो विचार

विज्ञ पाठकगण !

यस वृहद् भृगुसंहिता पद्धतिमा जुन नवग्रहहरूको फलादेश- भाग्यको समस्त सम्बन्धहरूमा भिन्न-भिन्न रूपले जाति र नजाति लेखिएको छ। यसको अन्तरगत यो कुरा विशेष रूपले विचार राख्न पर्ने खालको छ कि जुन-जुन ग्रह उत्तम फलदाता, लाभदायक, सुखदायक, उन्नतिदाता, धनदाता, भाग्यदाता, सन्तानदाता, गृहस्थ सुखदाता इत्यादि-इत्यादि लेखिएका छन्। यी उत्तम फल दिने खालका ग्रहहरू मध्ये यदि कुनै पनि ग्रह २९ अंशभन्दा अगाडि र एक अंश भित्र छ भने त्यो ग्रह मृतक अवस्थामा हुनाको कारणले अत्यन्त अल्प स्थितिमा उत्तम फलको दाता मानिन्छ र दुइ अंशदेखि लिएर १० अंश सम्ममा जुन ग्रह रहन्छ, त्यो किशोर अवस्थामा हुनाले पचास प्रतिशत राम्रा फलहरू प्रदान गर्न सक्तछ। अनि एघार अंशदेखि लिएर पचीस अंशसम्म जुन ग्रह बसेको रहन्छ भने त्यो युवा अवस्थामा हुनाले धारा-प्रवाह उत्तम फल प्रदान गर्दै रहने छ।



# फलादेशको गहीरो विचार

त्यसपछि पचीस अंशदेखि लिएर अट्ठाइस अंशसम्म जुन ग्रह रहन्छ, त्यो वृद्ध अवस्थामा हुनाले गर्दा बिस्तार-बिस्तार उत्तम फल बराबर दिंदै रहनेछ, अनि कुनै पनि ग्रह सूर्यबाट अस्त हुनेछ अर्थात् सूर्य जति अंशमा बसेको होला- त्यसको नगीचमा यदि कुनै ग्रह सूर्यबाट चौध अंश अगाडि वा चौध अंश पछाडि छ भने त्यो अस्त हुनाले गर्दा आफ्नो उत्तम फल पूर्णरूपले दिन सक्नैन किन्तु यदि सूर्यको अंशमा एकदम समान रूपले बराबर कुनै ग्रह छ भने त्यो पूर्ण रूपेण अस्त हुनाले गर्दा आफ्नो श्रेष्ठ फल सूक्ष्म रूपले मात्र दिन सक्तछ। अनि यदि कुनै ग्रह बक्री छ भने त्यो ग्रह आफ्नू श्रेष्ठफल केही रोकिएर बिस्तार-बिस्तार प्रदान गर्छ तर राम्रो अवश्य गर्दछ र नजाति ग्रहले उल्टो फल अवश्य गर्दै रहने छ।



# फलादेशको गहीरो विचार

यो नवग्रहहरूको सबै परिस्थिति- जन्मको सन् संवत् भएको पञ्चाँगबाट नै हेर्ने चलन छ। अनि जन्म कुण्डली बनाउने पण्डितले नवग्रहहरूको अंश पनि जन्मकुण्डलीको तल वा अगाडि - पछाडि लेखिदिन्छन्- यस कोष्ठकलाई 'ग्रहस्पष्ट' को नाम दिएर लेखिने चलन छ। यस बाहेक मुख्य कुरा के भने जन्म कुण्डलीको भित्र- भाग्यको कुनै सम्बन्धमा- त्यो धनको वा सन्तानको वा व्यापारको अथवा कुनै पनि विषयको होस्- यदि कुनै पनि विषयमा दुइ-तीन ग्रहहरूको स्तर उत्तम फल दिने खालको आइरहन्छ भने त्यस विषयमा बढी राम्रो फल प्राप्त भइरहने छ। अनि यदि कुनै विषयमा दुइ-तीन ग्रहहरूको स्तर नजाति रूपमा आउँदछ भने त्यस विषयमा धेरै नराम्रो फल प्राप्त भइरहने छ, अनि यदि जाति-नजाति दुवै थरिका ग्रहहरूको स्तर आउँछ भने त्यस विषयमा जाति नजाति दुवै प्रकारका फल प्राप्त भइरहने छन्।



# ईश्वररीय न्यायको प्रत्यक्ष दर्शन
## (भाग्योन्नतिको उत्तम बाटो)

पाठकवर्ग ! ईश्वरको न्याय बुझ्नलाई केही गम्भीर बुद्धिले विचार गर्नु आवश्यक छ, अतएव उदाहरणार्थ यो एउटा विषय छ कि संसारमा जति थरिका वृक्ष छन्, तिनको उत्पत्तिको मूल कारण तीनवटा मानिन्छन्- वृक्षको बीज, पृथ्वीको माटो र जल। अतः विचार गर्नोस् वृक्षभित्र जति थरिका फल, फूल, रस, गन्ध, रङ्ग, काठ आदि वस्तुहरू छन्; के यी सबै वस्तुहरू माटो, जल वा बीजभित्र कुनै पनि प्रकारको यन्त्रहरू वा दूरबीन-हरूले पनि देख्न सकिन्छ ? यदि कुनै पनि प्रकारले यी सबै वस्तुहरूमा यी उपरोक्त पदार्थ देख्न सकिन्न भने- यी सबै पदार्थ कहाँबाट आउँछन् ? र कुन चाहीं कारीगरले लुकेर यी वृक्षहरू बनायो र ठूलो पार्‍यो ? यसको उत्तर यो हो- जुन वृक्षको जस्तो बीज छ उसै अनुसार नै ईश्वरले स्वयं त्यस्तो वृक्ष बनाइदिन्छ। गुप्तरूपले अर्को विषय हो कि गाईलाई सुकेका घाँस-पात खान दिएर पनि गाईले दूध, घृत जस्ता अमृत झैं गुणकारी पदार्थ हामीलाई दिन्छिन्। अनि सर्पलाई केवल दूध नै सदैव पिउन दिए पनि ऊ विष नै प्रदान गर्दछ। यसको कारण पनि यही हो कि गाईमा सत्वगुणको प्रधानता छ, यसै निम्ति भगवानको मायाले सुखेका घाँस-पात पनि रसादिक पदार्थको रूप धारण गर्दछन्, र सर्पको भित्र तमोगुण हुनाले दूध जस्तो निर्मल पदार्थ पनि विषको रूप धारण गर्दछ। अनि गाईको मल-मूत्रको महिमा र उपयोगिता संसार जान्दछ। गाईको दर्शन र पूजनले मानिस लाभ प्राप्त गर्दछन्, तर यो उल्टो कुरा हो- सर्पलाई देखेर, मानिस मार्न र समाउन दगुर्छन्- यसको उत्तर यही हो कि - ईश्वर जस्तोलाई उस्तै छ,किनकि सर्प अर्काको प्राण लिने काम गर्दछ भने गाई अर्कालाई जीवन दिने काम गर्दछिन्। यहाँ गीताको श्लोकको भाव पूर्णरूपेण घटित हुन्छ- "यो यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम्।" यही प्रकार मनुष्यहरूमा तीन थरिका प्राणीहरूको प्राधान्यता मानिन्छ- सत्वगुणी, रजोगुणी र तमोगुणी। अतः तमोगुणी मनुष्य संसारमा सदैव परमार्थको कार्य गर्दछन्, यसै निम्ति ती महात्मा कहिन्छन् र संसार तिनको पूजा गर्दछ। रजोगुणी मनुष्य संसारका स्वार्थ र परमार्थ दुवैको ध्यान राख्दछन्। यसै निम्ति ती व्यवहारी कहिन्छन्। ती द्वारा संसारको कार्यक्रम चल्दै रहन्छ। अनि तमोगुणी मनुष्य केवल आफ्नू स्वार्थको विचार राखेर कार्य गर्दछन्। यसै निम्ति संसार तिनलाई बेइमान, चोर, टापटिपे, डाकू र व्यभिचारी मानेर त्योसित घृणा गर्दछन् र अपयश प्राप्त गर्दछ। अतः यहाँ गीताको यस श्लोकको भाव पूर्ण घटित हुन्छ- "अवश्यमेव भोक्तव्यं कृतं कर्म शुभाशुभम्।" यसै श्लोकको आधारमा

यो कुरा घटित हुन्छ- कि कुनै प्राणी राम्रो काम गर्दागर्दै पनि दुःख भोग्दछ र कुनै प्राणी नजाति काम गर्दागर्दै पनि सुख भोग्दछ। यसको उत्तर यही हो- पूर्व संचित पाप-पुण्यको फल अवश्य भोग्नुपर्दछ र अनेक थरिका उपाय गर्दै रहे पनि पछिल्ला कर्महरूको फलबाट मुक्ति पाइन्न। यो कुरा अवश्य हो कि धर्मको बाटोमा हिड्ने व्यक्तिहरूलाई पहिले कष्ट आइलाग्दछ, तर पछि स्थायी उन्नति हुन्छ, अनि पूर्वसंचित पापहरूको नाश हुँदै रहन्छ। अनि पापको बाटोमा हिंड्ने व्यक्तिहरूलाई पहिले सुख प्रतीत हुन्छ, तर पछि कष्ट भोग्नु पर्दछ र पूर्वसंचित पुण्यको नाश भइरहन्छ। अतः वायु जसरी सर्वत्र व्यापक छ तर आँखाले देख्न सकिन्न। जसरी वायुको स्पर्शले वायुको ज्ञान प्राप्त हुन्छ, त्यसै गरी ईश्वरको अलौकिक कार्यहरूबाट ईश्वरको पत्ता ज्ञानद्वारा बराबर लाग्दै रहन्छ। यसै प्रकरणको अन्तरगत म आफ्नू सम्बन्धमा एउटा लेखक हुनाले यो कुरा भन्न खोजिरहेको छु- मैले बालकैदेखि सत्य बोल्ने अभ्यास प्रारम्भ गरिदिएको थिएँ, त्यसैको परिणाम स्वरूप मलाई ज्योतिष ज्ञानको विकास ईश्वरले आफ्नू कृपाले बक्सिएको हो, किनकि वैश्य जातिको जन्म र पैत्रिक वस्त्रको व्यापारलाई म पनि तेइस वर्षसम्म गर्दै रहें। अतः सत्य बोल्नाले हृदय निर्मल हुन्छ र दैवी सम्बन्धी तत्त्व वस्तुहरूको बोध स्वतः हुन थाल्दछ। यसको अतिरिक्त गीताको यस श्लोकको आधारमा - "अनेक जन्म संसिद्धि, ततो यान्ति परांगतिम्।" मेरो यो मान्यता छ कि- सन् १८५७ को विद्रोहमा भारतीय वीरहरूले अंग्रेजहरूसित विद्रोह गरेर भारत भूमिको स्वतन्त्रताका लागि जीवनको आहुति दिएका थिए तिनै वीरहरूले पुनर्जन्म धारण गरेर कांग्रेसी संगठनको रूपमा अवतरित भएर पुनः अंग्रेजी शासनसित असहयोग संग्राम खूब साहसले गरे र सफलता प्राप्त गरे। मेरो यो विचार छ कि उस समयमा जसको जति बर्ता त्याग र बलिदान थियो, त्यो व्यक्ति आजको शासनकालमा त्यति नै बढी उच्च पदमा पुगेको छ र झाँसीकी रानी लक्ष्मीबाईले पुनर्जन्म पाएर विजयलक्ष्मी पण्डितको रूपमा अवतार धारण गरेकी हुन् र पूर्वसंचित कर्मबलमा आज भारत भूमिको आनन्द भोग्दैछन्। अतः तात्पर्य के हो भने प्रत्येक प्राणीले आफ्नू कर्म बन्धनमा नै भोग भोग्नुपर्दछ। यसै निम्ति गीताको यस श्लोकको आधारमा - "कर्मण्ये वाऽधिकारस्तेमा फलेषु कदाचन।" अतः प्रत्येक प्राणीको यो कर्तव्य हुन आउँछ कि ऊ आफ्नू जीवन सदैव शुभ कर्म गर्दैरहोस्, परिणाम कर्मतिर नहेरोस्, किनकि परिणाम त उपरोक्त आधारहरूबाट स्वतः फलको रूप धारण गरेर प्राणीसित हिडिरहेको हुन्छ। बुद्धिमान व्यक्तिको कर्तव्य हुन आउँछ- ऊ संसारबाट आफ्नू निम्ति जस्तो व्यवहारको इच्छा राख्दछ; त्यस्तै प्रकारको व्यवहार तिनले संसारसित गर्दैरहनु पर्दछ। उत्तम कर्म गर्ने व्यक्तिहरूको लोक र परलोक दुवै सप्रन्छ र आत्मिक शान्ति प्राप्त हुन्छ। यही हो ईश्वरको प्रत्यक्ष न्याय। यस बाहेक म आफ्नू अनुभवले र तुलसीदासजीको अनुभवले

यो कुरा भन्न खोज्दैछु कि सयौं-हजारौं दुर्गुण र पापको जरो हो झूठो बोल्नु र हजारौं उत्तमताको मूल हो सत्य बोल्नु। अतः यस विषयमा तुलसीदासजी भन्दछन्- "नहिं असत्य सम पातक पुंजा, गिरि सम होइकि कोटिक गुंजा। साँच बराबर तप नहीं, झूठ बराबर पाप, जाके हिरदय- साँच है वाके हिरदय आप।" अर्थात् झूठो बोल्नु समान पापहरूको थुप्रो कुनै छैन- जस्तै करोडौं गुज्जा एकत्र पारे पनि कुनै ठूलो पहाडको समान हुन सक्तैन। त्यसै प्रकार करोड़ौं थरिका पुण्य गरिसके पनि पापरूपी पर्वतको समान हुन सक्तैन। अर्को चरणको भाव हो- सत्य बोल्नु,जस्तो कुनै पनि तप छैन र मिथ्या बोल्नुको समान कुनै पनि पाप छैन। जसको हृदयमा सत्य छ, उसको हृदयमा स्वयं ईश्वर निवास गर्दछन्। उपरोक्त कथनको पुष्टीमा यो अर्को हेर्नुहोस्- "तिमि कुपन्थ पग धरिय खगेशा, रह न तेज बल बुधि लवलेसा। सिमिटि-सिमिटि जल भरिय तलावा, जिमि सदगुण सज्जन पहि आवा।" यसै निम्ति सत्मार्गको अनुसरण र ईश्वरको न्यायमा पूर्ण आस्था राखेर जे जति ईश्वरले दिएको छ र इमानदारीको कर्मबाट, भोग्यवस्तुहरू प्राप्त हुँदै रहुन् तिनैलाई सन्तोषपूर्वक ग्रहण गर्दै रहनुपर्दछ र चंचल मनको अनुचित इच्छाहरूको सर्वथा दमन गर्दै रहनुपर्दछ। यो अकाट्य सत्य हो कि ईश्वरको न्यायमा रौं जति पनि फरक छैन। संसारमा प्रत्येक जीवहरूलाई जे जति पनि कष्ट अनुभव हुन्छन्, त्यो तिनको संचित पापको नै परिणाम हो र जति सुख अनुभव हुन्छन्, त्यो तिनको संचित पापको नै परिणाम हो र जतिसुख अनुभव हुन्छन् त्यो तिनको संचित पुण्यहरूको नै परिणाम हो।अतः जन्म-कुण्डली भित्र जुन व्यक्तिको जस्तो राम्रो- नराम्रो फलदाता ग्रह बसेका हुन्छन्, त्यो सबै उसका पाप र पुण्यका संचित फल नै हुन्छन्। अतः कसै गरी पनि जाति र नजाति कर्मका फलबाट जीव कहिल्यै पनि जोगिन सक्तैन। यसै निम्ति सदैव कालको निम्ति, दीर्घकालीन सुख र उत्तम भाग्य प्राप्त गर्नको लागि धर्मयुक्त उत्तम कर्म गर्दै रहनुपर्दछ, जसको परिणाम स्वरूप जीवलाई निःसन्देह उत्तम भाग्य र सुख-शान्ति प्राप्त नभइ छाड्दैन- किनकि ईश्वर, जस्तालाई त्यस्तै छ। यसै निम्ति सच्चा ईमानदारीसित प्रत्येक मनुष्यले खूब परिश्रम गर्दै रहेर लौकिक उन्नतिका कार्यहरू गर्दै रहनुपर्दछ र संसारका जति पनि सुखदाता पदार्थहरू छन्, तिनको प्राप्तिका लागि कहिले पनि कुनै अनुचित उपाय प्रयोग नगर्नु नै कल्याणदायक छ। ईश्वरीय कृपाले जे जति प्राप्त हुन्छ, त्यसैमा परम सन्तोष र सुख मान्नुपर्दछ र तन, मन वा वचनले स्वप्नमा पनि अर्काको अहित गर्नु हुँदैन, किनकि ईश्वरलाई प्रसन्न पार्ने यही नै सर्वोत्तम बाटो हो।

प्रार्थी :

गौरीशंकर 'वसिष्ठ'